॥ श्रीहरिः ॥

2200

श्रीमदाद्यशंकराचार्यविरचित

# विवेक-चूडामणि

( नेपाली-अनुवादसहित )




गीताप्रेस, गोरखपुर

2200

॥ श्रीहरिः ॥

श्रीमदाद्यशंकराचार्यविरचित

# विवेक-चूडामणि

( नेपाली-अनुवादसहित )

त्वमेव माता च पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्वं मम देवदेव॥

गीताप्रेस, गोरखपुर

॥ श्रीहरि: ॥

# निवेदन

भगवान् श्रीशंकराचार्यको ग्रन्थहरुमा 'विवेक-चूडामणि' एक प्रधान ग्रन्थ हो। यो मुमुक्षु पुरुषहरूको लागि बडो उपयोगी रहेको छ। हिन्दीमा यसका केही अनुवाद प्रकाशित भइसकेका छन्, तर तीनको मूल्य ज्यादा रहेको छ। प्रेमी पाठकहरूले सरल मूल्यमा यो ग्रन्थ प्राप्त गर्न सकुन् भन्ने मुख्य उद्देश्यले गीताप्रेसले यसको प्रकाशन गरेको हो। श्रीशंकराचार्यका भगवद्गीता-भाष्य, श्रीविष्णुसहस्रनामको भाष्यका अनुवाद एवं केही उपनिषद्हरूको भाष्य तथा उहाँका केही प्रकरण ग्रन्थहरुको पनि अनुवाद यहाँबाट छापिएका छन्।

आशा छ, प्रेमी पाठक यसबाट धेरै भन्दा धेरै लाभ प्राप्त गर्न सकुन्।

विनीत

**प्रकाशक**



ॐ

# पत्र-पुष्प

जिन सन्तत सद्ज्ञान-सुधा-सुरसरी बहाई।
लेकर तर्क-त्रिशूल वाद-मर्याद मिटाई॥

शम-दम-व्याल कराल भाल ज्ञ-कला छिटकाई।
वर-वैराग्य-विभूति-भूति-भूषण सुखदाई॥

जो सद्घन सुखघन शान्तिघन बोध-व्योम अविकार हैं।
उन शंकर-मौलि-मणीन्द्रपर ये पत्र-पुष्प निःसार हैं॥

—अनुवादक

॥ श्रीहरिः ॥

# विषय-सूची

॥ श्रीहरिः ॥

# विवेक-चूडामणि

*नन्दितानि दिगन्तानि यस्यानन्दाम्बुविन्दुना।*
*पूर्णानन्दं प्रभुं वन्दे स्वानन्दैकस्वरूपिणम्॥*

## मंगलाचरण

**सर्ववेदान्तसिद्धान्तगोचरं तमगोचरम्।**
**गोविन्दं परमानन्दं सद्गुरुं प्रणतोऽस्म्यहम्॥ १॥**

जो अज्ञेय भएर सम्पूर्ण वेदान्तको सिद्धान्त वाक्यद्वारा जान्दछन् ती परमानन्दस्वरूप सद्गुरूदेव श्रीगोविन्दको म प्रणाम गर्दछु।

## ब्रह्मनिष्ठाको महत्त्व

**जन्तूनां नरजन्म दुर्लभमतः पुंस्त्वं ततो विप्रता**
**तस्माद्वैदिकधर्ममार्गपरता विद्वत्त्वमस्मात्परम्।**
**आत्मानात्मविवेचनं स्वनुभवो ब्रह्मात्मना संस्थिति-**
**र्मुक्तिर्नो शतकोटिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते॥ २॥**

जीवमा पहिले मनुष्य (मानिस) को जन्म नै दुर्लभ (कठिन) छ, त्यसमा पनि पुरूषत्त्व र अझ ब्राह्मणत्त्व पाउन मुस्किल छ। ब्राह्मण भएर पनि वैदिक धर्मको अनुगामी (पालना) गर्नु (हुनु) र अझ विद्वान हुन झन् कठिन छ। (यी सबै भएर पनि) आत्मा र अनात्माको विवेक, सम्यक, अनुभव ब्रह्मात्मभावमा स्थित र मुक्ति यो त करोडौँ जन्ममा गरिएको शुभकर्मको पुण्यविना (पुण्य नभै) प्राप्त हुनै सक्दैन।

**दुर्लभं त्रयमेवैतद्देवानुग्रहहेतुकम्।**
**मनुष्यत्वं मुमुक्षुत्वं महापुरुषसंश्रयः॥ ३॥**

भगवत्कृपा नै जसको प्राप्तिको कारण हो त्यो मानव, मुमुक्षत्त्व (मुक्त हुने इच्छा) र ठुला पुरूषको संगत- यी तीन दुर्लभ छ।

**लब्ध्वा कथञ्चिन्नरजन्म दुर्लभं**
**तत्रापि पुंस्त्वं श्रुतिपारदर्शनम्।**
**यः स्वात्ममुक्तौ न यतेत मूढधीः**
**स ह्यात्महा स्वं विनिहन्त्यसद्ग्रहात्॥ ४॥**

कुनै प्रकार यस दुर्लभ मानव जीवन पाएर र त्यसमा पनि श्रुतिको सिद्धान्तको ज्ञान भएको पुरूषलाई पाएर जो मुढबुद्धि (मुर्ख) आफ्नो आत्माको मुक्तिको लागि प्रयत्न(कोशिश) गर्दैन उ निश्चय नै आत्माघाति हो, उ असतमा आस्था राख्नाको कारण आफैंलाई नष्ट गर्दछ।

**इतः को न्वस्ति मूढात्मा यस्तु स्वार्थे प्रमाद्यति।**
**दुर्लभं मानुषं देहं प्राप्य तत्रापि पौरुषम्॥ ५॥**

दुर्लभ मानव शरीर र त्यसमा पनि पुरूषत्त्व पाएर जो स्वार्थ साधनामा प्रमाद(इच्छा) गर्दछ त्यो भन्दा धेरै मुढ (मूर्ख) को होला?

**वदन्तु शास्त्राणि यजन्तु देवान्**
**कुर्वन्तु कर्माणि भजन्तु देवताः।**
**आत्मैक्यबोधेन विना विमुक्ति-**
**र्न सिध्यति ब्रह्मशतान्तरेऽपि॥ ६॥**

हुनसक्छ कसैले शास्त्रको व्याख्या गरून्, देवताको पूजा गरून्, विभिन्न शुभकार्य गरून् अथवा देवतालाई भजुन् (पूज्नु) तर पनि जबसम्म ब्रह्म र आत्माको एकताको बोध हुँदैन त्यस समय सम्म सयौँ ब्रह्म वितनु (परिवर्तन) अर्थात् सय कल्पमा पनि मुक्ति हुन सक्दैन।

**अमृतत्वस्य नाशास्ति वित्तेनेत्येव हि श्रुतिः।**
**ब्रवीति कर्मणो मुक्तेरहेतुत्वं स्फुटं यतः॥ ७॥**

किनकी 'धनबाट अमृतत्त्वको आशा हुँदैन' यो श्रुति 'मुक्तिको लागि कर्म छैन (हुँदैन)' यो कुराको स्पष्ट (बताइएको) छ।

# ज्ञानोपलब्धिको उपाय

**अतो विमुक्त्यै प्रयतेत विद्वान्**
**संन्यस्तबाह्यार्थसुखस्पृहः सन्।**
**सन्तं महान्तं समुपेत्य देशिकं**
**तेनोपदिष्टार्थसमाहितात्मा ॥ ८ ॥**

यसको लागि विद्वान सम्पूर्ण बाह्य भोगको इच्छा छाडेर सन्त शिरोमणि गुरूदेवको शरणमा गई उनले दिएको उपदेशको विषयमा समाहित (लिन-एकचित्त) भएर मुक्तिको लागि प्रयास गर।

**उद्धरेदात्मनात्मानं मग्नं संसारवारिधौ।**
**योगारूढत्वमासाद्य सम्यग्दर्शननिष्ठया॥ ९ ॥**

निरन्तर सत्य वस्तु आत्मादर्शनमा स्थीर राखेर योगारूढ भई संसार समुन्द्रमा डुबेको आफ्नो आत्माको आफैंले उद्धार गर्नु।

**संन्यस्य सर्वकर्माणि भवबन्धविमुक्तये।**
**यत्यतां पण्डितैर्धीरैरात्माभ्यास उपस्थितैः॥ १० ॥**

आत्मा अभ्यासबाट तत्पर भएको धैर्य विद्वानले सम्पूर्ण कर्मलाई त्यागेर भव वन्धनको निवृत्ति (छुटकारा) को लागि प्रयास गर्नुपर्छ।

**चित्तस्य शुद्धये कर्म न तु वस्तूपलब्धये।**
**वस्तुसिद्धिर्विचारेण न किञ्चित् कर्मकोटिभिः॥ ११ ॥**

कर्म चित्तको शुद्धिको लागि लिइन्छ, तत्त्वदृष्टिको लागि होइन। वस्तु सिद्धि त विचारबाट नै हुन्छ, करोडौँ कर्मबाट पनि केहि हुन सक्दैन।

**सम्यग्विचारतः सिद्धा रज्जुतत्त्वावधारणा।**
**भ्रान्त्योदितमहासर्पभयदुःखविनाशिनी ॥ १२ ॥**

धेरै प्रकारको विचार (सभ्य विचार) बाट सिद्ध भएको डोरी तत्त्वको निश्चय भ्रमबाट उत्पन्न भएको सर्प भयरूपी दुःखको नास गर्ने हुन्छ।

**अर्थस्य निश्चयो दृष्टो विचारेण हितोक्तितः।**
**न स्नानेन न दानेन प्राणायामशतेन वा॥ १३॥**

कल्याणकारी उपायद्वारा विचार गर्नाले नै वस्तुमा यथार्थ देखिन्छ। स्नान, दान अथवा करोडौ प्राणायामबाट हुँदैन (होइन)।

## अधिकारीको निरूपण

**अधिकारिणमाशास्ते फलसिद्धिर्विशेषतः।**
**उपाया देशकालाद्याः सन्त्यस्मिन्सहकारिणः॥ १४॥**

विशेषतः अधिकारीलाई नै फल सिद्ध हुन्छ, देश, काल आदि उपाय पनि अवश्य उसका सहायक हुन्छन्।

**अतो विचारः कर्तव्यो जिज्ञासोरात्मवस्तुनः।**
**समासाद्य दयासिन्धुं गुरुं ब्रह्मविदुत्तमम्॥ १५॥**

त्यसकारण ब्रह्मविद्यामा श्रेष्ठ दयासागर गुरूदेवको शरणमा गएर जिज्ञासुले आत्मतत्त्वको विचार गर्नुपर्दछ।

**मेधावी पुरुषो विद्वानूहापोहविचक्षणः।**
**अधिकार्यात्मविद्यायामुक्तलक्षणलक्षितः॥ १६॥**

जो बुद्धिमान छ र तर्क वितर्कमा कुशल छ त्यस्तो लक्ष्य भएको पुरूष नै आत्मा विद्याको अधिकारी हुन्छ।

**विवेकिनो विरक्तस्य शमादिगुणशालिनः।**
**मुमुक्षोरेव हि ब्रह्मजिज्ञासायोग्यता मता॥ १७॥**

जो सदसद्विवेकी, बैराग्यवान, शम-दमादि षट्सम्पत्तियुक्त र मुमुक्ष छ उसैलाई ब्रह्म जिज्ञासाको योग्य मानिन्छ।

## साधन-चतुष्टय (चार)

**साधनान्यत्र चत्वारि कथितानि मनीषिभिः।**
**येषु सत्स्वेव सन्निष्ठा यदभावे न सिद्ध्यति॥ १८॥**

यहाँ मनुष्यका जिज्ञासाका चार साधन बताइएको छ, तिनको (पालना) भएर नै सत्य स्वरूप आत्मामा स्थित (स्थिर) हुन सक्छ, तिनको विना हुन सक्दैन।

**आदौ नित्यानित्यवस्तुविवेकः परिगण्यते।**
**इहामुत्रफलभोगविरागस्तदनन्तरम् ॥ १९ ॥**
**शमादिषट्कसम्पत्तिर्मुमुक्षुत्वमिति स्फुटम्।**

पहिलो साधन नित्या नित्य वस्तु विवेक गनिएको छ, दोस्रो लौकिक तथा परालौकिक सुख भोगमा वैराग्य हुनु हो, तेश्रो शम, दम, उपरति, तितिक्षा, श्रद्धा, समाधान- यी छः सम्पत्ति हुन् र चौथो मुमुक्षता हो।

**ब्रह्म सत्यं जगन्मिथ्येत्येवंरूपो विनिश्चयः॥ २० ॥**
**सोऽयं नित्यानित्यवस्तुविवेकः समुदाहृतः।**

'ब्रह्म सत्य हो र जगत मिथ्या हो' त्यस्तो जो निश्चय छ यहि नित्या नित्य वस्तु विवेक भनिन्छ।

**तद्वैराग्यं जुगुप्सा या दर्शनश्रवणादिभिः॥ २१ ॥**
**देहादिब्रह्मपर्यन्ते ह्यनित्ये भोगवस्तुनि।**

देखेर र सुनेको माध्यमबाट शरीरदेखि ब्रह्मलोकसम्म सम्पूर्ण अनित्य भोग्य पदार्थमा जुन घृणाबुद्धि हुन्छ उहि 'वैराग्य' हो।

**विरज्य विषयव्राताद्दोषदृष्ट्या मुहुर्मुहुः॥ २२ ॥**
**स्वलक्ष्ये नियतावस्था मनसः शम उच्यते।**

पटक पटक दोष दृष्टि गर्नाले विषय समुहबाट विरक्त भएर चित्त आफ्नो लक्ष्यमा स्थिर हुन जानु नै 'शम' हो।

**विषयेभ्यः परावर्त्य स्थापनं स्वस्वगोलके॥ २३ ॥**
**उभयेषामिन्द्रियाणां स दमः परिकीर्तितः।**
**बाह्यानालम्बनं वृत्तेरेषोपरतिरुत्तमा॥ २४ ॥**

कर्मेन्द्रिय र ज्ञानेन्द्रिय दुवैको त्यसका विषयहरूबाट तानेर आ-आफ्नो गोलोकमा स्थिर गर्नु 'दम' भनिन्छ। वृत्तिको बाहिरी विषयको आश्रय नलिनु यही उत्तम 'उपरति' हो।

**सहनं सर्वदुःखानामप्रतीकारपूर्वकम्।**
**चिन्ताविलापरहितं सा तितिक्षा निगद्यते॥ २५॥**

चिन्ता र शोकबाट रहित (हटाएर) भएर प्रतिकार विना गरिएको सबै प्रकारका कष्टको सहन गर्नु 'तितिक्षा' बताइएको छ।

**शास्त्रस्य गुरुवाक्यस्य सत्यबुद्ध्यवधारणम्।**
**सा श्रद्धा कथिता सद्भिर्यया वस्तूपलभ्यते॥ २६॥**

शास्त्र र गुरूवाक्यमा सत्यता (विश्वास) बुद्धि गर्नु यसलाई सज्जनले 'श्रद्धा' भनिन्छ, जसबाट बस्तुको प्राप्ति हुन्छ।

**सर्वदा स्थापनं बुद्धेः शुद्धे ब्रह्मणि सर्वथा।**
**तत्समाधानमित्युक्तं न तु चित्तस्य लालनम्॥ २७॥**

सबै प्रकारले आफ्नो बुद्धिको शुद्ध ब्रह्ममा सदा स्थिर राख्नुलाई 'समाधान' भनिन्छ। चित्तको इच्छा पूर्तिको नाम समाधान होइन।

**अहंकारादिदेहान्तान्बन्धानज्ञानकल्पितान् ।**
**स्वस्वरूपावबोधेन मोक्तुमिच्छा मुमुक्षुता॥ २८॥**

अहंकारदेखी देहसम्म जति अज्ञान कल्पित बन्धन छन्, तिनलाई आफ्नो स्वरूपको ज्ञानद्वारा छाड्नुको इच्छा 'मुमुक्षता' हो।

**मन्दमध्यमरूपापि वैराग्येण शमादिना।**
**प्रसादेन गुरोः सेयं प्रवृद्धा सूयते फलम्॥ २९॥**

त्यो मुमुक्षुता मन्द र मध्यम भयो भने बैराग्य तथा समाधि षट्सम्पत्ति र गुरूकृपाले बढाएर फल उत्पन्न गराउँछ।

**वैराग्यं च मुमुक्षुत्वं तीव्रं यस्य तु विद्यते।**
**तस्मिन्नेवार्थवन्तः स्युः फलवन्तः शमादयः॥ ३०॥**

जुन पुरूषमा वैराग्य मुमुक्षुत्त्व धेरै हुन्छ उसैमा समाधि चरितार्थ र सफल हुन्छ।

**एतयोर्मन्दता यत्र विरक्तत्वमुमुक्षयोः।**
**मरौ सलिलवत्तत्र शमादेर्भासमात्रता॥ ३१॥**

जहाँ वैराग्य र मुमुक्षुत्त्वको कमी छ त्यहाँ समाधिको पनि मरूभूमीमा पानीको भान समान आभासमात्र सम्झनुपर्दछ।

**मोक्षकारणसामग्र्यां भक्तिरेव गरीयसी।**
**स्वस्वरूपानुसन्धानं भक्तिरित्यभिधीयते॥ ३२॥**
**स्वात्मतत्त्वानुसन्धानं भक्तिरित्यपरे जगुः।**

मोक्ष (मुक्ति)को कारणरूप सामग्रीमा भक्ति नै सबैभन्दा ठुलो हो, आफ्नो वास्तविक स्वरूपको अनुसन्धान (खोजी) गर्नु नै 'भक्ति' भनिन्छ। कुनै कुनैले 'स्वात्म-तत्त्वको खोजी नै भक्ति हो' भनि भन्दछन्।

## गुरूपसत्ति( गुरु नजिक ) प्रश्न तरिका

**उक्तसाधनसम्पन्नस्तत्त्वजिज्ञासुरात्मनः ॥ ३३॥**
**उपसीदेद्गुरुं प्राज्ञं यस्माद्बन्धविमोक्षणम्।**

उक्त चार प्रकारका साधनले सम्पन्न आत्मतत्त्वका जिज्ञासु प्राज्ञ गुरू नजिक जानु, जसबाट उसको भवबन्धको निवृत्ति (छुट्नु) हो।

**श्रोत्रियोऽवृजिनोऽकामहतो यो ब्रह्मवित्तमः॥ ३४॥**
**ब्रह्मण्युपरतः शान्तो निरिन्धन इवानलः।**
**अहैतुकदयासिन्धुर्बन्धुरानमतां सताम्॥ ३५॥**
**तमाराध्य गुरुं भक्त्या प्रह्वप्रश्रयसेवनैः।**
**प्रसन्नं तमनुप्राप्य पृच्छेज्ज्ञातव्यमात्मनः॥ ३६॥**

जो श्रोत्रिय छ, निष्पाप छ, कामनाबाट शून्य छ, ब्रह्मवेत्तामा श्रेष्ठ छ, ब्रह्मनिष्ठ छ, इन्धनरहित अग्निसमान शान्त छ, अकारण दयासिन्धु छ र शरणापन्न (शरणमा परेका) सज्जन बन्धु(हितैषि) छ ती गुरूको विति र विनम्र सेवाबाट भक्तिपूर्वक आराधना गरी उनी खुसी भएपछि नजिक गएर आफ्नो जिज्ञासा (ज्ञाताव्य) यस प्रकार सोध्नु-

**स्वामिन्नमस्ते नतलोकबन्धो**
**कारुण्यसिन्धो पतितं भवाब्धौ।**
**मामुद्धरात्मीयकटाक्षदृष्ट्या**
**ऋज्व्यातिकारुण्यसुधाभिवृष्ट्या॥ ३७॥**

हे शरणागतवत्सल, करूणासागर प्रभू। तपाईंलाई नमस्कार छ। संसार सागरमा परेको मलाई तपाईंले सरल तथा करूणामय कृपा दृष्टिबाट उद्धार गर्नुहोस्।

**दुर्वारसंसारदवाग्नितप्तं**
**दोधूयमानं दुरदृष्टवातैः।**
**भीतं प्रपन्नं परिपाहि मृत्योः**
**शरण्यमन्यं यदहं न जाने॥ ३८॥**

जसबाट छुटकारा पाउन धेरै गाह्रो छ, त्यो संसार दावानल (जलनवस्तु) बाट जलेको तथा दुर्भाग्यरूपी बलवान आँधिबाट अत्यन्त हल्लेको (कामेको) र डराएको म शरणागतको तपाईंले मृत्यूबाट रक्षा गर्नुहोस्, किनकी यो समय म अरू कुनै शरण दिनेलाई जान्दिन।

**शान्ता महान्तो निवसन्ति सन्तो**
**वसन्तवल्लोकहितं चरन्तः।**
**तीर्णाः स्वयं भीमभवार्णवं जना-**
**नहेतुनान्यानपि तारयन्तः॥ ३९॥**

ठुलो संसार सागरबाट आफैं उत्तिर्ण भई र अन्य व्यक्तिको पनि विनाकारण नै तार्ने तथा लोकहितको आचरण गर्ने अति शान्त महापुरूष ऋतुराज बसन्तको समान(सरह) बस्नु भएको छ।

**अयं स्वभावः स्वत एव यत्पर-**
**श्रमापनोदप्रवणं महात्मनाम्।**
**सुधांशुरेष स्वयमर्ककर्कश-**
**प्रभाभितप्तामवति क्षितिं किल॥ ४०॥**

महात्माको स्वभाव नै हुन्छ की स्वतः दोश्राको श्रम (दुःख) हटाउने प्रवृत्त हुन्छ। सूर्यको प्रचण्ड तेजले सन्तप्त पृथ्वीलाई चन्द्रदेवले नै शान्त(शितल) पार्नु हुन्छ।

**ब्रह्मानन्दरसानुभूतिकलितैः पूतैः सुशीतैः सितै-**
**र्युष्मद्वाक्कलशोज्झितैः श्रुतिसुखैर्वाक्यामृतैः सेचय।**
**संतप्तं भवतापदावदहनज्वालाभिरेनं प्रभो**
**धन्यास्ते भवदीक्षणक्षणगतेः पात्रीकृताः स्वीकृताः ॥ ४१ ॥**

हे प्रभू! प्रचण्ड संसार दावानलको (डडेलो) ज्वालाले जलेको यो दुःखी शरण पर्न आएकाको तपाईं आफ्नो ब्रह्मानन्दरसानुभवले युक्त परम पुनीत, सुशितल, निर्मल र वाक्‌रूपी स्वर्णकलसबाट निस्केको सुन्न सुखद मिठो वचनले भिजाउनुहोस् (अर्थात् यो जलेकोलाई शान्त पार्नुहोस्)। त्यो धन्य छ जो तपाईंको एकक्षणको करूणामय दृष्टिपथ (देखिएको बाटो) बाट पात्र भएर अपनाउनु भएको छ।

**कथं तरेयं भवसिन्धुमेतं**
**का वा गतिर्मे कतमोऽस्त्युपायः।**
**जाने न किञ्चित्कृपयाव मां भो**
**संसारदुःखक्षतिमातनुष्व ॥ ४२ ॥**

म यो संसार समुन्द्रको कसरी तरूला? मेरो के गति होला? त्यसको के उपाय छ? यो म केहि जान्दिन। प्रभू! कृपया मेरो रक्षा गर्नुहोस् र मेरो संसार दुःख नासको व्यवस्था गर्नुहोस्(मिलाउनु होस्)।

# उपदेश-तरिका( नियम )

**तथा वदन्तं शरणागतं स्वं**
**संसारदावानलतापतप्तम् ।**
**निरीक्ष्य कारुण्यरसार्द्रदृष्ट्या**
**दद्यादभीतिं सहसा महात्मा ॥ ४३ ॥**

यसप्रकार भनेर आफ्नो शरणमा आएको संसारमा सन्तप्त (ज्यादै थाकेको) शिष्यको महात्मा गुरू करूणामयी दृष्टि दिएर धैर्यपूर्वक अभय (डर नभएको) प्रदान गरून्।

**विद्वान्स तस्मा उपसत्तिमीयुषे**
**मुमुक्षवे साधु यथोक्तकारिणे।**
**प्रशान्तचित्ताय शमान्विताय**
**तत्त्वोपदेशं कृपयैव कुर्यात्॥ ४४॥**

शरणागति इच्छा भएका मुमुक्ष आज्ञाकारी, शान्तचित्त, समाधि-संयुक्त साधु शिष्यलाई गुरूकृपा (यसप्रकार) तत्त्वोउपदेश गरून्-

**श्रीगुरुरुवाच**

**मा भैष्ट विद्वंस्तव नास्त्यपायः**
**संसारसिन्धोस्तरणेऽस्त्युपायः ।**
**येनैव याता यतयोऽस्य पारं**
**तमेव मार्गं तव निर्दिशामि॥ ४५॥**

गुरू- हे विद्वान! तिमी नडराउ, तिम्रो नाश हुँदैन। संसार-सागरबाट तर्ने उपाय छ। जुन बाटोबाट यतिजन (इन्द्रियलाई वसमा राख्ने) पार भएका छन् त्यही बाटो म तिमीलाई देखाउछु।

**अस्त्युपायो महान्कश्चित्संसारभयनाशनः।**
**येन तीर्त्वा भवाम्भोधिं परमानन्दमाप्स्यसि॥ ४६॥**

संसाररूपी डरको नाश गर्ने कुनै ठुलो उपाय छ, जसद्वारा तिमीले संसार-सागरलाई पार गरेर परमानन्द प्राप्त गर्दछौ।

**वेदान्तार्थविचारेण जायते ज्ञानमुत्तमम्।**
**तेनात्यन्तिकसंसारदुःखनाशो भवत्यनु॥ ४७॥**

वेदान्त-वाक्यको अर्थको विचार गर्नाले उत्तम ज्ञान हुन्छ। जसद्वारा फेरी संसार-दुःखको आत्यन्तिक (लगातार) नाश भएर जान्छ।

**श्रद्धाभक्तिध्यानयोगान्मुमुक्षो-**
**र्मुक्तेर्हेतून्वक्ति साक्षाच्छ्रुतेर्गीः।**
**यो वा एतेष्वेव तिष्ठत्यमुष्य**
**मोक्षोऽविद्याकल्पिताद्देहबन्धात्॥ ४८॥**

श्रद्धा, भक्ति, ज्ञान र योग यिनलाई भगवतीले श्रुति मुमुक्षुको मुक्तिको लागि साक्षात बाटो बताउनु हुन्छ। जो यिनमा स्थित हुन्छन् उसको अविद्याकल्पित शरीर-बन्धनबाट मोक्ष हुन्छ।

**अज्ञानयोगात्परमात्मनस्तव**
**ह्यनात्मबन्धस्तत एव संसृतिः।**
**तयोर्विवेकोदितबोधवह्नि-**
**रज्ञानकार्यं प्रदहेत्समूलम्॥ ४९॥**

तिमी परमात्माको अनात्मबन्धन अज्ञानको कारण हो र उसैबाट तिम्रो (जन्म मरण) संसार प्राप्त हुन्छ। त्यसकारण त्यसैको(आत्मा-अनात्माको) विवेकद्वारा उत्पन्न बोधरूप अग्नि अज्ञानको कार्यरूप संसारको मूल सहित नास गरिदिन्छ।

## प्रश्न-निरूपण( समाधान )

**शिष्य उवाच**

**कृपया श्रूयतां स्वामिन्प्रश्नोऽयं क्रियते मया।**
**तदुत्तरमहं श्रुत्वा कृतार्थः स्यां भवन्मुखात्॥ ५०॥**

**शिष्य**- हे स्वामी! कृपया सुन्नुहोस् म यो प्रश्न गर्दछु। जसको उत्तर तपाईंको श्रीमुखबाट सुनेर म कृतार्थ हुन्छु।

**को नाम बन्धः कथमेष आगतः**
**कथं प्रतिष्ठास्य कथं विमोक्षः।**
**कोऽसावनात्मा परमः क आत्मा**
**तयोर्विवेकः कथमेतदुच्यताम्॥ ५१॥**

बन्ध के हो? यो कस्तो हुन्छ? यसको स्थिति कस्तो छ? र यसको मोक्ष कसरी मिल्दछ? अनात्मा के हो? परमात्मा कसलाई भनिन्छ? र त्यसको विवेक (पूर्ण ज्ञान) कसरी हुन्छ? कृपया यो सबै भनिदिनुहोस्।

## शिष्य-प्रशंसा

श्रीगुरुरुवाच

**धन्योऽसि कृतकृत्योऽसि पावितं ते कुलं त्वया।**
**यदविद्याबन्धमुक्त्या ब्रह्मीभवितुमिच्छसि॥५२॥**

गुरू- तिमी धन्य हौ, तिम्रो कुल तिमीबाट पवित्र भयो किनकी तिमी अविद्यारूपी बन्धनबाट छुटेर ब्रह्मभाव प्राप्त गर्न चाहन्छौ।

## स्व-प्रयत्नको प्रधानता

**ऋणमोचनकर्तारः पितुः सन्ति सुतादयः।**
**बन्धमोचनकर्ता तु स्वस्मादन्यो न कश्चन॥५३॥**

बावुको ऋण चुक्ता गर्ने (पुरा गर्ने) छोरा पनि हुन्छन् तर भवबन्धनबाट छोडाउने आफूभन्दा बाहेक अरू कोही हुँदैन।

**मस्तकन्यस्तभारादेर्दुःखमन्यैर्निवार्यते।**
**क्षुदादिकृतदुःखं तु विना स्वेन न केनचित्॥५४॥**

[जसरी] शिरको (टाउको) भार दुःख अरूले पनि हटाउन सक्दछन् तर भोक प्यास आदिको दुःख आफू बाहेक अरूले हटाउन सक्दैन्।

**पथ्यमौषधसेवा च क्रियते येन रोगिणा।**
**आरोग्यसिद्धिर्दृष्टास्य नान्यानुष्ठितकर्मणा॥५५॥**

अथवा, जसरी जो रोगी खानेकुरा र औषधीको सेवन गर्दछ उसैलाई रोग निको भएको देखिन्छ, अरू कसैबाट गरिएको कर्मबाट कुनै पनि निरोग (स्वास्थ्य) हुँदैन्।

**वस्तुस्वरूपं स्फुटबोधचक्षुषा**
**स्वेनैव वेद्यं ननु पण्डितेन।**
**चन्द्रस्वरूपं निजचक्षुषैव**
**ज्ञातव्यमन्यैरवगम्यते किम्॥५६॥**

(त्यसरी नै) विवेकी पुरूषको वस्तुको स्वरूप आफ्नै ज्ञानी

आँखाबाट जान्न सकिन्छ (अरूबाट होइन) चन्द्रमाको स्वरूप आफ्नै आँखाले देखिन्छ दोश्राबाट (अरूबाट) के जान्न सकिन्छ?

**अविद्याकामकर्मादिपाशबन्धं विमोचितुम्।**
**कः शक्नुयाद्विनात्मानं कल्पकोटिशतैरपि॥५७॥**

अविद्या, कामना र कर्महरूको जालको बन्धनबाट करोडौ कल्पमा पनि आफु बाहेक अरू कसले खोल्न सक्दछ?

## आत्मज्ञानको महत्त्व

**न योगेन न सांख्येन कर्मणा नो न विद्यया।**
**ब्रह्मात्मैकत्वबोधेन मोक्षः सिद्ध्यति नान्यथा॥५८॥**

मोक्ष न योगद्वारा सिद्ध हुन्छ, न साख्यबाट, न कर्म र विद्याबाट। उ केवल ब्रह्मात्मैक्य-बोध (ब्रह्म र आत्माको एकताको ज्ञान) बाट नै हुन्छ अरू कुनै प्रकारबाट हुँदैन।

**वीणाया रूपसौन्दर्यं तन्त्रीवादनसौष्ठवम्।**
**प्रजारञ्जनमात्रं तन्न साम्राज्याय कल्पते॥५९॥**
**वाग्वैखरी शब्दझरी शास्त्रव्याख्यानकौशलम्।**
**वैदुष्यं विदुषां तद्वद्भुक्तये न तु मुक्तये॥६०॥**

जसरी वीणाको रूप- लावण्य तथा तन्त्री बजाउने सुन्दर ढंगबाट बजाउँदा मनुष्यलाई मनोरञ्जनको कारण हुन्छ, उसलाई कुनै साम्राज्यको प्राप्त हुँदैन त्यस्तै गरी विद्वानको बोलीको कुसलता, शब्दको धारावाहिकता, शास्त्र व्याख्याको कुशलता र विद्धता भोगको कारण हुन सक्छ, मोक्षको होइन।

**अविज्ञाते परे तत्त्वे शास्त्राधीतिस्तु निष्फला।**
**विज्ञातेऽपि परे तत्त्वे शास्त्राधीतिस्तु निष्फला॥६१॥**

परमतत्त्वलाई यदि जानिएको छैन भने शास्त्र अध्ययन निष्फल (परिणाम शून्य) हुन्छ, र यदि परमतत्त्वलाई जानेको छ र पनि शास्त्र अध्ययन निष्फल (अनावश्यक) नै हुन्छ।

**शब्दजालं महारण्यं चित्तभ्रमणकारणम्।**
**अतः प्रयत्नाज्ज्ञातव्यं तत्त्वज्ञात्तत्त्वमात्मनः॥ ६२॥**

शब्दजाल त चित्तलाई भड्काउने एक महान वन हो। यसकारण कुनै पनि तत्त्वज्ञानी महात्माबाट प्रयत्नपूर्वक आत्मतत्त्वलाई जान्नुपर्दछ।

**अज्ञानसर्पदष्टस्य ब्रह्मज्ञानौषधं विना।**
**किमु वेदैश्च शास्त्रैश्च किमु मन्त्रैः किमौषधैः॥ ६३॥**

अज्ञानरूपी सर्पबाट डसेकोलाई ब्रह्मज्ञानरूपी औषधीविना वेदबाट शास्त्रबाट, मन्त्र र औषधीबाट के लाभ?

## अपरोक्षानुभवको (आँखाले नजिकबाट देख्नु) आवश्यकता

**न गच्छति विना पानं व्याधिरौषधशब्दतः।**
**विनापरोक्षानुभवं ब्रह्मशब्दैर्न मुच्यते॥ ६४॥**

औषधी सेवन नगरी केवल औषधी शब्दको उच्चारण गरेर रोग निको हुँदैन, यसरी नै अपरोक्षानुभाव विना केवल ब्रह्म-ब्रह्म भनेर कसैको मुक्ति हुँदैन।

**अकृत्वा दृश्यविलयमज्ञात्वा तत्त्वमात्मनः।**
**बाह्यशब्दैः कुतो मुक्तिरुक्तिमात्रफलैर्नृणाम्॥ ६५॥**

नदेखिएको वस्तुको लोप हुनु र आत्म तत्त्वको बाह्य शब्दबाट जानेर जसको फल केवल उच्चारण मात्रले मनुष्यको मुक्ति कसरी हुन्छ?

**अकृत्वा शत्रुसंहारमगत्वाखिलभूश्रियम्।**
**राजाहमिति शब्दान्नो राजा भवितुमर्हति॥ ६६॥**

नभएको शत्रुलाई नास गर्नु, नभएका पृथ्वीमण्डलको ऐश्वर्य प्राप्त भएको 'म राजा हुँ'- यसरी भनेर कोही पनि राजा हुन सक्दैन।

**आप्तोक्तिं खननं तथोपरिशिलाद्युत्कर्षणं स्वीकृतिं**
**निक्षेपः समपेक्षते न हि बहिः शब्दैस्तु निर्गच्छति।**

**तद्वद् ब्रह्मविदोपदेशमननध्यानादिभिर्लभ्यते**
**मायाकार्यतिरोहितं स्वममलं तत्त्वं न दुर्युक्तिभिः ॥ ६७ ॥**

(पृथ्वीमा गाडिएको धनको प्राप्त गर्नको लागि जसरी) पहिला कुनै विश्वसनिय पुरूषको (मानिस) भनाइ र भूमि खन्नु पर्दछ, माटो ढुंगा आदि हटाउनु तथा (पाएका धनको) प्राप्त वस्तुको लिनु आवश्यक छ। केवल कुराले मात्रै बाहिर आउदैन, त्यस्तै प्रकार सबै मायाको प्रपञ्चले शून्य निर्मल आत्मतत्त्व पनि ब्रह्मवित गुरूको उपदेश तथा त्यसको मनन् र निदिध्यासनबाट नै प्राप्त हुन्छ, थोतो (दाँत नभएको) कुराले मात्रै हुँदैन्।

**तस्मात्सर्वप्रयत्नेन भवबन्धविमुक्तये।**
**स्वैरेव यत्नः कर्तव्यो रोगादाविव पण्डितैः ॥ ६८ ॥**

यसकारण रोग आदि जस्तै भवबन्धनको निवृत्तिको लागि विद्वानले आफ्नो सम्पूर्ण शक्ति लगाएर आफैंले प्रयत्न गर्नुपर्दछ।

## प्रश्न-विचार

**यस्त्वयाद्य कृतः प्रश्नो वरीयाञ्छास्त्रविन्मतः।**
**सूत्रप्रायो निगूढार्थो ज्ञातव्यश्च मुमुक्षुभिः ॥ ६९ ॥**

तिमीले आज जुन प्रश्न गऱ्यौ, शास्त्रज्ञ मानवले त्यसलाई धेरै श्रेष्ठ मान्दछन्। त्यो प्रायः संक्षिप्त(सुत्ररूप) हो र पनि गम्भिर अर्थयुक्त र मुमुक्षुको लागि जान्न योग्य छ।

**शृणुष्वावहितो विद्वन्यन्मया समुदीर्यते।**
**तदेतच्छ्रवणात्सद्यो भवबन्धाद्विमोक्ष्यसे ॥ ७० ॥**

हे विद्वान! म जो भन्दछु सावधान भएर सुन, त्यसलाई सुनेर तिमी चाडै नै भवबन्धनबाट छुटकारा पाउने छौ।

**मोक्षस्य हेतुः प्रथमो निगद्यते**
**वैराग्यमत्यन्तमनित्यवस्तुषु ।**
**ततः शमश्चापि दमस्तितिक्षा**
**न्यासः प्रसक्ताखिलकर्मणां भृशम् ॥ ७१ ॥**

**ततः श्रुतिस्तन्मननं सतत्त्व-**
**ध्यानं चिरं नित्यनिरन्तरं मुनेः।**
**ततोऽविकल्पं परमेत्य विद्वा-**
**निहैव निर्वाणसुखं समृच्छति॥ ७२॥**

मोक्षको प्रथम उद्देश्य अनित्य वस्तुमा अत्यन्त वैराग्य हुनु हो, भनिन्छ, त्यसपछि शम, दम, तितिक्षा र आदि सम्पूर्ण आसक्तियुक्त कर्मलाई सर्वथा (सधै) त्याग्नु हो। त्यसपछि मुनिको श्रवण, मनन र चिरकाल सम्म नित्य निरन्तर आत्मतत्त्वको ध्यान गर्नुपर्दछ। तब त्यो विद्वान परम् निर्विकल्प अवस्थालाई प्राप्त गरेर निर्वाण सुख पाउँछ।

**यद्बोद्धव्यं तवेदानीमात्मानात्मविवेचनम्।**
**तदुच्यते मया सम्यक् श्रुत्वात्मन्यवधारय॥ ७३॥**

जुन आत्माअनात्माविवेक अब तिमीले जान्नुपर्छ त्यो मैले सम्झाउछु (भन्दछु) त्यसलाई तिमीले राम्ररी सुनेर आफ्नो चित्तमा स्थिर गर।



# स्थूल शरीरको वर्णन

**मज्जास्थिमेदःपलरक्तचर्म-**
**त्वगाह्वयैर्धातुभिरेभिरन्वितम् ।**
**पादोरुवक्षोभुजपृष्ठमस्तकै-**
**रङ्गैरुपाङ्गैरुपयुक्तमेतत् ॥ ७४ ॥**
**अहंममेति प्रथितं शरीरं**
**मोहास्पदं स्थूलमितीर्यते बुधैः ।**

मज्जा, अस्थि, मेद, मासु, रगत, छाला र त्वचा यी सात धातुको समुहबाट बनेको तथा गोडा जाङ्ग, छाती, हात पिठ्यू र शिर आदि अगंहरूबाट बनेको 'म र मेरो' रूपमा प्रसिद्ध यो मोहको आश्रयरूप शरीरलाई विद्वानहरूले 'स्थूल शरीर' भन्दछन्।

**नभोनभस्वद्दहनाम्बुभूमयः**
**सूक्ष्माणि भूतानि भवन्ति तानि॥ ७५ ॥**
**परस्परांशैर्मिलितानि भूत्वा**
**स्थूलानि च स्थूलशरीरहेतवः ।**
**मात्रास्तदीया विषया भवन्ति**
**शब्दादयः पञ्च सुखाय भोक्तुः॥ ७६ ॥**

आकाश, वायु, तेज, जल र पृथ्वी यी सूक्ष्म भूत हुन्। यिनीहरूको अंश एकआपसमा मिलेर स्थूल शरीर बन्दछ र यिनैको तन्मात्रामा भोग्ने जीवले भोगरूप सुखको लागि शब्दादी पाँच विषय हुन्छन्।

**य एषु मूढा विषयेषु बद्धा**
**रागोरुपाशेन सुदुर्दमेन।**
**आयान्ति निर्यान्त्यध ऊर्ध्वमुच्चैः**
**स्वकर्मदूतेन जवेन नीताः॥ ७७ ॥**

जुन मूर्ख यी विषयमा रागरूपी सुदृढ एंव विस्तृत बन्धनबाट बाँधिन्छ

ऊ आफ्नो कार्यरूपी दुतद्वारा जोडले प्रेरित भएर कार्यअनुसार विभिन्न (राम्रा नराम्रा) योनीहरूमा जाने आउने (जन्म-मृत्यू) हुन्छ।

## विषय-निन्दा

**शब्दादिभिः पञ्चभिरेव पंच**
**पञ्चत्वमापुः स्वगुणेन बद्धाः।**
**कुरङ्गमातङ्गपतङ्गमीन-**
**भृङ्गा नरः पञ्चभिरञ्चितः किम्॥ ७८॥**

आ-आफ्नो स्वभाव अनुसार शब्दादी पाँच विषयमा आ-आफ्नो गुण अनुसार बाँधिएको मृग, हात्ती, पुतली, माछा र भमरा मृत्यूलाई प्राप्त गर्दछन् फेरी यी पाँच गुणबाट बाँधिएको मनुष्य कसरी बाच्न सक्दछ?

**दोषेण तीव्रो विषयः कृष्णसर्पविषादपि।**
**विषं निहन्ति भोक्तारं द्रष्टारं चक्षुषाप्ययम्॥ ७९॥**

दोषको विषयमा कालो सर्पको विष भन्दा पनि धेरै गति हो। किनकी विष खानेलाई लाग्दछ (मर्दछ) तर विषय आँखाले देखेकाको लागि पनि छाड्दैन।

**विषयाशामहापाशाद्यो विमुक्तः सुदुस्त्यजात्।**
**स एव कल्पते मुक्त्यै नान्यः षट्शास्त्रवेद्यपि॥ ८०॥**

जो विषयको आशारूप बन्धनबाट छुट्छ उही मोक्षको अधिकारी हुन्छ अरू हुँदैनन् चाहे उ छ दर्शनको ज्ञाता नै किन नहोस्।

**आपातवैराग्यवतो मुमुक्षून्**
**भवाब्धिपारं प्रतियातुमुद्यतान्।**
**आशाग्रहो मज्जयतेऽन्तराले**
**विगृह्य कण्ठे विनिवर्त्य वेगात्॥ ८१॥**

संसार सागर पार गर्न उद्धत क्षणिक वैराग्यवाला मुमुक्षको आशारूपी गोही अति वेगले विचमै रोकेर घाँटी समातेर डुवाइदिन्छ।

**विषयाख्यग्रहो येन सुविरक्त्यसिना हतः।**
**स गच्छति भवाम्भोधेः पारं प्रत्यूहवर्जितः॥ ८२॥**

जसले वैराग्यरूपी खड्गद्वारा विषयैषणारूपी गोहीलाई मार्दछ, उही निर्विघ्न संसार समुन्द्र पार गर्न सक्दछ।

**विषमविषयमार्गैर्गच्छतोऽनच्छबुद्धेः**
**प्रतिपदमभियातो मृत्युरप्येष विद्धि।**
**हितसुजनगुरूक्त्या गच्छतः स्वस्य युक्त्या**
**प्रभवति फलसिद्धिः सत्यमित्येव विद्धि॥ ८३॥**

विषयरूपी बाटोमा हिड्ने मलिन बुद्धिवालाको पाइलापाइलामा मृत्यू आउँछ भन्ने जान, र यो पनि ठिक सम्झनु कि हितैषी, सज्जन अथवा गुरूको भनाइअनुसार आफ्नो तरिकाले हिड्ने (काम गर्ने) लाई फल सिद्धि हुन्छ।

**मोक्षस्य काङ्क्षा यदि वै तवास्ति**
**त्यजातिदूराद्विषयान् विषं यथा।**
**पीयूषवत्तोषदयाक्षमार्जव-**
**प्रशान्तिदान्तीर्भज नित्यमादरात्॥ ८४॥**

यदि तिमीलाई मोक्षको इच्छा छ भने विषयलाई विष सरह त्यागी (छाडी) देउ, र सन्तोष, दया, क्षमा, सरलता, सम र दमको अमृत समान नित्य आदर पूर्वक सेवन गर।

## शरीर शक्तिको निन्दा

**अनुक्षणं यत्परिहृत्य कृत्य-**
**मनाद्यविद्याकृतबन्धमोक्षणम्।**
**देहः परार्थोऽयममुष्य पोषणे**
**यः सज्जते स स्वमनेन हन्ति॥ ८५॥**

जो अनादि (पहिलादेखी) अविद्याकृत बन्धन छाड्नको लागि आफ्नो

कर्तव्य त्यागेर(छाडेर) प्रतिक्षण यो भोग्यरूप शरीरको पोषणमा (खानामा) लगाइरहेको छ उसले (आफैंले) आफ्नो घात (कुभलो) गर्दछ।

**शरीरपोषणार्थी सन् य आत्मानं दिदृक्षति।**
**ग्राहं दारुधिया धृत्वा नदीं तर्तुं स इच्छति॥ ८६॥**

जसले शरीर पोषणमा लागेर (रहेर) आत्मतत्त्वलाई देख्न चाहन्छ, उसलाई मानौं काठको बुद्धिजस्तै गोहीलाई समाएर नदि पार गर्न खोज्दछ।

**मोह एव महामृत्युर्मुमुक्षोर्वपुरादिषु।**
**मोहो विनिर्जितो येन स मुक्तिपदमर्हति॥ ८७॥**

शरीरमा मोह राख्नु मुमुक्षुको लागि बढी भारी (ठुलो) मृत्यू हो। जसले मोहलाई जितेको छ उही पदमुक्तिको अधिकारी हुन्छ।

**मोहं जहि महामृत्युं देहदारसुतादिषु।**
**यं जित्वा मुनयो यान्ति तद्विष्णोः परमं पदम्॥ ८८॥**

शरीर, स्त्री र छोराको मोहरूप महामृत्युको छोड जसलाई जितेर मुनिजन भगवान्को त्यो परमपद प्राप्त हुन्छ।

## स्थूल शरीर

**त्वङ्मांसरुधिरस्नायुमेदोमज्जास्थिसंकुलम्।**
**पूर्णं मूत्रपुरीषाभ्यां स्थूलं निन्द्यमिदं वपुः॥ ८९॥**

छाला, मासु, रगत, स्नायु, भेद, मज्जा र अस्थिको समुह तथा मलमुत्रद्वारा भरिएको यो स्थूल शरीर अति निन्दनिय छ।

**पञ्चीकृतेभ्यो भूतेभ्यः स्थूलेभ्यः पूर्वकर्मणा।**
**समुत्पन्नमिदं स्थूलं भोगायतनमात्मनः।**
**अवस्था जागरस्तस्य स्थूलार्थानुभवो यतः॥ ९०॥**

पंचीकृत स्थूल भूतद्वारा पहिलाको कार्यअनुसार उत्पन्न भएको यो शरीर आत्माको स्थूल भोगायातन हो, यसको अवस्था जागृत छ जसमा स्थूल पदार्थको अनुभव हुन्छ।

**बाह्येन्द्रियैः स्थूलपदार्थसेवां**
**स्रक्चन्दनस्त्र्यादिविचित्ररूपाम् ।**
**करोति जीवः स्वयमेतदात्मना**
**तस्मात्प्रशस्तिर्वपुषोऽस्य जागरे॥ ९१ ॥**

यसको तादात्म्यलाई प्राप्त भएर नै जीवमाला, चन्दन तथा स्त्री आदि विभिन्न प्रकारको स्थूल पदार्थको बाह्य इन्द्रियबाट सेवन गर्दछ, यसको लागि जाग्रत अवस्थामा यो स्थूल देहको प्रधानता हो।

**सर्वोऽपि बाह्यसंसारः पुरुषस्य यदाश्रयः।**
**विद्धि देहमिदं स्थूलं गृहवद्गृहमेधिनः॥ ९२ ॥**

जसको आश्रयबाट जीवको सम्पूर्ण बाह्य जगत प्रतित हुन्छ, गृहस्थको घरको समान यो स्थूल शरीरलाई जान।

**स्थूलस्य सम्भवजरामरणानि धर्माः**
**स्थौल्यादयो बहुविधाः शिशुताद्यवस्थाः।**
**वर्णाश्रमादिनियमा बहुधा यमाः स्युः**
**पूजावमानबहुमानमुखा विशेषाः॥ ९३ ॥**

स्थूल शरीरको नै जन्म, रोग, मरण तथा स्थूलता आदि धर्म हो, बालकपन आदि नाना (थरी थरी) का अवस्था हुन, वर्णाश्रमादि विभिन्न किसिमका नियम र यम हो, तथा यसको पूजा, मान, अपमान आदि विशेषता हुन्।

## दस इन्द्रिय

**बुद्धीन्द्रियाणि श्रवणं त्वगक्षि**
**घ्राणं च जिह्वा विषयावबोधनात्।**
**वाक्पाणिपादं गुदमप्युपस्थः**
**कर्मेन्द्रियाणि प्रवणेन कर्मसु॥ ९४॥**

कान, छाला, आँखा, नाक र जिब्रो यी पाँच ज्ञानेन्द्रिय हुन् यी द्वारा विषयको ज्ञान हुन्छ तथा बोली, हात, गोडा, मलद्वार र गुद्वार यी कर्मेन्द्रिय हुन् किनकी यिनको कर्म प्रति झुकाव रहन्छ।

## अन्तःकरण चतुष्टय

**निगद्यतेऽन्तःकरणं मनोधी-**
**रहंकृतिश्चित्तमिति स्ववृत्तिभिः।**
**मनस्तु सङ्कल्पविकल्पनादिभि-**
**र्बुद्धिः पदार्थाध्यवसायधर्मतः ॥ ९५ ॥**
**अत्राभिमानादहमित्यहङ्कृतिः**
**स्वार्थानुसन्धानगुणेन चित्तम् ॥ ९६ ॥**

आफ्नो गुणको कारण अन्त:करण मन, बुद्धि, चित्त र अहंकार(यी चार नामले) भनिएको छ, संकल्प र विकल्पको कारण मन, पदार्थको निश्चय गर्नेको कारण बुद्धि 'अहम्-अहम्' मम यस्तो अभिमान गर्नाले अहंकार र आफ्नो इष्ट चिन्तनको कारण चित्त भनिएको छ।

## पाँच प्राण

**प्राणापानव्यानोदानसमाना भवत्यसौ प्राणः।**
**स्वयमेव वृत्तिभेदाद्विकृतिभेदात्सुवर्णसलिलादिवत् ॥ ९७ ॥**

आफ्नो विकारको कारण सुन र पानी आदिको समान स्वयं प्राण पनि वृत्तिभेद (काम प्रकृति अनुसार)बाट प्राण, अपन, व्यान, उदान र समान यी पाँच नामका हुन्छन्।



# सूक्ष्म शरीर

**वागादिपञ्च श्रवणादिपञ्च**
**प्राणादिपञ्चाभ्रमुखानि पञ्च।**
**बुद्ध्याद्यविद्यापि च कामकर्मणी**
**पुर्यष्टकं सूक्ष्मशरीरमाहुः ॥ ९८ ॥**

बोलिनेसहित पाँच कर्मेन्द्रिय, सुन्ने सहित पाँच ज्ञानेन्द्रिय, प्राणादी पाँच प्राण, आकाशादि पाँच भूत, बुद्धि आदि अन्तः करण चार, अविद्या तथा काम र कर्म यी पुर्यष्टक(भरिएको) अथवा सुक्ष्म शरीर भनिएको छ।

**इदं शरीरं शृणु सूक्ष्मसंज्ञितं**
**लिङ्गं त्वपञ्चीकृतभूतसम्भवम्।**
**सवासनं कर्मफलानुभावकं**
**स्वाज्ञानतोऽनादिरुपाधिरात्मनः ॥ ९९ ॥**

यो सुक्ष्म तथा लिङ्ग शरीर अपंचिकृत भूतबाट उत्पन्न भएको हो, यो वासनायुक्त भएर कर्मफलको अनुभव गर्नेवाला हो। स्वस्वरूपको ज्ञान नभएको कारण आत्मालाई अनादि उपाधि दिइएको छ।

**स्वप्नो भवत्यस्य विभक्त्यवस्था**
**स्वमात्रशेषेण विभाति यत्र।**
**स्वप्ने तु बुद्धिः स्वयमेव जाग्रत्-**
**कालीननानाविधवासनाभिः।**
**कर्त्रादिभावं प्रतिपद्य राजते**
**यत्र स्वयंज्योतिरयं परात्मा ॥ १०० ॥**

स्वप्न यसको अभिव्यक्तिको अवस्था हो। जहाँ यो स्वयं (आफैं) बाचेको अनुभव हुन्छ। स्वप्नमा जहाँ स्वयं प्रकाश परात्मा शुद्ध चेतन नै (भिन्न पदार्थ रूपमा) आभास हुन्छ, बुद्धि जाग्रतकालिन विभिन्न प्रकारको

वासनाले कर्ता आदि भावको प्राप्त भएर आफैं प्रतित (देखिने अनुभव हुने) हुन लाग्दछ।

**धीमात्रकोपाधिरशेषसाक्षी**
**न लिप्यते तत्कृतकर्मलेशैः।**
**यस्मादसङ्गस्तत एव कर्मभि-**
**र्न लिप्यते किञ्चिदुपाधिना कृतैः॥ १०१॥**

बुद्धि जसको उपाधि हो यस्तो उ सर्वसाक्षी बुद्धिबाट गरिएको कर्मबाट थोरै पनि उ टाँसिदैन किनकी उ असंग छ अतः उपाधिकृत कर्मबाट पनि लिप्त (टाँसिन) सक्दैन।

**सर्वव्यापृतिकरणं लिंगमिदं स्याच्चिदात्मनः पुंसः।**
**वास्यादिकमिव तक्ष्णस्तेनैवात्मा भवत्यसङ्गोयम्॥ १०२॥**

यो लिङ्गशरीर चिदात्मा पुरूषको सम्पूर्ण व्यापारको रकम जसप्रकार व्यापारिले असुल गर्दछ। यसकारण आत्मा असंग छ।

**अन्धत्वमन्दत्वपटुत्वधर्माः**
**सौगुण्यवैगुण्यवशाद्धि चक्षुषः।**
**बाधिर्यमूकत्वमुखास्तथैव**
**श्रोत्रादिधर्मा न तु वेत्तुरात्मनः॥ १०३॥**

आँखाको सदोष र निर्दोष भएको कारण प्राप्त हुने अन्धोपन, धमिलोपन अथवा स्पष्ट देख्नु आदि आँखाको धर्म हो, यसरी नै बहिरो, लाटो आदि पनि सुन्नेको (कानको) धर्म हो। सर्वसाक्षी आत्माको होइन।

## प्राणको धर्म

**उच्छ्वासनिःश्वासविजृम्भणक्षुत्-**
**प्रस्पन्दनाद्युत्क्रमणादिकाः क्रियाः।**
**प्राणादिकर्माणि वदन्ति तज्ज्ञाः**
**प्राणस्य धर्मावशनापिपासे॥ १०४॥**

श्वासप्रश्वास, हाई, हाच्छु, काप्नु र चलबलाउनु आदि क्रियाको तत्त्वज्ञ प्राणादिको धर्म बताइएको छ तथा क्षुधा पिपासां पनि प्राणकै धर्म हो।

## अहंकार

**अन्तःकरणमेतेषु चक्षुरादिषु वर्ष्मणि।**
**अहमित्यभिमानेन तिष्ठत्याभासतेजसा॥ १०५॥**

शरीर भित्र यी आँखा आदि इन्द्रियमा चिदाभासको तेजले (प्रकाश) व्याप्त भएको अन्तःकरण 'मै पनाको' अभिमान गरि स्थिर रहन्छ।

**अहङ्कारः स विज्ञेयः कर्ता भोक्ताभिमान्ययम्।**
**सत्त्वादिगुणयोगेन चावस्थात्रयमश्नुते॥ १०६॥**

यसैलाई अहंकार जान्नुपर्दछ। यहि कर्ता, भोक्ता तथा मै पनाको अभिमान गर्दछ र यहि सत्त्व आदि गुणको योगबाट तीन अवस्थाको प्राप्त हुन्छ।

**विषयाणामानुकूल्ये सुखी दुःखी विपर्यये।**
**सुखं दुःखं च तद्धर्मः सदानन्दस्य नात्मनः॥ १०७॥**

विषयको अनुकुलताबाट सुखी र प्रतिकुलताबाट दुःखी हुन्छ। सुख र दुःख यो अहंकारको धर्म हो। नित्यानन्द स्वरूप आत्माको होइन।

## प्रेमको आत्मार्थता

**आत्मार्थत्वेन हि प्रेयान् विषयो न स्वतः प्रियः।**
**स्वत एव हि सर्वेषामात्मा प्रियतमो यतः॥ १०८॥**

विषय स्वतः प्रिय हुँदैन तर आत्माको लागि नै प्रिय हुन्छ, किनकी स्वतः प्रियतम सबैको आत्मा नै हो।

**तत आत्मा सदानन्दो नास्य दुःखं कदाचन।**
**यत्सुषुप्तौ निर्विषय आत्मानन्दोऽनुभूयते।**
**श्रुतिः प्रत्यक्षमैतिह्यमनुमानं च जाग्रति॥ १०९॥**

यसकारण आत्मा सधै आनन्दस्वरूप हो, यसमा दुःख कहिल्यै हुँदैन तब सुषुप्तीमा विषयको अभाव रहेर पनि आत्मानन्दको अनुभव हुन्छ।

यस विषयमा श्रुति प्रत्यक्ष ऐतिहासिक(इतिहास) र अनुमान प्रमाण जागृत छ।

## माया-निरूपण

**अव्यक्तनाम्नी परमेशशक्ति-**
**रनाद्यविद्या त्रिगुणात्मिका परा।**
**कार्यानुमेया सुधियैव माया**
**यया जगत्सर्वमिदं प्रसूयते॥ ११०॥**

जुन अव्यक्त नामावली त्रिगुणात्मिका अनादि अविद्या परमेश्वरको पराशक्ति हो, उही माया हो। जसबाट यो सारा जगत् उत्पन्न भएको छ। बुद्धिमान व्यक्ति यसको कार्यबाट नै अनुमान गर्दछन्।

**सन्नाप्यसन्नाप्युभयात्मिका नो**
**भिन्नाप्यभिन्नाप्युभयात्मिका नो।**
**साङ्गाप्यनङ्गाप्युभयात्मिका नो**
**महाद्भुतानिर्वचनीयरूपा ॥ १११॥**

उ न त सत छ, न असत छ र न उभयरूप नै छ, न भिन्न छन् न अभिन्न छन् न उभयरूप छन न अंगसहित न अंगरहित न उभयात्मिका नै हो। तर अत्यन्त अद्भूत र अनिवर्चनियरूप(जो बताउन सकिदैन)हो।

**शुद्धाद्वयब्रह्मविबोधनाश्या**
**सर्पभ्रमो रज्जुविवेकतो यथा।**
**रजस्तमः सत्त्वमिति प्रसिद्धा**
**गुणास्तदीयाः प्रथितैः स्वकार्यैः॥ ११२॥**

डोरीको ज्ञानबाट सर्प भ्रमको समान उ अद्वितीय शुद्ध ब्रह्मको ज्ञानबाट नै नष्ट हुने हो। आ-आफ्नो प्रसिद्ध कार्यको कारण सत्त्व, रज र तम यी उसका तीन गुण प्रसिद्ध छन्।

## रजोगुण

**विक्षेपशक्ती रजसः क्रियात्मिका**
**यतः प्रवृत्तिः प्रसृता पुराणी।**
**रागादयोऽस्याः प्रभवन्ति नित्यं**
**दुःखादयो ये मनसोविकाराः॥ ११३॥**

कियारूप विक्षेपशक्ति रजोगुणको हो। जसले सनातन कालबाट समस्त किया भएर आउछ र जसबाट रागादि र दुःखादी जो मनको विकार हो सधै उत्पन्न हुन्छ।

**कामः क्रोधो लोभदम्भाद्यसूया-**
**हङ्कारेर्ष्यामत्सराद्यास्तु घोराः।**
**धर्मा एते राजसाः पुम्प्रवृत्ति-**
**र्यस्मादेषा तद्रजो बन्धहेतुः॥ ११४॥**

काम, क्रोध, लोभ, दम्भ, असुया (गुणमा दोष खोज्नु) अभिमान, ईष्या र मत्सर यी डरलाग्दो धर्म रजोगुणकै हो। अतः जसको कारण जीवकर्ममा प्रवृत हुन्छ त्यो रजोगुण नै उसको बन्धनको कारण हुन्छ।

## तमोगुण

**एषावृतिर्नाम तमोगुणस्य**
**शक्तिर्यया वस्त्ववभासतेऽन्यथा।**
**सैषा निदानं पुरुषस्य संसृते-**
**र्विक्षेपशक्तेः प्रसरस्य हेतुः॥ ११५॥**

जसको कारण वस्तुमा केहि-केहि जानकारी हुन लाग्छ उ तमोगुणको आवरणशक्ति हो। यहि पुरूषको (जन्ममरण रूप) संसारको आदि-कारण हो र यही विक्षेप शक्तिको प्रसारको कारण हो।

**प्रज्ञावानपि पण्डितोऽपि चतुरोऽप्यत्यन्तसूक्ष्मार्थदृक्**
**व्यालीढस्तमसा न वेत्ति बहुधा सम्बोधितोऽपि स्फुटम्।**

**भ्रान्त्यारोपितमेव साधु कलयत्यालम्बते तद्गुणान्**
**हन्तासौ प्रबला दुरन्ततमसः शक्तिर्महत्यावृतिः॥ ११६॥**

तमबाट ग्रसित (घेरिएको) पुरूष अति बुद्दीमान, विद्वान, चतुर र शास्त्रको अत्यन्त सुक्ष्म अर्थको देख्ने भएता पनि उ विभिन्न प्रकारले सम्झाएर पनि राम्रोसँग सम्झदैन उ भ्रमबाट आरोपित पदार्थको नै सत्य सम्झन्छ र उनैको गुणमा आश्रीत लिन्छ। अहो! तमोगुणको यो अवस्था आवरणशक्ति बढि बलियो छ।

**अभावना वा विपरीतभावना-**
**सम्भावना विप्रतिपत्तिरस्याः।**
**संसर्गयुक्तं न विमुञ्चति ध्रुवं**
**विक्षेपशक्तिः क्षपयत्यजस्त्रम्॥ ११७॥**

यो आवरण शक्तिको संसर्गले युक्त पुरूषको अभावना, विपरित भावना, असंभावना र विप्रतिपत्ति- यी तमोगुणका शक्तिले छाडदैन् र विक्षेप शक्ति पनि उसलाई निरन्तर डावाडोल र हलचल राख्दछ।*

**अज्ञानमालस्यजडत्वनिद्रा-**
**प्रमादमूढत्वमुखास्तमोगुणाः ।**
**एतैः प्रयुक्तो न हि वेत्ति किञ्चि-**
**न्निद्रालुवत्स्तम्भवदेव तिष्ठति॥ ११८॥**

अज्ञान, आलश्य जडता, निद्रा, प्रमाद, मूढता आदि तमको गुण हो यसमा जोडीएको पुरूष केही पनि सम्झदैन। उ निद्रालु वा स्तम्भ(जडवत) समान रहन्छ।

* 'ब्रह्म छैन' जसबाट यस्तो ज्ञान हुन्छ उसलाई 'अभावना' भनिन्छ। म नै शरिर हुँ- यो 'विपरीतभावना' हो। कुनैबाट हुने आशंका 'असंभावना' हो र हो वा होइन यस किसिमको शंकाको 'विप्रतिपत्ति' भनिन्छ। 'प्रपञ्चको व्यवहार' नै मायाको 'विक्षेपशक्ति' हो।

## सत्त्वगुण

**सत्त्वं विशुद्धं जलवत्तथापि**
**ताभ्यां मिलित्वा सरणाय कल्पते।**
**यत्रात्मबिम्बः प्रतिबिम्बितः सन्**
**प्रकाशयत्यर्क इवाखिलं जडम्॥ ११९॥**

सत्त्वगुण पानी समान शुद्ध छ, तर पनि रज र तम मिलेर उसमा पनि पुरूष प्रवृतिको कारण हुन्छ यसमा प्रतिविम्बित भएर आत्मबिम्ब सूर्यले समान समस्त जड पदार्थलाई प्रकाशित गदर्छ।

**मिश्रस्य सत्त्वस्य भवन्ति धर्मा-**
**स्त्वमानिताद्या नियमा यमाद्याः।**
**श्रद्धा च भक्तिश्च मुमुक्षुता च**
**दैवी च सम्पत्तिरसन्निवृत्तिः॥ १२०॥**

अमानित्व आदि, यम-नियमादि, श्रद्धा, भक्ति, मुमुक्षुता, दैवि-सम्पत्ति तथा असत्को त्याग- यो मिसीएको (रज-तमसँग मिलेको) सत्त्वगुणको धर्म हो।

**विशुद्धसत्त्वस्य गुणाः प्रसादः**
**स्वात्मानुभूतिः परमा प्रशान्तिः।**
**तृप्तिः प्रहर्षः परमात्मनिष्ठा**
**यया सदानन्दरसं समृच्छति॥ १२१॥**

प्रशन्नताऽ आत्मानुभव, परमशान्ति, तृप्ति, आत्यन्तिक आनन्द र परमात्मामा स्थिति यी विशुद्ध सत्य गुणका धर्म हुन् जसबाट मुमुक्षु नित्यानन्दरसको प्राप्त गर्दछ।

## कारण-शरीर

**अव्यक्तमेतत्त्रिगुणैर्निरुक्तं**
**तत्कारणं नाम शरीरमात्मनः।**
**सुषुप्तिरेतस्य विभक्त्यवस्था**
**प्रलीनसर्वेन्द्रियबुद्धिवृत्तिः ॥ १२२॥**

यस प्रकार तीन गुणको निरूपणबाट यो अव्यक्तको वर्णन भयो। यो नै आत्मको कारण शरीर हो। यसको अभिव्यक्तको अवस्था सुषुप्ति हो जसमा बुद्धिको सम्पूर्ण वृत्तिय विलए (मिलेर) भएर जान्छ।

**सर्वप्रकारप्रमितिप्रशान्ति-**
**बींजात्मनावस्थितिरेव बुद्धेः।**
**सुषुप्तिरेतस्य किल प्रतीतिः**
**किञ्चिन्न वेद्मीति जगत्प्रसिद्धेः॥ १२३॥**

जहा सबै प्रकारको ज्ञान शान्त हुन जान्छ र बुद्धिवीज रूपबाट नै स्थिर रहन्छन्, उ सुषुप्ति अवस्था हो, यसको भाव 'मैले केहि जान्दिन' यस्तो लोक प्रसिद्ध उक्तिबाट भएको छ।

## अनात्म-निरूपण

**देहेन्द्रियप्राणमनोऽहमादयः**
**सर्वे विकारा विषयाः सुखादयः।**
**व्योमादिभूतान्यखिलं च विश्व-**
**मव्यक्तपर्यन्तमिदं ह्यनात्मा॥ १२४॥**

शरीर, इन्द्रिय, प्राण, मन र अहंकार आदि सबै विकार सुखका सबै विषय, आकाशका भूत र अव्यक्त रहेको निखिल (भएभरको सबै) विश्व यी सबै अनात्मा हुन्।

**माया मायाकार्यं सर्वं महदादि देहपर्यन्तम्।**
**असदिदमनात्मकं त्वं विद्धि मरुमरीचिकाकल्पम्॥ १२५॥**

माया र महतत्त्वबाट लिएर शरीरसम्म मायाको सम्पूर्ण कार्यको तिमी मरूमरिचि (भ्रमवस देखिने पानी) को समान असत् र अनात्मक जान।

## आत्म-निरूपण

**अथ ते सम्प्रवक्ष्यामि स्वरूपं परमात्मनः।**
**यद्विज्ञाय नरो बन्धान्मुक्तः कैवल्यमश्नुते॥ १२६॥**

अब म तिमीलाई परमात्माको स्वरूप बताउँछु जसलाई जानेर मनुष्य बन्धनबाट छुटेर कैवल्यपद प्राप्त गर्दछ।

**अस्ति कश्चित् स्वयं नित्यमहंप्रत्ययलम्बनः।**
**अवस्थात्रयसाक्षी सन्पञ्चकोशविलक्षणः॥ १२७॥**

अहं प्रत्ययको आधार कुनै स्वयं नित्य पदार्थ हो जुन तिनै अवस्थामा साक्षी भएर पञ्चकोशातित हुन्छ।

**यो विजानाति सकलं जाग्रत्स्वप्नसुषुप्तिषु।**
**बुद्धितद्वृत्तिसद्भावमभावमहमित्ययम् ॥ १२८॥**

जो जागृत स्वप्न र सुषुप्ती तिनै अवस्थामा बुद्धि र उसको वृत्तिको हुनु र नभएको 'अहंभाव'बाट स्थित् भएको जानिन्छ।

**यः पश्यति स्वयं सर्वं यं न पश्यति कश्चन।**
**यश्चेतयति बुद्ध्यादिं न तु यं चेतयत्ययम्॥ १२९॥**

जसले स्वयं सबैलाई देख्दछ जसलाई (उसलाई) कसैले देख्दैन, जो बुद्धि आदिको प्रकाशित गर्दछ तर जसबाट बुद्धि आदि प्रकाशित गर्न सक्दैन।

**येन विश्वमिदं व्याप्तं यन्न व्याप्नोति किञ्चन।**
**आभारूपमिदं सर्वं यं भान्तमनुभात्ययम्॥ १३०॥**

जो सम्पूर्ण विश्वमा छरिएर रहेको छ, जसलाई कसैले व्याप्त ( प्रसिद्ध)पाउन सक्दैन तथा जसलाई भासिने (गाडिने) यो आभासरूप सारा जगत् भासित भइरहेको छ।

**यस्य सन्निधिमात्रेण देहेन्द्रियमनोधियः।**
**विषयेषु स्वकीयेषु वर्तन्ते प्रेरिता इव॥ १३१॥**

जससँग नजिकबाट मात्र शरीर, इन्द्रिय, मन र बुद्धि प्रेरित भएको छ उ आ-आफ्नो विषयमा बताउछ।

**अहङ्कारादिदेहान्ता विषयाश्च सुखादयः।**
**वेद्यन्ते घटवद्येन नित्यबोधस्वरूपिणा॥ १३२॥**

अहंकार देखी लिएर शरीरसम्मको सुख आदि समस्त विषय जुन नित्य ज्ञान स्वरूपद्वारा घडा जस्तो जानिन्छ।

**एषोऽन्तरात्मा पुरुषः पुराणो**
**निरन्तराखण्डसुखानुभूतिः ।**
**सदैकरूपः प्रतिबोधमात्रो**
**येनेषिता वागसवश्चरन्ति॥ १३३॥**

यहि नित्य अखण्डानन्दानुभवरूप अन्तरात्मा पुराण पुरूष हो, जो सधै एकरूप र बोधमात्र हो तथा जसको प्रेरणाले बोली समेत छ इन्द्रियहरू र प्राण चलेका छन्।

**अत्रैव सत्त्वात्मनि धीगुहाया-**
**मव्याकृताकाश उरुप्रकाशः।**
**आकाश उच्चै रविवत्प्रकाशते**
**स्वतेजसा विश्वमिदं प्रकाशयन्॥ १३४॥**

यो सत्त्वआत्मा अर्थात बुद्धिरूप गुहामा (छोपीएको) स्थित अव्यक्ताकासको भित्र एउटा परम प्रकाशमय आकाश सूर्यको समान आफ्नो तेजले यो सम्पूर्ण जगतको प्रकाशित गरेको छ। बढी तिव्रताले प्रकाशमान भइरहेको छ।

**ज्ञाता मनोऽहङ्कृतिविक्रियाणां**
**देहेन्द्रियप्राणकृतक्रियाणाम् ।**
**अयोऽग्निवत्ताननुवर्तमानो**
**न चेष्टते नो विकरोति किञ्चन॥ १३५॥**

उ मन र अहंकार रूप विकारको तथा शरीर, इन्द्रिय र प्राणको क्रियाको ज्ञाता हो तथा तताइएको फलामको पिण्डसमान उसको अनुवर्तन (सर्मथन) गर्दछ र पनि न कुनै चेष्टा गर्दछ र न विकारको प्राप्त हुन्छ।

**न जायते नो म्रियते न वर्धते**
**न क्षीयते नो विकरोति नित्यः।**

**विलीयमानेऽपि वपुष्यमुष्मिन्**
**न लीयते कुम्भ इवाम्बरं स्वयम्॥ १३६॥**

उ न जन्मन्छ, न मर्छ, न बढ्छ न घट्छ र न विकारको प्राप्त हुन्छ। उ नित्य हो र यो शरीरको विलय भएर पनि घडा टुटेर पनि घटाकाश समान हराउदैन (नासिदैन)।

**प्रकृतिविकृतिभिन्नः शुद्धबोधस्वभावः**
**सदसदिदमशेषं भासयन्निर्विशेषः।**
**विलसति परमात्मा जाग्रदादिष्ववस्था-**
**स्वहमहमिति साक्षात् साक्षिरूपेण बुद्धेः॥ १३७॥**

प्रकृति र उसको विकारदेखी भिन्न शुद्ध ज्ञानस्वरूप, त्यो निर्विशेष (परमात्मा) सत् असत् सबैको प्रकाशित गरेर पनि जाग्रत आदि अवस्थामा अहंभावबाट स्फुरित भएर बुद्धिको साक्षीरूपबाट साक्षात् बसेको हुन्छ।

**नियमितमनसामुं त्वं स्वमात्मानमात्म-**
**न्ययमहमिति साक्षाद्विद्धि बुद्धिप्रसादात्।**
**जनिमरणतरङ्गापारसंसारसिन्धुं**
**प्रतर भव कृतार्थो ब्रह्मरूपेण संस्थः॥ १३८॥**

तिमी यस आत्माको संयत चित्तभएर बुद्धिको प्रसन्न भएर यो 'मै हुँ' यस्तो आफ्नो अन्तकरणमा साक्षात अनुभव गर, र (यसप्रकार) जन्ममरणरूपी तरंगवाला यो अपार संसार सागरको पार गरेर तथा ब्रह्मरूपमा स्थित भएर कृतार्थ हुन जान्छ।

## अध्यास( झुटो ज्ञान वा कल्पना )

**अत्रानात्मन्यहमिति मतिर्बन्ध एषोऽस्य पुंसः**
**प्राप्तोऽज्ञानाज्जननमरणक्लेशसम्पातहेतुः ।**
**येनैवायं वपुरिदमसत्सत्यमित्यात्मबुद्ध्या**
**पुष्यत्युक्षत्यवति विषयैस्तन्तुभिः कोशकृद्वत्॥ १३९॥**

पुरूषको अनात्म वस्तुमा 'अहम्' यस आत्मबुद्धिको हुनु नै जन्ममरणरूपी क्लेशको (दु:खको) प्राप्त हुने बन्धन हो। जसको कारण यो जीव यो असत् शरीरको सत्य सम्झेर यसमा आत्माबुद्धि हुन जानाले तन्तुको रेशमको किरा समान यसका विषयीद्वारा पोषण, मार्जन र संरक्षण गरिरहन्छ।

**अतस्मिंस्तद्बुद्धिः प्रभवति विमूढस्य तमसा**
**विवेकाभावाद्वै स्फुरति भुजगे रज्जुधिषणा।**
**ततोऽनर्थव्रातो निपतति समादातुरधिक-**
**स्ततो योऽसद्ग्राहः स हि भवति बन्धःशृणु सखे॥ १४०॥**

मूर्ख पुरूष तमोगुणको कारण नै अरूमा अरू बुद्धि हुन्छ, विवेक नभएको हुँदा डोरीमा सर्प बुद्धि हुन्छ। यस्तो बुद्धि भएकाको नै विभिन्न प्रकारका अनर्थले घेरेको हुन्छ। अत: हे मित्र! सुन यो जो असताग्राह (असतलाई सत्य मान्ने) हो उही बन्धन हो।

**अखण्डनित्याद्वयबोधशक्त्या**
**स्फुरन्तमात्मानमनन्तवैभवम् ।**
**समावृणोत्यावृतिशक्तिरेषा**
**तमोमयी राहुरिवार्कविम्बम्॥ १४१॥**

अखण्ड नित्य र अद्वय बोध शक्तिले स्फुरित भएर अखण्ड ऐश्वर्य सम्पन्न आत्मतत्त्वको यो तमोमयी आवरणशक्ति यसप्रकार ढाकिएको हुन्छ जसरी सूर्यमण्डललाई राहुले (ग्रहणले)।

**तिरोभूते स्वात्मन्यमलतरतेजोवति पुमा-**
**ननात्मानं मोहादहमिति शरीरं कलयति।**
**ततः कामक्रोधप्रभृतिभिरमुं बन्धनगुणैः**
**परं विक्षेपाख्या रजस उरुशक्तिर्व्यथयति॥ १४२॥**

अति निर्मल तेजोमय आत्मतत्त्वको तिरोभूत (अदृश्य) भएर पुरूष अनात्म देहको मोहबाट नै 'मै हुँ' यस्तो मान्न लाग्छ। तव रजोगुणको

विक्षेप नाम अति प्रवल शक्ति काम-क्रोधादि आफ्नो बन्धनकारी गुणले यसलाई बिताउन लाग्छ।

**महामोहग्राहग्रसनगलितात्मावगमनो**
**धियो नानावस्थाः स्वयमभिनयंस्तद्गुणतया।**
**अपारे संसारे विषयविषपूरे जलनिधौ**
**निमज्योन्मज्यायं भ्रमति कुमतिः कुत्सितगतिः॥ १४३॥**

तब यी विभिन्न प्रकारका निम्न गतिवाला कुमति जीव विषयरूपी विष भरिएको यो अपार संसार समुन्द्रमा डुब्ने उत्रने माया मोहरूप गोहीको पञ्जाले समाएर आत्माज्ञानको नष्ट भएर जानाले बुद्धिबाट गुणको अभिमानी भएर उसको विभिन्न अवस्थाको अभिनय गरेर घुमिरहन्छ।

**भानुप्रभासञ्जनिताभ्रपङ्क्ति-**
**र्भानुं तिरोधाय विजृम्भते यथा।**
**आत्मोदिताहङ्कृतिरात्मतत्त्वं**
**तथा तिरोधाय विजृम्भते स्वयम्॥ १४४॥**

जसरी सूर्यको प्रकाशले उत्पन्न भएको बादल सूर्यलाई नै ढाकेर आफैं फैलिन्छ त्यस्तै प्रकार आत्माबाट प्रकट भएको अहंकार आत्मालाई नै ढाकेर (आच्छादित) स्वंयममा स्थित हुन्छ।

## आवरणशक्ति र विक्षेपशक्ति

**कवलितदिननाथे दुर्दिने सान्द्रमेघै-**
**र्व्यथयति हिमझञ्झावायुरुग्रो यथैतान्।**
**अविरततमसात्मन्यावृते मूढबुद्धिं**
**क्षपयति बहुदुःखैस्तीव्रविक्षेपशक्तिः॥ १४५॥**

जसरी कुनै खराव दिनमा (आधि बादल आदिको विशेष उत्पात भएको) बादलद्वारा सूर्यलाई ढाकेर अति डरलाग्दो चिसो-चिसो आँधिले

सबैलाई खिन्न गर्दछ त्यस्तै प्रकार बुद्धिको निरन्तर तमोगुणले ढाकिएर मूर्ख पुरूषको विक्षेपशक्ति विभिन्न प्रकारका दुःखबाट पिडा गरिरहन्छ।

**एताभ्यामेव शक्तिभ्यां बन्धः पुंसः समागतः।**
**याभ्यां विमोहितो देहं मत्वात्मानं भ्रमत्ययम्॥ १४६॥**

यी दुई (आवरण र विक्षेप) शक्तिबाट नै पुरूषलाई बन्धन प्राप्त हुन्छ र यिनैबाट मोहित भएर यस शरीरलाई आत्मा मानेर संसार चक्रमा घुमिरहन्छ।

## बन्ध-निरूपण

**बीजं संसृतिभूमिजस्य तु तमो देहात्मधीरङ्कुरो**
**रागः पल्लवमम्बु कर्म तु वपुः स्कन्धोऽसवः शाखिकाः।**
**अग्राणीन्द्रियसंहतिश्च विषयाः पुष्पाणि दुःखं फलं**
**नानाकर्मसमुद्भवं बहुविधं भोक्तात्र जीवः खगः॥ १४७॥**

संसाररूपी वृक्षको वीज अज्ञान हो, देहात्म बुद्धि उसको अंकुर हो, राग पात हो, कर्म पानी हो, शरीर फेद (स्तम्भ) हो, प्राण हाँगा हुन्, इन्द्रिय उपशाखा (साना हाँगा) हो, विषय फूल हो, विभिन्न प्रकारका कर्मबाट उत्पन्न भएको दुःख फल हो तथा जीवरूपी चरा नै यसका भोक्ता हुन्।

**अज्ञानमूलोऽयमनात्मबन्धो**
**नैसर्गिकोऽनादिरनन्त ईरितः।**
**जन्माप्ययव्याधिजरादिदुःख-**
**प्रवाहपातं जनयत्यमुष्य॥ १४८॥**

यो अज्ञानजनित अनात्माबन्धन स्वभाविक तथा अनादि र अनन्त भनिएको छ। यो जीवको जन्म, मृत्यू, रोग र वृद्धावस्था आदि दुःखको प्रवाह (वहाव) उत्पन्न गरिदिन्छ।

# आत्मानात्म-विवेक

**नास्त्रैर्न शस्त्रैरनिलेन वह्निना**
**छेत्तुं न शक्यो न च कर्मकोटिभिः।**
**विवेकविज्ञानमहासिना विना**
**धातुः प्रसादेन सितेन मञ्जुना॥ १४९॥**

यो बन्धन विधाताको विशुद्ध कृपाले प्राप्त भएको विवेक विज्ञान रूप शुभ्र (श्रीखण्ड) र मन्जुल महाखड्गको विना अरू कुनै अस्त्र, शस्त्र, वायू, अग्नि अथवा करोडौँ कर्मकलापबाट काट्न सक्दैन।

**श्रुतिप्रमाणैकमतेः स्वधर्म-**
**निष्ठा तयैवात्मविशुद्धिरस्य।**
**विशुद्धबुद्धेः परमात्मवेदनं**
**तेनैव संसारसमूलनाशः॥ १५०॥**

जसको श्रुति प्रमाणबाट दृढ निश्चय भएको छ उसको स्वधर्ममा निष्ठा हुन्छ र त्यसैबाट उसको चित्त शुद्धि हुन्छ उसलाई परमात्मा ज्ञान हुन्छ र यस ज्ञानद्वारा नै संसाररूपी रूखको सम्पूर्ण(सबै) नाश हुन्छ।

**कोशैरन्नमयाद्यैः पञ्चभिरात्मा न संवृतो भाति।**
**निजशक्तिसमुत्पन्नैः शैवालपटलैरिवाम्बु वापीस्थम्॥ १५१॥**

अन्नमय आदि पाँचकोषबाट ढाकिएको आत्मा, आफ्नै शक्तिबाट उत्पन्न भएको शिवाल पटाल-जालोले ढाकिएको कुवा को पानीको सरह भासिदैन।

**तच्छैवालापनये सम्यक् सलिलं प्रतीयते शुद्धम्।**
**तृष्णासन्तापहरं सद्यः सौख्यप्रदं परं पुंसः॥ १५२॥**
**पञ्चानामपि कोशानामपवादे विभात्ययं शुद्धः।**
**नित्यानन्दैकरसः प्रत्यग्रूपः परः स्वयंज्योतिः॥ १५३॥**

जसरी त्यो सबै जालो हटाएपछी मानिसको तृष्णारूपी तापलाई हटाउने तथा उनलाई तत्कालनै परमसुख प्रदान गर्ने पानी देखिन थाल्दछ

त्यस्तै प्रकार पाँचै कोषको अपवाद गरेपछि यो शुद्ध, नित्यानन्दरस स्वरूप अन्तर्यामी, स्वयंप्रकाश परमात्मा देखिन थाल्दछ।

**आत्मानात्मविवेकः कर्तव्यो बन्धमुक्तये विदुषा।**
**तेनैवानन्दी भवति स्वं विज्ञाय सच्चिदानन्दम्॥ १५४॥**

बन्धनको निवृत्तिको लागि विद्वानले आत्मा र अनात्माको विवेक गर्नुपर्दछ। उसैबाट आफुले आफैंलाई सचिदानन्द स्वरूप जानेर उ आनन्दित हुन जान्छ।

**मुञ्जादिषीकामिव दृश्यवर्गात्**
**प्रत्यंचमात्मानमसङ्गमक्रियम् ।**
**विविच्य तत्र प्रविलाप्य सर्वं**
**तदात्मना तिष्ठति यः स मुक्तः॥ १५५॥**

जो मानिस आफ्नो असंग र अक्रिय प्रत्यागात्माको मूँजमेंसे सींकके समान दृश्यवर्गबाट फरक गरेर तथा सबैको उसमा मिलाएर आत्माभावमा नै स्थित रहन्छ, उ नै मुक्त हो।

## अन्नमय कोश

**देहोऽयमन्नभवनोऽन्नमयस्तु कोश-**
**श्चान्नेन जीवति विनश्यति तद्विहीनः।**
**त्वक्चर्ममांसरुधिरास्थिपुरीषराशि-**
**र्नायं स्वयं भवितुमर्हति नित्यशुद्धः॥ १५६॥**

अन्नबाट उत्पन्न भएको यो शरीर अन्नमय कोश हो, जुन अन्नबाट बाँचेको हुन्छ र उ बिना नाश हुन्छ। यो त्वचा, छाला, मासु रूधिर, अस्थि र मल आदिको समुह स्वयं नित्ययुद्ध आत्मा हुन सक्दैन।

**पूर्वं जनेरपि मृतेरपि नायमस्ति**
**जातःक्षणं क्षणगुणोऽनियतस्वभावः।**
**नैको जडश्च घटवत्परिदृश्यमानः**
**स्वात्मा कथं भवति भावविकारवेत्ता॥ १५७॥**

यो जन्मभन्दा पहिला र मृत्यू पछि रहदैन, क्षणमा जन्म लिन्छ, क्षणिक गुणवाला हो र अस्थिर स्वभाव हो, तथा अनेक तत्त्वको संघात (नरकविषेश) जड र घडाको समान देखिन्छ, फरी यो भाव विकारको जान्ने व्यक्ति आफ्नो आत्मा कसरी हुन सक्छ?

**पाणिपादादिमान्देहो नात्मा व्यंगेऽपि जीवनात्।**
**तत्तच्छक्तेरनाशाच्च न नियम्यो नियामकः॥ १५८॥**

यो हात गोडा भएको शरीर आत्मा हुन सक्दैन, किनकी उसको अंगभंग भए पनि आफ्नो शक्तिको नाश नभएको कारण पुरूष जीवित रहन्छ। यस बाहेक जुन शरीर आफैंमा शासित छ, त्यो शासक आत्मा कहिल्यै हुन सक्दैन।

**देहतद्धर्मतत्कर्मतदवस्थादिसाक्षिणः ।**
**स्वत एव स्वतः सिद्धं तद्वैलक्षण्यमात्मनः॥ १५९॥**

शरीर उसको धर्म, उसको कर्म तथा उसको अवस्थाको साक्षी आत्मा उसबाट अलग(भिन्न) स्वय आफैंमा स्वतः सिद्ध छ।

**कुल्यराशिर्मांसलिप्तो मलपूर्णोऽतिकश्मलः।**
**कथं भवेदयं वेत्ता स्वयमेतद्विलक्षणः॥ १६०॥**

हाडहरूको समूह, मासुबाट बेरिएको (ढाकिएको) र मलबाट भरिएको यो धेरै कुत्सित (निच) शरीर आफुबाट जान्ने आफैं नै कसरी हुनसक्छ?

**त्वङ्मांसमेदोऽस्थिपुरीषराशा-**
**वहंमतिं मूढजनः करोति।**
**विलक्षणं वेत्ति विचारशीलो**
**निजस्वरूपं परमार्थभूतम्॥ १६१॥**

त्वचा, मासु, मेद, अस्थि र मलको राशीरूप यस शरीरमा मूर्ख मानिस नै अहंबुद्धि गर्दछन्। विचारशील त आफ्नो पारमार्थिक स्वरूपको यसबाट भिन्न भएको जान्दछ।

**देहोऽहमित्येव जडस्य बुद्धि-**
**र्देहे च जीवे विदुषस्त्वहंधीः।**
**विवेकविज्ञानवतो महात्मनो**
**ब्रह्माहमित्येव मतिः सदात्मनि॥ १६२॥**

मूर्ख पुरूषको 'मै शरीर हुँ' यस्तो शरीरमा अहंबुद्धि हुन्छ, विद्वान (शास्त्रज्ञ) को जीवमा र विवेक-विज्ञानयुक्त महात्माको 'मै ब्रह्म हुँ' यस्तो सत्य आत्मामा नै अहंबुद्धि हुन्छ।

**अत्रात्मबुद्धिं त्यज मूढबुद्धे**
**त्वङ्मांसमेदोऽस्थिपुरीषराशौ ।**
**सर्वात्मनि ब्रह्मणि निर्विकल्पे**
**कुरुष्व शान्तिं परमां भजस्व॥ १६३॥**

हे मुर्ख! यो त्वचा, मासु, मेद, अस्थि र मलादिको समूहमा आत्माबुद्धि छोड र सबैमा निर्विकल्प ब्रह्ममा नै आत्माभाव गरेर परम (उच्च) शान्तिको भोग गर।

**देहेन्द्रियादावसति भ्रमोदितां**
**विद्वानहन्तां न जहाति यावत्।**
**तावन्न तस्यास्ति विमुक्तिवार्ता-**
**प्यस्त्वेष वेदान्तनयान्तदर्शी॥ १६४॥**

जबसम्म विद्वान असत् शरीर र इन्द्रिय आदिमा भ्रमबाट उत्पन्न भई अहंताको त्याग गर्दैन, त्यसबेलासम्म वेदान्त सिद्धान्तको पारदर्शी किन नहोस्, उसको मोक्षको कुनै कुरा नै हुँदैन।

**छायाशरीरे प्रतिविम्बगात्रे**
**यत्स्वप्नदेहे हृदि कल्पितांगे।**
**यथात्मबुद्धिस्तव नास्ति काचि-**
**ज्जीवच्छरीरे च तथैव मास्तु॥ १६५॥**

छाया, प्रतिविम्ब, सपना र मनमा कल्पना गरिएको शरीरमा जसरी

तिम्रो कहिल्यै आत्माबुद्धि हुँदैन त्यही किसिमले जीवित शरीरमा पनि कहिल्यै हुनुहुँदैन।

**देहात्मधीरेव नृणामसद्धियां**
**जन्मादिदुःखप्रभवस्य बीजम्।**
**यतस्ततस्त्वं जहि तां प्रयत्ना-**
**त्त्यक्ते तु चित्ते न पुनर्भवाशा॥ १६६॥**

किनकी शरीरबुद्धि पनि असतबुद्धि मानिसको जन्मदेखी दुःखको उत्पत्तिको कारण हो, त्यसकारण उसलाई तिमी प्रयत्नपूर्वक छाडिदेउ, त्यो बुद्धिलाई छाड्नाले फेरी पुर्नजन्मको कुनै आशंका रहदैन।



# प्राणमय कोश

**कर्मेन्द्रियैः पंचभिरञ्चितोऽयं**
**प्राणो भवेत्प्राणमयस्तु कोशः।**
**येनात्मवानन्नमयोऽन्नपूर्णः**
**प्रवर्ततेऽसौ सकलक्रियासु॥ १६७॥**

पाँच कर्मेन्द्रियुक्त यो प्राण नै प्राणमय कोश भनिन्छ। जसबाट यो अन्नमय कोश अन्नबाट तृप्त भएर सबै कर्ममा प्रवृत हुन्छ।

**नैवात्मापि प्राणमयो वायुविकारो**
**गन्तागन्ता वायुवदन्तर्बहिरेषः।**
**यस्मात्किञ्चित्क्वापि न वेत्तीष्टमनिष्टं**
**स्वं वान्यं वा किञ्चन नित्यं परतन्त्रः॥ १६८॥**

प्राणमय कोश पनि आत्मा होइन, किनकी यो वायुको विकार हो, वायुसरह बाहिर, भित्र आउने जाने हुन्छ र यो सधै अर्काको अधिनमा हुन्छ। यसले कहिल्यै आफ्नो इष्ट-अनिष्ट, आफ्नो-पराइ पनि केही जान्दैन।

# मनोमय कोश

**ज्ञानेन्द्रियाणि च मनश्च मनोमयः स्यात्**
**कोशो ममाहमिति वस्तुविकल्पहेतुः।**
**संज्ञादिभेदकलनाकलितो बलीयां-**
**स्तत्पूर्वकोशमभिपूर्य विजृम्भते यः॥ १६९॥**

ज्ञानेन्द्रिय र मन पनि 'म मेरो' आदि विकल्पको कारण मनोमय कोश हो, जुन नामबाट भेद कलना (अधिनमा) बाट जान्न सकिन्छ र धेरै बलियो छ तथा पूर्वकोशले व्याप्त गरेर स्थित हुन्छ।

**पञ्चेन्द्रियैः पञ्चभिरेव होतृभिः**
**प्रचीयमानो विषयाज्यधारया।**
**जाज्वल्यमानो बहुवासनेन्धनै-**
**र्मनोमयाग्निर्दहति प्रपंचम्॥ १७०॥**

पाँच इन्द्रियरूप पाँच होताद्वारा विषयरूपी घिउको आहुतीले बढेको तथा विभिन्न प्रकारको वासनारूप इन्धनबाट बलेको यो मनोमय अग्नि (यज्ञ) सम्पूर्ण दृश्य प्रपञ्चहरूलाई जलाई दिन्छ। (अर्थात् जुन समय इन्द्रियहरू वासनारूपी इन्धनले जलाएर देखिएको मनोमय अग्नीमा विषयको हवन गरिन्छ त्यस समय यो सम्पूर्ण प्रपञ्चमा लिन हुन जान्छ।)

**न ह्यस्त्यविद्या मनसोऽतिरिक्ता**
**मनो ह्यविद्या भवबन्धहेतुः।**
**तस्मिन्विनष्टे सकलं विनष्टं**
**विजृम्भितेऽस्मिन्सकलं विजृम्भते॥ १७१॥**

मन बाहेक अविद्या अरू कुनै छैन, मन नै भवबन्धनको लागि भूत अविद्या हो, त्यसको नाश भएपछि सबै नाश हुन्छ र उसको जागृत भएपछि सबै कुरा जानकारी (अनुभव) हुन लाग्दछ।

**स्वप्नेऽर्थशून्ये सृजति स्वशक्त्या**
**भोक्त्रादि विश्वं मन एव सर्वम्।**
**तथैव जाग्रत्यपि नो विशेष-**
**स्तत्सर्वमेतन्मनसो विजृम्भणम्॥ १७२॥**

जसमा कुनै पदार्थ हुँदैन त्यो सपनामा मन नै आफ्नो शक्तिले सम्पूर्ण भोक्ता, भोग्यादि प्रपञ्च रच्दछ, त्यही प्रकार जागृत अवस्थामा पनि अरू कुनै विशेषता छैन त्यसकारण यी सबै मनका विलास मात्र हुन्।

**सुषुप्तिकाले मनसि प्रलीने**
**नैवास्ति किञ्चित्सकलप्रसिद्धेः।**
**अतो मनःकल्पित एव पुंसः**
**संसार एतस्य न वस्तुतोऽस्ति॥ १७३॥**

सुषुप्ती समयमा मन लिन भएपछि केहि पनि रहदैन यो कुरा सबैलाई थाहा छ। त्यसकारण यो जीवको यो संसार मनको कल्पना मात्रै हो वस्तुतः केहि पनि होइन।

**वायुनानीयते मेघः पुनस्तेनैव नीयते।**
**मनसा कल्प्यते बन्धो मोक्षस्तेनैव कल्प्यते॥ १७४॥**

बादल वायुद्वारा आउछ र फेरी उसैले लैजान्छ यसरी नै मनबाट नै बन्धनको कल्पना गरिन्छ र उसैबाट मोक्षको।

**देहादिसर्वविषये परिकल्प्य रागं**
**बध्नाति तेन पुरुषं पशुवद्गुणेन।**
**वैरस्यमत्र विषवत्सु विधाय पश्चा-**
**देनं विमोचयति तन्मन एव बन्धात्॥ १७५॥**

यो मन नै शरीर आदि सबै विषयमा रागको कल्पना गरेर उसैद्वारा रसिले (डोरीले) पशुसरह जीवलाई बाधिन्छ र फेरी यही विष सरहको विषयमा विरसत्ता (त्यागभावना) उत्पन्न गरेर यसलाई बन्धनबाट मुक्त गरिदिन्छ।

**तस्मान्मनः कारणमस्य जन्तो-**
**र्बन्धस्य मोक्षस्य च वा विधाने।**
**बन्धस्य हेतुर्मलिनं रजोगुणै-**
**र्मोक्षस्य शुद्धं विरजस्तमस्कम्॥ १७६॥**

यसरी जीवको बन्धन र मोक्षको विधान (नियति) मा मन नै कारण हो, रजोगुणबाट मलिन भएको यो बन्धनको कारण हुन्छ तथा रज र तमबाट हटेर शुद्ध सात्त्विक भएपछि मोक्षको कारण हुन जान्छ।

**विवेकवैराग्यगुणातिरेका-**
**च्छुद्धत्वमासाद्य मनो विमुक्त्यै।**
**भवत्यतो बुद्धिमतो मुमुक्षो-**
**स्ताभ्यां दृढाभ्यां भवितव्यमग्रे॥ १७७॥**

विवेक, वैराग्यादि गुणको उत्कर्षबाट शुद्धताको प्राप्त मन मुक्तिको हेतु हुन्छ, अतः पहिला बुद्धीमान मुमुक्षको त्यो(ज्ञान वैराग्य) दुवै दृण हुनु पर्दछ।

**मनो नाम महाव्याघ्रो विषयारण्यभूमिषु।**
**चरत्यत्र न गच्छन्तु साधवो ये मुमुक्षवः॥ १७८॥**

मन नामका भयंकर व्याघ्र विषयरूप वनमें घूमता फिरता है। जो साधु मुमुक्षु हैं, वे वहाँ न जायँ।

**मनः प्रसूते विषयानशेषान्**
**स्थूलात्मना सूक्ष्मतया च भोक्तुः।**
**शरीरवर्णाश्रमजातिभेदान्**
**गुणक्रियाहेतुफलानि नित्यम्॥ १७९॥**

मन नै सम्पूर्ण स्थूल–सूक्ष्म विषयको शरीर, वर्ण, आश्रम, जाति आदि भेदको तथा गुण, क्रिया, कारण र फलको भोक्ताको लागि सधै उत्पन्न गरिरहन्छ।

**असङ्गचिद्रूपममुं विमोह्य**
**देहेन्द्रियप्राणगुणैर्निबध्य ।**
**अहंममेति भ्रमयत्यजस्त्रं**
**मनः स्वकृत्येषु फलोपभुक्तिषु॥ १८०॥**

यो असंग चिद्रुप (अनाशक्ति ज्ञानस्वरूप परमब्रह्म) आत्मालाई मोहित गरेर तथा यसले शरीर, इन्द्रिय, प्राणादि गुणले बाधेर, यो मन नै यसको 'म, मेरो' भावबाट आफ्नो कर्म र उनको फलोभोगमा निरन्तर भड्किरहन्छ।

**अध्यासदोषात्पुरुषस्य संसृति-**
**रध्यासबन्धस्त्वमुनैव कल्पितः।**
**रजस्तमोदोषवतोऽविवेकिनो**
**जन्मादिदुःखस्य निदानमेतत्॥ १८१॥**

अध्यास(झुटो ज्ञान वा कल्पना) दोषबाट नै पुरूषको जन्ममरण रूप संसार हुन्छ, र यो अध्यासको बन्धन यसैबाट कल्पना गरी आएको हुन्छ तथा रज-तम आदि दोषयुक्त अविवेकी पुरूषको लागि यो (अध्यास) नै जन्मादि दु:खको मूल कारण हो।

**अत: प्राहुर्मनोऽविद्यां पण्डितास्तत्त्वदर्शिन:।**
**येनैव भ्राम्यते विश्वं वायुनेवाभ्रमण्डलम्॥ १८२॥**

त्यसकारण तत्त्वदर्शी विद्वान मनलाई नै अविद्या भन्दछन्। जसको द्वारा वायुले बादललाई ढाके जस्तो सम्पूर्ण विश्वलाई छोपेको हुन्छ।

**तन्मन:शोधनं कार्यं प्रयत्नेन मुमुक्षुणा।**
**विशुद्धे सति चैतस्मिन्मुक्ति: करफलायते॥ १८३॥**

त्यस्ता मन भएका मुमुक्षुले प्रयत्न पूर्वक शोधन (परिमार्जन) गर्नुपर्दछ, त्यसको शुद्धि भएपछि मुक्ति हातमा रहे सरह हुन्छ।

**मोक्षैकसक्त्या विषयेषु रागं**
**निर्मूल्य संन्यस्य च सर्वकर्म।**
**सच्छ्रद्ध्या य: श्रवणादिनिष्ठो**
**रज:स्वभावं स धुनोति बुद्धे:॥ १८४॥**

मोक्षको आसक्तिबाट जुन विषयमा राग निर्मुलन गरेर तथा सबै कर्मको त्याग गरेर, शुद्ध श्रद्धाबाट युक्त भएर सुन्नमा तत्पर रहन्छ त्यसको बुद्धिको चञ्चल स्वभावको नाश गर्दछ।

**मनोमयो नापि भवेत्परात्मा**
**ह्याद्यन्तवत्त्वात्परिणामिभावात् ।**
**दु:खात्मकत्वाद्विषयत्वहेतो-**
**र्द्रष्टा हि दृश्यात्मतया न दृष्ट:॥ १८५॥**

मनोमय कोश पनि आद्यन्तवान, परिणामी, दुखात्मक र विषयरूपी भएको कारण परात्मा हुन सक्दैन, किनकी द्रष्टा कहिल्यै पनि दृश्य रूप भएको देखिदैन।

~~0~~

# विज्ञानमय कोश

**बुद्धिर्बुद्धीन्द्रियैः सार्धं सवृत्तिः कर्तृलक्षणः।**
**विज्ञानमयकोशः स्यात्पुंसः संसारकारणम्॥ १८६॥**

ज्ञानेन्द्रियका साथ वृत्तियुक्त बुद्धि नै कर्तापनको स्वभाववाला विज्ञानमय कोश हो, जुन पुरूषको(जन्म मरणरूप)संसारको कारण हो।

**अनुव्रजच्चित्प्रतिविम्बशक्ति-**
**र्विज्ञानसंज्ञः प्रकृतिर्विकारः।**
**ज्ञानक्रियावानहमित्यजस्रं**
**देहेन्द्रियादिष्वभिमन्यते भृशम्॥ १८७॥**

चित्त र इन्द्रियादिको अनुगमन गर्ने चेतनको प्रतिविम्ब नै 'विज्ञान' नामक प्रकृतिको विकार हो। उ 'म ज्ञान र क्रियावान हुँ' यस्तो शरीर इन्द्रिय आदिमा निरन्तर अभिमान गरिरहन्छ।

**अनादिकालोऽयमहंस्वभावो**
**जीवः समस्तव्यवहारवोढा।**
**करोति कर्माण्यपि पूर्ववासनः**
**पुण्यान्यपुण्यानि च तत्फलानि॥ १८८॥**

**भुङ्क्ते विचित्रास्वपि योनिषु व्रज-**
**न्नायाति निर्यात्यध ऊर्ध्वमेषः।**
**अस्यैव विज्ञानमयस्य जाग्रत्-**
**स्वप्नाद्यवस्था सुखदुःखभोगः॥ १८९॥**

**देहादिनिष्ठाश्रमधर्मकर्म-**
**गुणाभिमानं सततं ममेति।**
**विज्ञानकोशोऽयमतिप्रकाशः**
**प्रकृष्टसान्निध्यवशात्परात्मनः ।**
**अतो भवत्येष उपाधिरस्य**
**यदात्मधीः संसरति भ्रमेण॥ १९०॥**

यो अहंस्वभाव भएको विज्ञानमय कोश नै अनादिकालिन जीव संसारको समस्त ब्यवहारको निर्वाह गर्दछ। यो आफ्नो पूर्व (पहिलाको) वासनाले पुण्य पाप अनेकौ कर्म गर्दछ र त्यसको फल भोग्दछ, तथा विभिन्न योनिहरूमा घुमिरहेर कहिले तल जान्छ र कहिले माथी जान्छ। जाग्रत, स्वप्न आदि अवस्था सुख दुःख आदि भोग शरीरसँग सम्वन्धित आश्रमको धर्म, कर्म, गुणको अभिमान र ममता आदि सधैँ यो विज्ञानमय कोशमा रहन्छ। यो आत्माको अति नजिकको कारण अत्यन्त प्रकाशमय छ, त्यसकारण यो उसको उपाधि हो जसमा भ्रमबाट आत्माबुद्धि गरेर यो जन्म मरण रूप संसार चक्रमा परिरहन्छ।

## आत्माको उपाधिबाट असंगता

**योऽयं विज्ञानमयः प्राणेषु हृदि स्फुरत्स्वयंज्योतिः।**
**कूटस्थः सन्नात्मा कर्ता भोक्ता भवत्युपाधिस्थः॥ १९१॥**

यो जुन आफैंमा प्रकाशित विज्ञानस्वरूप हृदयको भित्र प्राणमा स्फूरित भइरहन्छ, त्यो कूटस्थ (निर्विकार) आत्मा भएर पनि उपाधिको कारण कर्ता भोक्ता भएर जान्छ।

**स्वयं परिच्छेदमुपेत्य बुद्धे-**
**स्तादात्म्यदोषेण परं मृषात्मनः।**
**सर्वात्मकः सन्नपि वीक्षते स्वयं**
**स्वतः पृथक्त्वेन मृदो घटानिव॥ १९२॥**

त्यो परात्मा (अर्काको आत्मा) झुटो बुद्धिबाट परिछिन्न (छोपिएर) भएर उसबाट एकीभूत (एकरूप भएको) हुन जाने दोषबाट आफैं सर्वात्मक भएर पनि माटोबाट घडा भएसमान आफूलाई आफैंबाट फरक-फरक देख्दछ।

**उपाधिसम्बन्धवशात्परात्मा**
**ह्युपाधिधर्माननु भाति तद्गुणः।**
**अयोविकारानविकारिवह्निवत्**
**सदैकरूपोऽपि परः स्वभावात्॥ १९३॥**

ऊ परात्मा स्वरूपबाट त सधैँ एकरूप नै हो र पनि उपाधिका सम्बन्धबाट उसको गुणले युक्त (जोडिएर) भएर उसैको धर्मको साथ प्रकाशित हुन खोज्दछ, फलामको विकारमा रहेको अविकारी अग्नि उनैको समान प्रकाशित हुन्छ। (तातेको फलामलाई आगो देखिए जस्तो हुन्छ)।

## मुक्ति कसरी हुन्छ?

**शिष्य उवाच**

**भ्रमेणाप्यन्यथा वास्तु जीवभावः परात्मनः।**
**तदुपाधेरनादित्वान्नानादेर्नाश इष्यते॥ १९४॥**

**शिष्य भन्दछ–** हे गुरूदेव! भ्रमबाट वा अन्य कुनै कारणबाट परात्माको नै जीव भावको प्राप्ति हुन्छ र उसको उपाधि अनादि हो तथा अनादि वस्तुको नाश हुन सक्दैन।

**अतोऽस्य जीवभावोऽपि नित्यो भवति संसृतिः।**
**न निवर्तेत तन्मोक्षः कथं मे श्रीगुरो वद॥ १९५॥**

यसकारण(यसबाट) यो आत्माको जीवभाव पनि नित्य हो र यस्तो हुनाले यसको जन्ममरण रूप संसारचक्र कहिल्यै निवृत्त हुन सक्दैन तब फेरि हे गुरूदेव यसको मोक्ष कसरी हुन्छ त्यो भन्नुहोस्?

## आत्मज्ञान नै मुक्तिको उपाय हो

**श्रीगुरुरुवाच**

**सम्यक्पृष्टं त्वया विद्वन्सावधानेन तच्छृणु।**
**प्रामाणिकी न भवति भ्रान्त्या मोहितकल्पना॥ १९६॥**

**गुरूले भन्नुभयो–** हे बावु! तिमी धेरै बुद्धिमान छौ, तिमीले ज्यादै राम्रो कुरा सोध्यौ हेर! अब सावधान भएर सुन। देख(हेर) मुग्ध पुरूषको भ्रमवश भएको कल्पना मान्ने किसिमको हुन सक्दैन।

**भ्रान्तिं विना त्वसङ्गस्य निष्क्रियस्य निराकृतेः।**
**न घटेतार्थसम्बन्धो नभसो नीलतादिवत्॥ १९७॥**

जुन असंग, निष्क्रिय र निराकार छ त्यो आत्माको पदार्थबाट नीलता (निलोपना) आदिबाट आकाशको समान भ्रम वाहेक कुनै प्रकारको सम्बन्ध हुन सक्दैन्।

**स्वस्य द्रष्टुर्निर्गुणस्याक्रियस्य**
**प्रत्यग्बोधानन्दरूपस्य बुद्धेः।**
**भ्रान्त्या प्राप्तो जीवभावो न सत्यो**
**मोहापाये नास्त्यवस्तुस्वभावात्॥ १९८॥**

साक्षी, निगुर्ण अक्रिय र प्रत्याज्ञानान्द स्वरूप त्यो आत्मामा बुद्धिको भ्रमबाट जीवभावको प्राप्ति हुन्छ, त्यो वास्तविक होइन, किनकी त्यो अवस्तुरूप भएकोले, मोह हटेपछि स्वभावमा रहन जादैन।

**यावद् भ्रान्तिस्तावदेवास्य सत्ता**
**मिथ्याज्ञानोज्जृम्भितस्य प्रमादात्।**
**रज्ज्वां सर्पो भ्रान्तिकालीन एव**
**भ्रान्तेर्नाशे नैव सर्पोऽपि तद्वत्॥ १९९॥**

जसरी भ्रम रहेसम्म डोरीमा सर्पको भान हुन्छ, भ्रमको नाश भएपछि फेरी सर्प देखिदैन, त्यसरी नै जबसम्म भ्रम हुन्छ तवसम्म प्रमादवश झुटो ज्ञानबाट देखिएको यो जीवभावको सत्ता हो।

**अनादित्वमविद्यायाः कार्यस्यापि तथेष्यते।**
**उत्पन्नायां तु विद्यायामाविद्यकमनाद्यपि॥ २००॥**
**प्रबोधे स्वप्नवत्सर्वं सहमूलं विनश्यति।**

लोकमा अविद्या र उसको कार्य जीवभावमा अनादित्त्व मानिन्छ तर जागेपछि जसरी सम्पूर्ण स्वप्न प्रपञ्च आफ्नो मूलसहित नष्ट हुन्छ त्यहि प्रकारले ज्ञानको उदय भएपछि अविद्या जनित जीवभावको नाश हुन्छ।

**अनाद्यपीदं नो नित्यं प्रागभाव इव स्फुटम्॥ २०१॥**
**अनादेरपि विध्वंसः प्रागभावस्य वीक्षितः।**

यो जीवभाव अनादि भएर पनि प्रागभावको समान नित्य छैन् किनकी अनादि प्रागभावको पनि विनाश भएको देखिएको छ।

**यद्‌बुद्‌ध्युपाधिसम्बन्धात्परिकल्पितमात्मनि ॥ २०२॥**
**जीवत्वं न ततोऽन्यत्तु स्वरूपेण विलक्षणम्।**
**सम्बन्धः स्वात्मनो बुद्‌ध्या मिथ्याज्ञानपुरःसरः॥ २०३॥**
**विनिवृत्तिर्भवेत्तस्य सम्यग्ज्ञानेन नान्यथा।**
**ब्रह्मात्मैकत्वविज्ञानं सम्यग्ज्ञानं श्रुतेर्मतम्॥ २०४॥**

त्यसकारण जुन जीवत्त्वको बुद्धिरूप उपाधिको सम्बन्धबाट नै आत्मामा कल्पना भएको हो, त्यो स्वरूपबाट त्यस(आत्मा) भिन्न हुन सक्दैन। बुद्धिको साथ यो आत्माको सम्बन्ध झुटो ज्ञानको कारण हो। यसको निवृत्ति (समाप्ति) ठिकठिक ज्ञान भएपछि हुन सक्दछ अरू कुनै प्रकारबाट होइन तथा ब्रह्म र आत्माको एकताको ज्ञान नै वास्तविक ज्ञान हो। यस्तो श्रुतिको सिद्धान्त छ। (अतः ब्रह्मात्मैक्य ज्ञान भएपछि जीवभावको निवृत्ति (समाप्ति) हुन जान्छ।

**तदात्मानात्मनोः सम्यग्विवेकेनैव सिध्यति।**
**ततो विवेकः कर्तव्यः प्रत्यगात्मासदात्मनोः॥ २०५॥**

त्यो ब्रह्मात्मैक्य ज्ञानको सिद्धि आत्मा र अनात्माको सबै किसिमले विवेक (प्राथक्य- ज्ञान) भएपछि नै हुन्छ। यसको लागि प्रत्यगात्मा (परमेश्वर) सत्य र झुटो सबै किसिमले विवेचना गर्नुपर्दछ।

**जलं पङ्कवदत्यन्तं पङ्कापाये जलं स्फुटम्।**
**यथा भाति तथात्मापि दोषाभावे स्फुटप्रभः॥ २०६॥**

अत्यन्त हिलो पानी पनि हिलो जमेपछि स्वच्छ पानी मात्र रहन जान्छ, त्यसरी नै दोषरहित भएपछि आत्मा पनि स्पष्टसँग प्रकाशित हुन लाग्दछ।

**असन्निवृत्तौ तु सदात्मना स्फुटं**
**प्रतीतिरेतस्य भवेत्प्रतीचः।**
**ततो निरासः करणीय एवा-**
**सदात्मनः साध्वहमादिवस्तुनः॥ २०७॥**

सत्य आत्माको विचारबाट असत्को समाप्ती भएपछि यो आन्तरिक आत्माको स्पष्ट प्रतीति (ज्ञान) हुन लाग्दछ। त्यसकारण अहंकार आदि असदात्माको सबै किसिमले हटाउनु आवश्यक नै पर्दछ।

**अतो नायं परात्मा स्याद्विज्ञानमयशब्दभाक्।**
**विकारित्वाज्जडत्वाच्च परिच्छिन्नत्वहेतुतः।**
**दृश्यत्वाद्व्यभिचारित्वान्नानित्यो नित्य इष्यते॥ २०८॥**

यसकारण शब्दबाट भनिएको यो विज्ञानमय कोश पनि विकारि (दुर्भावना) जड् परिछिन्न तथा देखिने र व्यभिचारी भएको कारण परात्मा हुन सक्दैन्। किनकी यो अनित्य हो र अनित्य वस्तु कहिल्यै पनि नित्य हुन सक्दैन्।

## आनन्दमय कोश

**आनन्दप्रतिविम्बचुम्बिततनुर्वृत्तिस्तमोजृम्भिता**
**स्यादानन्दमयः प्रियादिगुणकः स्वेष्टार्थलाभोदयः।**
**पुण्यस्यानुभवे विभाति कृतिनामानन्दरूपः स्वयं**
**भूत्वा नन्दति यत्र साधु तनुभृन्मात्रः प्रयत्नं विना॥ २०९॥**

आनन्दस्वरूप आत्माको प्रतिविम्बबाट चुम्बित तथा तमोगुणबाट प्रकट भएको वृत्ति आनन्दमय कोश हो। यो प्रिय आदि (प्रिय, मोद र प्रमोद यी तीन) गुणबाट युक्त छ र आफ्नो अभिष्ट पदार्थको प्राप्ति भएपछि प्रकट हुन्छ। पूण्य कर्मको परिपाक भएपछि उसको फलरूप सुखको अनुभव गरेको समय भाग्यवान पुरूषको त्यो आनन्दमय कोशको आफैंमा भान हुन्छ, जसबाट सम्पूर्ण देहधारी जीव विना प्रयत्न नै अति आनन्दित हुन्छ।

**आनन्दमयकोशस्य सुषुप्तौ स्फूर्तिरुत्कटा।**
**स्वप्नजागरयोरीषदिष्टसंदर्शनादिना ॥ २१० ॥**

आनन्दमय कोशको तीव्र ज्ञान त सुषुप्तीमा नै हुन्छ तर पनि जागृत र स्वप्नमा इष्ट वस्तुको दर्शन (देख्ने) आदिबाट त्यसको यत्किंचित (थोरै मात्र) भान हुन जान्छ।

**नैवायमानन्दमयः परात्मा**
**सोपाधिकत्वात्प्रकृतेर्विकारात् ।**
**कार्यत्वहेतोः सुकृतक्रियाया**
**विकारसङ्घातसमाहितत्वात् ॥ २११ ॥**

यो परात्मा आनन्दमय छैन, किनकी आनन्दयुक्त एंव प्रकृतिको विकार हो, शुभकर्मको कार्य हो र प्रकृतिको विकारहरूको समुह (स्थुल शरीर) मा आश्रित छ।

**पंचानामपि कोशानां निषेधे युक्तितः श्रुतेः।**
**तन्निषेधावधिः साक्षी बोधरूपोऽवशिष्यते॥ २१२ ॥**

श्रुतिको अनुकुल युक्तिबाट पंचकोशलाई रोकी दिंदा उसको रोकिएको समयमा बोधस्वरूप साक्षी आत्मा बाधिएको हुन्छ।

**योऽयमात्मा स्वयंज्योतिः पञ्चकोशविलक्षणः।**
**अवस्थात्रयसाक्षी सन्निर्विकारो निरंजनः।**
**सत्स्वरूपः स विज्ञेयः स्वात्मत्वेन विपश्चिता॥ २१३ ॥**

यसप्रकार जो आत्मा स्वयं प्रकाश, अन्नमयादि पंचकोशबाट फरक तथा जाग्रत, स्वप्न र सुषुप्ती तीनै अवस्थाको साक्षी भएर सतरूप निर्विकार, निर्मल र शुद्ध सत्स्वरूप हो, त्यसबाटै विद्वान पुरूषले आफ्नो वास्तविक आत्मा संझिनु पर्दछ।



# आत्मस्वरूप विषयको प्रश्न

शिष्य उवाच

**मिथ्यात्वेन निषिद्धेषु कोशेष्वेतेषु पञ्चसु।**
**सर्वाभावं विना किञ्चिन्न पश्याम्यत्र हे गुरो।**
**विज्ञेयं किमु वस्त्वस्ति स्वात्मनात्र विपश्चिता॥ २१४॥**

**शिष्यले सोधे**- हे गुरू! यी पाँचै कोशको झुटो किसिमले निषिद्ध (रोकिएको) भएपछि मलाई सर्वभाव (शून्य) को अतिरिक्त अरू केहि ज्ञान हुँदैन् फेरी (तपाईंको भनाईअनुसार) बुद्धिमान पुरूष कुन वस्तुलाई आफ्नो आत्मा मान्ने?

## आत्मस्वरूप-निरूपण

श्रीगुरुरुवाच

**सत्यमुक्तं त्वया विद्वन्निपुणोऽसि विचारणे।**
**अहमादिविकारास्ते तदभावोऽयमप्यनु॥ २१५॥**

**गुरूले भन्नुभयो**- हे विद्वान! तिमीले धेरै ठिक भनेका छौ विचार गर्नमा तिमी धेरै कुशल (सक्षम) छौ। हेर जसरी अहंकार आदि तिम्रो विकार हो त्यसरी नै उनको अभाव पनि हो।

**सर्वे येनानुभूयन्ते यः स्वयं नानुभूयते।**
**तमात्मानं वेदितारं विद्धि बुद्ध्या सुसूक्ष्मया॥ २१६॥**

यी सबै जसबाट अनुभव गरिएको हुन्छ र जो स्वयं अनुभव गर्न सकिदैन् आफ्नो सुक्ष्म बुद्धिद्वारा ती सबैको साक्षी तिमी आफ्नो आत्मा जान।

**तत्साक्षिकं भवेत्तत्तद्यद्यद्येनानुभूयते।**
**कस्याप्यननुभूतार्थे साक्षित्वं नोपयुज्यते॥ २१७॥**

जस जसको द्वारा जो जो अनुभव गरिन्छ ती सबै उसैको साक्षित्त्वमा भन्ने गरिन्छ, अनुभव नगरिएको पदार्थमा कुनैको पनि साक्षी हुन मान्दैन्।

**असौ स्वसाक्षिको भावो यतः स्वेनानुभूयते।**
**अतः परं स्वयं साक्षात्प्रत्यगात्मा न चेतरः॥ २१८॥**

आफ्नो त यो आत्मा आफैंमा साक्षी हो। किनकी यो आफैंमा आफैंले अनुभव गर्दछ यस कारण यसबाट टाढा अरू कुनै आफ्नो साक्षात अन्तरात्मा छैन्।

**जाग्रत्स्वप्नसुषुप्तिषु स्फुटतरं योऽसौ समुज्जृम्भते**
**प्रत्यग्रूपतया सदाहमहमित्यन्तःस्फुरन्नैकधा।**
**नाना कारविकारभागिन इमान्पश्यन्नहंधीमुखान्**
**नित्यानन्दचिदात्मना स्फुरति तं विद्धि स्वमेतं हृदि॥ २१९॥**

जाग्रत, स्वप्न र सुषुप्ती यी तीन अवस्थामा जुन अन्तकरणको भित्र सधै अहम् (म, म) रूपमा अनेक प्रकार स्फुरित रहेर प्रत्यक्षरूपबाट (स्पष्ट रूपमा)प्रकाशित हुन्छ र अहंकारबाट लिएर प्रवृत्तिका यी विभिन्न विकारहरूको साक्षी रूपमा देख्दछ र नित्य चिदानन्द रूपले स्फुरित हुन्छ, त्यसैले तिमीले आफ्नो अन्तःकरणमा बसेको आफ्नो आफ्नै सम्झ।

**घटोदके विम्बितमर्कविम्ब-**
**मालोक्य मूढो रविमेव मन्यते।**
**तथा चिदाभासमुपाधिसंस्थं**
**भ्रान्त्याहमित्येव जडोऽभिमन्यते॥ २२०॥**

जसरी मूर्ख पुरूष घडाको पानीमा प्रतिविम्बित सूर्य विम्बलाई देखेर उसैलाई सूर्य सम्झन्छ, त्यहि किसिमले उपाधिमा स्थित चिदामासको अज्ञानी पुरूष भ्रमबाट आफ्नो आफैं मानेर बस्दछ।

**घटं जलं तद्गतमर्कविम्बं**
**विहाय सर्वं विनिरीक्ष्यतेऽर्कः।**
**तटस्थ एतत्त्रितयावभासकः**
**स्वयंप्रकाशो विदुषा यथा तथा॥ २२१॥**

**देहं धियं चित्प्रतिविम्बमेतं**

विसृज्य बुद्धौ निहितं गुहायाम्।
द्रष्टारमात्मानमखण्डबोधं
सर्वप्रकाशं सदसद्विलक्षणम्॥ २२२॥
नित्यं विभुं सर्वगतं सुसूक्ष्म-
मन्तर्बहिःशून्यमनन्यमात्मनः ।
विज्ञाय सम्यङ्निजरूपमेतत्
पुमान्विपाप्मा विरजो विमृत्युः॥ २२३॥

विद्वान पुरूष घडा, पानी र उसमा स्थित सूर्यको प्रतिविम्ब यी सबैलाई छाडेर जसरी यी तीनैको प्रकाशन यीनबाट भिन्न र स्वयं प्रकाशस्वरूप सूर्यको देख्दछ, त्यसरी नै शरीर, बुद्धि र चिदामास (प्रकाश) यी तीनलाई छाडेर बुद्धि गुहामा स्थित साक्षीरूप यो आत्माको अखण्डबोध स्वरूप सबैको प्रकाशक र सत् असत् दुवैमा फरक नित्य, विभु (सधैं रहिरहने, सबै ठाउँमा व्याप्त) सर्वगत (सबै ठाउँमा पुगेको) सुक्ष्म भित्र बाहिरको फरकबाट भेदरहित र आफुले आफैंबाट सर्वथा अभिन्न यो (आत्माको) सबै प्रकारले आफ्नो निजरूप जानेर पुरूष पाप रहित, निर्मल र अमर हुन जान्छ।

विशोक आनन्दघनो विपश्चित्
स्वयं कुतश्चिन्न बिभेति कश्चित्।
नान्योऽस्ति पन्था भवबन्धमुक्ते-
र्विना स्वतत्त्वावगमं मुमुक्षोः॥ २२४॥

ऊ अति बुद्धिमान पुरूष शोक रहित र आनन्दघनरूप भएर जानाले कहिल्यै कसैसँग पनि डर हुँदैन। मुमुक्षु पुरूषको लागि आत्मतत्त्वको ज्ञानलाई छाडेर संसार बन्धनबाट छुट्ने अरू कुनै बाटो छैन।

ब्रह्माभिन्नत्वविज्ञानं भवमोक्षस्य कारणम्।
येनाद्वितीयमानन्दं ब्रह्म सम्पद्यते बुधैः॥ २२५॥

ब्रह्म र आत्माको अभेदको ज्ञान नै भवबन्धनबाट मुक्ति हुनको कारण

हो। जसद्वारा बुद्धिमान पुरूष अद्वितीय आनन्द स्वरूप ब्रह्मपदको प्राप्त गर्दछ।

**ब्रह्मभूतस्तु संसृत्यै विद्वान्नावर्तते पुनः।**
**विज्ञातव्यमतः सम्यग्ब्रह्माभिन्नत्वमात्मनः॥ २२६॥**

ब्रह्मभूत (ब्रह्मज्ञान) भएपछि विद्वान फेरी यो संसार चक्रको जन्ममरण रूपमा पर्दैन, यसको लागि आत्मालाई ब्रह्मबाट अभिनत्त्व सबै प्रकारबाट जान्नु पर्दछ।

**सत्यं ज्ञानमनन्तं ब्रह्म विशुद्धं परं स्वतःसिद्धम्।**
**नित्यानन्दैकरसं प्रत्यगभिन्नं निरन्तरं जयति॥ २२७॥**

ब्रह्म सत्य ज्ञानस्वरूप र अनन्त छ, उ शुद्ध, पर, स्वतःसिद्ध, नित्य, एकमात्र आनन्दरस स्वरूप, प्रत्यक् (अन्तरतम भित्री रूपमा) र अभिन्न हो तथा निरन्तर उन्नतिशाली हो।

## ब्रह्म र जगत्को एकता

**सदिदं परमाद्वैतं स्वस्मादन्यस्य वस्तुनोऽभावात्।**
**न ह्यन्यदस्ति किञ्चित्सम्यक्परमार्थतत्त्वबोधे हि॥ २२८॥**

यो परमाद्वैत (परमेश्वर) नै एक सत्य पदार्थ हो किनकी यो स्वात्माका अतिरिक्त (बाहेक) अरू कुनै बस्तु नै छैन। यस परमात्मा तत्त्वको पूर्ण बोध भएपछि अरू केहि पनि रहदैन।

**यदिदं सकलं विश्वं नानारूपं प्रतीतमज्ञानात्।**
**तत्सर्वं ब्रह्मैव प्रत्यस्ताशेषभावनादोषम्॥ २२९॥**

यो सम्पूर्ण विश्व जो अज्ञानबाट विभिन्न प्रकारको प्रतीत(ज्ञान) भइरहन्छ समस्त भावनाको दोषबाट रहित(अर्थात निर्विकल्प) ब्रह्म नै हो।

**मृत्कार्यभूतोऽपि मृदो न भिन्नः**
**कुम्भोऽस्ति सर्वत्र तु मृत्स्वरूपात्।**
**न कुम्भरूपं पृथगस्ति कुम्भः**
**कुतो मृषा कल्पितनाममात्रः॥ २३०॥**

माटोको काम भएर पनि घडा त्यो भन्दा फरक हुँदैन किनकी सबै किसिमले माटाको रूप भएको कारण घडाकोरूप माटोमा झुट्टो कल्पना नाम मात्र घडाको सत्ता नै भनिन्छ?

**केनापि मृद्भिन्नतया स्वरूपं**
**घटस्य संदर्शयितुं न शक्यते।**
**अतो घटः कल्पित एव मोहान्**
**मृदेव सत्यं परमार्थभूतम्॥ २३१॥**

माटोभन्दा भिन्न (फरक) घडाको रूप कसैले पनि देख्न सक्दैन। यसो हुँदा घडा त मोहबाट कल्पित हो, वास्तवमा सत्य त तत्त्वस्वरूप माटो नै हो।

**सद्ब्रह्मकार्यं सकलं सदैव**
**तन्मात्रमेतन्न ततोऽन्यदस्ति।**
**अस्तीति यो वक्ति न तस्य मोहो**
**विनिर्गतो निद्रितवत्प्रजल्पः॥ २३२॥**

सत्, ब्रह्मको कार्य यो सबै प्रपञ्च सत्स्वरूप नै हो, किनकी यो सम्पूर्ण उही त हो, उ भन्दा फरक केहि पनि छैन। जसले भन्दछ (त्यो भन्दा फरक छ भनी) उसको मोह हटेको छैन। उसको यो भनाई निदाएको पुरूषले विरह गरेजस्तो हो।

**ब्रह्मैवेदं विश्वमित्येव वाणी**
**श्रौती ब्रूतेऽथर्वनिष्ठा वरिष्ठा।**
**तस्मादेतद् ब्रह्ममात्रं हि विश्वं**
**नाधिष्ठानाद्भिन्नतारोपितस्य ॥ २३३॥**

'यो सम्पूर्ण विश्व ब्रह्म नै हो' यस्तो अत्यन्त श्रेष्ठ अर्थव श्रुतिले भन्दछ। यसबाट यो विश्व ब्रह्म मात्रै नै हो किनकी अधिष्ठानबाट आरोपित बस्तुको फरक सत्ता हुन नै सक्दैन।

**सत्यं यदि स्याज्जगदेतदात्मनो-**
**ऽनन्तत्वहानिर्निगमाप्रमाणता ।**
**असत्यवादित्वमपीशितुः स्या-**
**न्नैतत्त्रयं साधु हितं महात्मनाम्॥ २३४॥**

यदि यो जगत सत्य भए आत्माको अनन्तामा दोष आउँछ र श्रुति अप्रमाणिक हुन जान्छ तथा (भगवान् श्रीकृष्णचन्द्र) पनि झुठो नै ठहरिन्छ। यी तीनै कुरा सत्पुरूषको (साधुको) लागि शुभ र हितकर हुँदैन।

**ईश्वरो वस्तुतत्त्वज्ञो न चाहं तेष्ववस्थितः।**
**न च मत्स्थानि भूतानीत्येवमेव व्यचीक्लृपत्॥ २३५॥**

परमार्थ तत्त्वलाई जान्नेले भगवान् श्रीकृष्णचन्द्रले यो निश्चित गर्नुभएको छ कि 'न त म भूत कालमा स्थित हुँ, न उ म मा स्थित छ।'

**यदि सत्यं भवेद्विश्वं सुषुप्तावुपलभ्यताम्।**
**यन्नोपलभ्यते किञ्चिदतोऽसत्स्वप्नवन्मृषा॥ २३६॥**

यदि विश्व सत्य हो त सुषुप्तीमा पनि उसको ज्ञान हुनुपर्ने थियो, तर त्यो समय उसलाई कुनै पनि जानकारी (ज्ञान) हुँदैन, यसबाट यो सपनाको समान असत् र झुटा हो।

**अतः पृथङ्नास्ति जगत्परात्मनः**
**पृथक्प्रतीतिस्तु मृषा गुणादिवत्।**
**आरोपितस्यास्ति किमर्थवत्ता-**
**धिष्ठानमाभाति तथा भ्रमेण॥ २३७॥**

यसरी परमात्माबाट जगत फरक नै छैन, उसको फरक ज्ञान त गुणीबाट गुण आदिको भिन्नताको ज्ञान समान झुट्टा नै हो, आरोपित वस्तुको वास्तविक नै के हो? यो त अधिष्ठान नै भ्रमबाट उसप्रकार देखिन (आभास) जान्छ।

**भ्रान्तस्य यद्यद्भ्रमतः प्रतीतं**
**ब्रह्मैव तत्तद्रजतं हि शुक्तिः।**
**इदंतया ब्रह्म सदैव रूप्यते**
**त्वारोपितं ब्रह्मणि नाममात्रम्॥ २३८॥**

अज्ञानीको अज्ञानताका कारण जुन कुनै ज्ञान भइरहन्छ त्यो सबै ब्रह्म नै हो जसरी भ्रमबाट देखिने चाँदिमा सीपि नै देखिन्छ। [**इदं जगत्** (यो जगत हो)-यसमा] **इदम्** (यो) रूपबाट सधैं ब्रह्म नै भनिन्छ, ब्रह्ममा आरोपित (जगत्) त नाममात्र नै हो।

## ब्रह्म-निरूपण

**अतः परं ब्रह्म सदद्वितीयं**
**विशुद्धविज्ञानघनं निरञ्जनम्।**
**प्रशान्तमाद्यन्तविहीनमक्रियं**
**निरन्तरानन्दरसस्वरूपम् ॥ २३९॥**

यसकारण परब्रह्म सत्, अद्वितीय, शुद्ध विज्ञानघन, निर्मल, शान्त, आदि-अन्तरहित, अक्रिय र सदैव आनन्दस्वरूप हो।

**निरस्तमायाकृतसर्वभेदं**
**नित्यं सुखं निष्कलमप्रमेयम्।**
**अरूपमव्यक्तमनाख्यमव्ययं**
**ज्योतिःस्वयं किञ्चिदिदं चकास्ति॥ २४०॥**

ऊ सबै मायिक भेदबाट रहित छ, नित्य, सुखस्वरूप, कलारहित र प्रमाणादिको अविषय हो तथा उ कुनै अरूप, अव्यक्त, अनाम र अक्षय तेज हो जो आफैंमा प्रकाशित भइरहन्छ।

**ज्ञातृज्ञेयज्ञानशून्यमनन्तं निर्विकल्पकम्।**
**केवलाखण्डचिन्मात्रं परं तत्त्वं विदुर्बुधाः॥ २४१॥**

बुद्धिजन त्यो परमतत्त्वको ज्ञाता, ज्ञान र ज्ञेय यो त्रिपुटीबाट रहित अनन्त, निर्विकल्प, केबल र अखण्ड चैतन्यमात्र जान्दछ।

**अहेयमनुपादेयं मनोवाचामगोचरम्।**
**अप्रमेयमनाद्यन्तं ब्रह्म पूर्णं महन्महः॥ २४२॥**

ऊ ब्रह्म त्याग अथवा ग्रहणको अयोग्य मन-वाणीको अविषय, अप्रमेय, आदि-अन्तरहित, परिपूर्ण तथा महान तेजोमय हो।

## महावाक्य-विचार

**तत्त्वं पदाभ्यामभिधीयमानयो-**
**र्ब्रह्मात्मनोः शोधितयोर्यदीत्थम्।**
**श्रुत्या तयोस्तत्त्वमसीति सम्य-**
**गेकत्वमेव प्रतिपाद्यते मुहुः॥ २४३॥**

'**तत्त्वमसि**' (छान्दो० ६।८) आदि वाक्यको **तत्** र **त्वम्** पदले शुद्ध गरेर भनिएको ब्रह्म र आत्माको श्रुतिद्वारा पटकपटक पूर्ण एकत्त्व प्रतिपादन गर्दछ।

**ऐक्यं तयोर्लक्षितयोर्न वाच्ययो-**
**र्निगद्यतेऽन्योन्यविरुद्धधर्मिणोः ।**
**खद्योतभान्वोरिव राजभृत्ययोः**
**कूपाम्बुराश्योः परमाणुमेर्वोः॥ २४४॥**

ती सूर्य र खद्योत (जुनकिरी), राजा र सेवक, समुन्द्र र कुवा तथा सुमेरू(पहाड) र परमाणुको समान परस्पर विरूद्ध धर्मवालाको एकत्त्व लक्ष्यार्थमा नै भनिएको हो, वाच्यार्थमा होइन।

**तयोर्विरोधोऽयमुपाधिकल्पितो**
**न वास्तवः कश्चिदुपाधिरेषः।**
**ईशस्य माया महदादिकारणं**
**जीवस्य कार्यं शृणु पंचकोशम्॥ २४५॥**

यी दुवैको यो विरोध उपाधिको कारण हो र यो उपाधि कुनै वास्तविक होइन। ईश्वरको उपाधि महतत्त्वको कारणरूप माया हो तथा जीवको उपाधि कार्यरूप पञ्चकोश हो।

**एतावुपाधी परजीवयोस्तयोः**
**सम्यङ्निरासे न परो न जीवः।**
**राज्यं नरेन्द्रस्य भटस्य खेटक-**
**स्तयोरपोहे न भटो न राजा॥ २४६॥**

यो परमात्मा र जीवको उपाधि हो, यसको सबै प्रकारले प्रतिबन्ध भएपछि न परमात्मा रहन्छ न जीवात्मा नै! जसरी राज्य राजाको उपाधि हो तथा ढाल सैनिकको यी दुवै उपाधि नरहदा न कुनै राजा हुन्छ र न योद्धा।

**अथात आदेश इति श्रुतिः स्वयं**
**निषेधति ब्रह्मणि कल्पितं द्वयम्।**
**श्रुतिप्रमाणानुगृहीतयुक्त्या**
**तयोर्निरासःकरणीय एव॥ २४७॥**

ब्रह्मा कल्पित द्वैत '**अथात आदेशो नेति नेति**' (वृह० २। ३। ६) इत्यादि श्रुति आफैंमा निषेध गर्दछ, यसरी श्रुति प्रमाणानुकूल तरिकाले उपर्युक्त उपाधिको प्रतिबन्ध गर्नु नै पर्दछ।

**नेदं नेदं कल्पितत्वान्न सत्यं**
**रज्जौ दृष्टव्यालवत्स्वप्नवच्च।**
**इत्थं दृश्यं साधुयुक्त्या व्यपोह्य**
**ज्ञेयः पश्चादेकभावस्तयोर्यः॥ २४८॥**

यो देखिएको वस्तु कल्पनातित भएको कारण डोरीमा प्रतित भएको सर्प र स्वप्नमा देखिने विभिन्न प्रकारका पदार्थ जस्तै सत्य होइनन्, त्यस्तै बलियो तरिकाले देखिएको रोक्नाले पछि ती (जीव र ईश्वर) को जुन एकभाव बाँचिरहन्छ त्यो नै जान्न योग्य छ।

**ततस्तु तौ लक्षणया सुलक्ष्यौ**
**तयोरखण्डैकरसत्वसिद्धये ।**
**नालं जहत्या न तथाजहत्या**
**किन्तूभयार्थात्मिकयैव भाव्यम्॥ २४९॥**

जीवात्मा र परमात्माको अखण्डैकरसत्ता (खण्डित नभएको सत्ता) को सिद्धिको लागि महावाक्यमा लक्षणा गर्नाले नै उसको ज्ञान हुन्छ। उनको ठिक-ठिक ज्ञान नभएमा जहति-लक्षणाबाट(फरक अर्थ बुझाउने) हुन्छ र न अजहती (वाच्यार्थ नछोडी फरक अर्थ बुझाउने) बाट नै यसको लागि यो ठाउँमा जहत्यजहती(ठिक अर्थ लाग्ने)लक्षणाको प्रयोग गर्नुपर्दछ।

**स देवदत्तोऽयमितीह चैकता**
**विरुद्धधर्मांशमपास्य कथ्यते।**
**यथा तथा तत्त्वमसीति वाक्ये**
**विरुद्धधर्मानुभयत्र हित्वा॥ २५०॥**

'ऊ देवदत्त यी हुन्' यस वाक्यमा ('ऊ' शब्दको परोक्षत्त्व र 'यी' शब्दको अपरोक्षत्त्व यी दुवै) विरूद्ध धर्मको प्रतिबन्ध गरेर जसरी देवदत्तको एकता नै बताइन्छ त्यहि प्रकारले '**तत्त्वमसि**' यो वाक्यमा (**तत्** पदको वाच्य ईश्वरको उपाधि 'माया' र '**त्वम**' पदको वाच्य जीवको उपाधि अन्तःकरण) यी दुवैको विरूद्ध धर्मको प्रतिबन्ध गरेर (शुद्ध चैतन्यांशको) एकता भएको मानिन्छ।

**संलक्ष्य चिन्मात्रतया सदात्मनो-**
**रखण्डभावः परिचीयते बुधैः।**
**एवं महावाक्यशतेन कथ्यते**
**ब्रह्मात्मनोरैक्यमखण्डभावः ॥ २५१॥**

यसप्रकार लक्षणाद्वारा जीवात्मा र परमात्माको चेतनाशको एकताको निश्चय गरेर बुद्धिमानले उनको अखण्ड भावको परिचय (ज्ञान) प्राप्त गर्दछ। यस्ता सैयौँ महावाक्यबाट ब्रह्म र आत्माको अखण्ड एकताको स्पष्ट वर्णन गरिएको छ।



# ब्रह्म-भावना

अस्थूलमित्येतदसन्निरस्य
सिद्धं स्वतो व्योमवदप्रतर्क्यम्।
अतो मृषामात्रमिदं प्रतीतं
जहीहि यत्स्वात्मतया गृहीतम्।
ब्रह्माहमित्येव विशुद्धबुद्ध्या
विद्धि स्वमात्मानमखण्डबोधम्॥ २५२॥

'अस्थूलमनण्वह्रस्वदीर्घम्' (बृह० ३। ८। ७) इत्यादि श्रुतिबाट असत् स्थूलता आदिको निरास गर्नाले आकाशको समान व्यापक अतर्क्य (तर्क गर्न नसकिने) वस्तु आफैंमा सिद्ध हुन जान्छ। यसको लागि आत्मरूपबाट गृहीत (पाएको) यो शरीर आदि झुटो भएको ज्ञान हुन्छ, यसमा आत्मबुद्धिलाई छोडेर 'मै ब्रह्म हुँ' यो शुद्ध बुद्धिले अखण्ड बोधस्वरूप आफ्नो आत्मालाई जान।

मृत्कार्यं सकलं घटादि सततं मृन्मात्रमेवाभित-
स्तद्वत्सज्जनितं सदात्मकमिदं सन्मात्रमेवाखिलम्।
यस्मान्नास्ति सतः परं किमपि तत्सत्यं स आत्मा स्वयं
तस्मात्तत्त्वमसि प्रशान्तममलं ब्रह्माद्वयं यत्परम्॥ २५३॥

जसरी माटोबाट घडा आदि भएपनि माटो नै हो, त्यही किसिमले सत्बाट उत्पन्न भएको यो सत्स्वरूपको सम्पूर्ण जगत् सन्मात्र नै हो। किनकी सत्य भन्दा टाढा अरू केहि पनि छैन तथा उही सत्य र आफैंमा आत्मा पनि हो। यसरी जो शान्त, निर्मल र अद्वितीय परंब्रह्म त्यही तिमी हो।

निद्राकल्पितदेशकालविषयज्ञात्रादि सर्वं यथा
मिथ्या तद्वदिहापि जाग्रति जगत्स्वाज्ञानकार्यत्वतः।
यस्मादेवमिदं शरीरकरणप्राणाहमाद्यप्यसत्
तस्मात्तत्त्वमसि प्रशान्तममलं ब्रह्माद्वयं यत्परम् *॥ २५४॥

---

*लक्ष्मीनारायण प्रेस मुरादावादको प्रतिमा यसको पछि अर्को श्लोक छ-

जसरी सपनामा निन्द्रा दोषबाट कल्पित देश, काल, विषय र ज्ञाता आदि सबै झुट्टा हुन्छन्, त्यही किसिमले जाग्रत अवस्थामा पनि यो जगत, आफ्नो अज्ञानको कार्य भएको कारण झुट्टा नै हो। यसप्रकार किनकी यो शरीर, इन्द्रिय, प्राण, अहंकार आदि सबै असत्य हुन्, त्यसकारण तिमी त्यही परब्रह्म हौ, जो शान्त, निर्मल र अद्वितीय छ।

**जातिनीतिकुलगोत्रदूरगं**
**नामरूपगुणदोषवर्जितम् ।**
**देशकालविषयातिवर्ति यद्**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २५५॥**

जुन जाति, नीति, कुल र गोत्रबाट टाढा छ, नाम, रूप, गुण र दोषबाट रहित तथा देश, काल र बस्तुबाट पनि भिन्न छ तिमी त्यही ब्रह्म हौ यस्तो भावना आफ्नो अन्तकरणमा राख।

**यत्परं सकलवागगोचरं**
**गोचरं विमलबोधचक्षुषः।**
**शुद्धचिद्घनमनादिवस्तु यद्**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २५६॥**

जुन प्रवृत्तिबाट टाढा र वाणीको अविषय हो, निर्मल ज्ञानको आँखाबाट जान्न सकिन्छ तथा शुद्ध चिद्घन अनादि वस्तु हो तिमी त्यही ब्रह्म हौ यस्तो भावना आफ्नो अन्तः करणमा राख (गर)।

**षड्भिरूर्मिभिरयोगि योगिहृद्-**
**भावितं न करणैर्विभावितम्।**
**बुद्ध्यवेद्यमनवद्यभूति यद्**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २५७॥**

---

यत्र भ्रान्त्या कल्पितं तद्विवेके तत्तन्मात्रं नैव तस्माद्विभिन्नम्।
स्वप्ने नष्टे स्वप्नविश्वं विचित्रं स्वस्माद्भिन्नं किन्नु दृष्टं प्रबोधे॥

जसबाट कुनै वस्तु भ्रमबाट कल्पित हुन्छ विचार भएपछि त्यो तद्रुप नै ज्ञान हुन्छ उसबाट भिन्न छैन। स्वप्नको नष्ट भएपछि जाग्रत अवस्थामा कस्तो विचित्र स्वप्न प्रपञ्च आफुभन्दा फरक देख्न सकिन्छ?

क्षुधा - पिपासा आदि छ डरलाग्दो (दुःख) बाट रहित योगीजन जसको हृदयमा ध्यान गर्दछन् जसलाई इन्द्रियले ग्रहण गर्न सकिदैन तथा मन बुद्धिबाट अगम्य र स्तुत्य ऐश्वर्यशाली छ तिमी त्यही ब्रह्म हौ यस्तो भावना चित्तमा राख।

**भ्रान्तिकल्पितजगत्कलाश्रयं**
**स्वाश्रयं च सदसद्विलक्षणम्।**
**निष्कलं निरुपमानमृद्धिमद्**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २५८॥**

जो यो भ्रान्ति कल्पित जगत्रूप कलाको आधार छ आफू आफैंमा आश्रय स्थित हो, सत् र असत् दुवैबाट फरक छ तथा निरवयब (हिस्सा नभएको) उपमा रहित र परमऐश्वर्य सम्पन्न हो त्यो परमब्रह्म नै तिमी हौ, यस्तो चित्तमा चिन्तन गर।

**जन्मवृद्धिपरिणत्यपक्षय-**
**व्याधिनाशनविहीनमव्ययम् ।**
**विश्वसृष्ट्यवनघातकारणं**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २५९॥**

जो जन्म, बृद्धि (बढ्नु), परिणति (बदलिनु) अपक्षय, व्याधि र नाश शरीरका यी छ विकारबाट रहित र अविनाशी छ तथा विश्वको सृष्टि, पालन र विनाशको कारण हो त्यो ब्रह्म नै तिमी हौ यस्तो भावना आफ्नो मनमा राख।

**अस्तभेदमनपास्तलक्षणं**
**निस्तरङ्गजलराशिनिश्चलम् ।**
**नित्यमुक्तमविभक्तमूर्ति यद्**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २६०॥**

जो भेदरहित र अपरिणामी स्वरूप हो, तरंगहिन तलैया (पानीको) समान निश्चल छ तथा नित्य मुक्त र विभाग रहित हो त्यो ब्रह्म नै तिमी हौ- यस्तो मनमा विचार गर।

**एकमेव सदनेककारणं**
**कारणान्तरनिरासकारणम् ।**
**कार्यकारणविलक्षणं स्वयं**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २६१ ॥**

जुन एक भएर पनि विभिन्न कारण तथा अन्य कारणको निषेधको कारण हो, तर जो आफैंमा कार्यकारण भावबाट अलग छ त्यो ब्रह्म नै तिमी हौ यस्तो मनन मनमा गर।

**निर्विकल्पकमनल्पमक्षरं**
**यत्क्षराक्षरविलक्षणं परम्।**
**नित्यमव्ययसुखं निरञ्जनं**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २६२ ॥**

जो निर्विकल्प, महान र अविनाशी हो, क्षर (शरीर) र अक्षर (जीव)बाट भिन्न छ तथा नित्य, अव्यय, आनन्दस्वरूप र निष्कलंक छ त्यो ब्रह्म नै तिमी हौ यस्तो भावना हृदयमा गर।

**यद्विभाति सदनेकधा भ्रमा-**
**न्नामरूपगुणविक्रियात्मना ।**
**हेमवत्स्वयमविक्रियं सदा**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २६३ ॥**

जो सधै सत् र सुवर्णको समान आफैंमा निर्विकार छ तर पनि भ्रमवस (उसको विकार कटक-कुण्डलादिको समान) विभिन्न नाम, रूप, गुण र विकारको रूपमा देखिन्छ त्यो ब्रह्म नै तिमी हौ यस्तो आफ्नो चित्तले चिन्तन गर।

**यच्चकास्त्यनपरं परात्परं**
**प्रत्यगेकरसमात्मलक्षणम् ।**
**सत्यचित्सुखमनन्तमव्ययं**
**ब्रह्म तत्त्वमसि भावयात्मनि॥ २६४ ॥**

जो अनपर रूपमा (अर्थात जहाँबाट पर अरू कुनै नहोस् यसप्रकार) प्रकाशमान छ पर (अव्यक्त प्रकृति) बाट पनि पर छ, प्रत्यक्, एकरस र सबैको अन्तरात्मा हो तथा सच्चिदानन्दस्वरूप, अनन्त र अव्यय छ त्यो ब्रह्म नै तिमी हौ यस्तो आफ्नो अन्तकरणमा भावना गर।

**उक्तमर्थमिममात्मनि स्वयं**
**भावय प्रथितयुक्तिभिर्धिया।**
**संशयादिरहितं कराम्बुवत्**
**तेन तत्त्वनिगमो भविष्यति॥ २६५॥**

यी पहिला बताइएका विषयको आफ्नो बुद्धिबाट (वेदान्तको) प्रसिद्ध युक्ती (उपाय) द्वारा आफ्नो चित्तमा आफैं बिचार गर। यसबाट हातमा भएको पानी समान सशंय-विपर्यय (उल्टोपाल्टो) बाट रहित तत्त्वबोध हुन जान्छ।

**स्वं बोधमात्रं परिशुद्धतत्त्वं**
**विज्ञाय सङ्घे नृपवच्च सैन्ये।**
**तदात्मनैवात्मनि सर्वदा स्थितो**
**विलापय ब्रह्मणि दृश्यजातम्॥ २६६॥**

सेनाको विचमा रहेको राजाको सरह भूतको संघातरूप शरीरमा स्थित यो स्वयम् प्रकाशस्वरूप विशुद्ध तत्त्वलाई जानेर सदा तन्मयभावबाट स्वरूपमा स्थित रहेर सम्पूर्ण दृश्य वर्गको त्यो ब्रह्ममा नै लिन गर।

**बुद्धौ गुहायां सदसद्विलक्षणं**
**ब्रह्मास्ति सत्यं परमद्वितीयम्।**
**तदात्मना योऽत्र वसेद्गुहायां**
**पुनर्न तस्याङ्गगुहाप्रवेशः॥ २६७॥**

त्यो सत् असत्को विलक्षण अद्वितीय सत्य परब्रह्म बुद्धिरूप गुहामा (हृदयभित्र) बसेको हुन्छ। जो यो हृदयमा एकरूप भएर रहन्छ, हे बाबु! उसको फेरी शरीररूपी कन्दरामा प्रवेश हुदैन। (अर्थात ऊ फेरी जन्म ग्रहण गर्दैन)

## वासना-त्याग

**ज्ञाते वस्तुन्यपि बलवती वासनानादिरेषा**
**कर्ता भोक्ताप्यहमिति दृढा यास्य संसारहेतुः।**
**प्रत्यग्दृष्ट्यात्मनि निवसता सापनेया प्रयत्नान्**
**मुक्तिं प्राहुस्तदिह मुनयो वासनातानवं यत्॥ २६८॥**

आत्मवस्तुको ज्ञान भएपछि पनि जो 'म कर्ता र भोक्ता हुँ' यस रूपबाट दृढ भएर (जन्ममरण रूप) संसारको कारण हुन्छ, त्यो प्रवल अनादि वासनालाई प्रत्यक् (आन्तरिक) दृष्टिबाट आत्मस्वरूपमा स्थित भएर प्रयत्नपूर्वक हटाउनुपर्दछ; किनकी यस संसारमा वासनाको क्षीणता नै मुनिहरूले मुक्ति भनेका छन्।

**अहंममेति यो भावो देहाक्षादावनात्मनि।**
**अध्यासोऽयं निरस्तव्यो विदुषा स्वात्मनिष्ठया॥ २६९॥**

शरीर इन्द्रिय आदि अनात्म वस्तुमा जीवको जुन अहम् अथवा मेरो-मेरो भन्ने भाव छ यही अध्यास हो। विद्वानले आत्मनिष्ठाद्वारा यसलाई हटाउनु पर्दछ।

**ज्ञात्वा स्वं प्रत्यगात्मानं बुद्धितद्वृत्तिसाक्षिणम्।**
**सोऽहमित्येव सद्वृत्त्यानात्मन्यात्ममतिं जहि॥ २७०॥**

प्रत्यगात्मरूप आ-आफ्नो बुद्धि र उसको वृत्तिको साक्षी जानेर 'म उही हुँ' यस्तो सदाचारी वृत्तिबाट अनात्मबस्तुमा फैलिएको आत्म बुद्धिको त्याग गर्नु।

**लोकानुवर्तनं त्यक्त्वा त्यक्त्वा देहानुवर्तनम्।**
**शास्त्रानुवर्तनं त्यक्त्वा स्वाध्यासापनयं कुरु॥ २७१॥**

लोकवासना, शरीरवासना र शास्त्रवासना यी तीनलाई छाडेर आत्मामा भएको संसारको अध्यासको त्याग गर।

**लोकवासनया जन्तोः शास्त्रवासनयापि च।**
**देहवासनया ज्ञानं यथावन्नैव जायते॥ २७२॥**

लोक वासना, शास्त्रवासना र शरीर वासना- यी तीनको कारणले नै जीवलाई ठिक-ठिक ज्ञान हुँदैन।

**संसारकारागृहमोक्षमिच्छो-**
**रयोमयं पादनिबद्धशृङ्खलम्।**
**वदन्ति तज्ज्ञाः पटुवासनात्रयं**
**योऽस्माद्विमुक्तः समुपैति मुक्तिम्॥ २७३॥**

संसाररूप कारागारबाट छुटकारा पाउन इच्छा भएको पुरूषको लागि ब्रह्मज्ञ पुरूष यी प्रवल त्रय वासनालाई गोडामा परेको फलामको जंजिर बताउछन्। जसले यसबाट छुटकारा पाउँछ उसैले मोक्ष पाउन सक्दछ।

**जलादिसम्पर्कवशात्प्रभूत-**
**दुर्गन्धधूतागरुदिव्यवासना।**
**सङ्घर्षणेनैव विभाति सम्य-**
**ग्विधूयमाने सति बाह्यगन्धे॥ २७४॥**
**अन्तःश्रितानन्तदुरन्तवासना-**
**धूलीविलिप्ता परमात्मवासना।**
**प्रज्ञातिसङ्घर्षणतो विशुद्धा**
**प्रतीयते चन्दनगन्धवत्स्फुटा॥ २७५॥**

जसरी पानी (चिसोपना) आदिको संसर्गबाट (अन्य कुनै) अत्यन्त दुर्गन्ध युक्त वस्तुको लेप हुन जानाले दवेर रहेको अगरू (कृष्णाधुप) को दिव्य सुगन्ध सर्घषण (घोटेर) बाट नै बाह्य दुर्गन्ध हटेपछि फेरी राम्रोसँग देखिन जान्छ, त्यस्तै किसिमले अन्तकरणमा स्थित धेरै दुर्वासनारूपी धुलाले ढाकिएको परमात्मा वासना बुद्धिको अत्यन्त संघर्षबाट शुद्ध भएर चन्दनको गन्धसमान नै स्पष्ट ज्ञान हुन लाग्दछ।

**अनात्मवासनाजालैस्तिरोभूतात्मवासना ।**
**नित्यात्मनिष्ठया तेषां नाशे भाति स्वयं स्फुटा॥ २७६ ॥**

अनात्मवासनाको समूहमा आत्मवासना लुकेको हुन्छ, यसकारण निरन्तर आत्मा निष्ठामा स्थित रहनाले त्यसको नाश भएपछि ऊ स्पष्ट देखिन (प्रकाशित)लाग्दछ।

**यथा यथा प्रत्यगवस्थितं मन-**
**स्तथा तथा मुञ्चति बाह्यवासनाः।**
**निःशेषमोक्षे सति वासनाना-**
**मात्मानुभूतिः प्रतिबन्धशून्या॥ २७७ ॥**

मन जसरी जसरी अन्तर्मुख हुन जान्छ त्यसरी त्यसरी नै उसले बाह्य वासनाको छोड्दै जान्छ, जुन समय वासनाबाट पूर्णतया छुटकारा हुन्छ त्यो समयमा आत्माको प्रतिबन्धशून्य अनुभव हुन लाग्दछ।

## अध्यास-निरास (झुटो ज्ञान वा कल्पना हटाउनु)

**स्वात्मन्येव सदा स्थित्या मनो नश्यति योगिनः।**
**वासनानां क्षयश्चातः स्वाध्यासापनयं कुरु॥ २७८ ॥**

(चित्तवृत्तिलाई रोकेर) निरन्तर आत्मस्वरूपमा नै स्थिर रहनाले योगीको मन नष्ट हुन जान्छ र उसको वासनाको पनि नाश हुन जान्छ यसकारण आफ्नो झुटो ज्ञान वा कल्पनालाई हटाउ।

**तमो द्वाभ्यां रजः सत्त्वात्सत्त्वं शुद्धेन नश्यति।**
**तस्मात्सत्त्वमवष्टभ्य स्वाध्यासापनयं कुरु॥ २७९ ॥**

रजोगुण र सत्त्वगुणबाट तम, सत्त्वगुणबाट रज र शुद्ध सत्त्वबाट सत्त्वगुणको नाश हुन्छ, यसकारण (यसरी) शुद्ध सत्त्वको आश्रय लिएर आफ्नो झुटो ज्ञान वा कल्पनालाई छाड।

**प्रारब्धं पुष्यति वपुरिति निश्चित्य निश्चलः।**
**धैर्यमालम्ब्य यत्नेन स्वाध्यासापनयं कुरु॥ २८०॥**

प्रारब्धले नै शरीरको पोषण गर्दछ, त्यस्तो निश्चय गरेर निश्चल भावबाट धैर्यधारण गरी प्रयासपूर्वक आफ्नो झुटो ज्ञान वा कल्पनालाई छाड।

**नाहं जीवः परं ब्रह्मेत्यतद्व्यावृत्तिपूर्वकम्।**
**वासनावेगतः प्राप्तस्वाध्यासापनयं कुरु॥ २८१॥**

म जीव होइन, परब्रह्म हुँ यस प्रकार आफुमा जीवभावको निषेध गरेर वासना त्रयको वेगबाट प्राप्त भएको जीवत्त्वको झुटो ज्ञान वा कल्पनालाई छाड।

**श्रुत्या युक्त्या स्वानुभूत्या ज्ञात्वा सार्वात्म्यमात्मनः।**
**क्वचिदाभासतः प्राप्तस्वाध्यासापनयं कुरु॥ २८२॥**

श्रुति, युक्ति र आफ्नो अनुभवबाट आत्मालाई सर्वात्मा जानेर कहिले भ्रमबाट प्राप्त भएको आफ्नो झुटो ज्ञान वा कल्पनालाई छाड।

**अनादानविसर्गाभ्यामीषन्नास्ति क्रिया मुनेः।**
**तदेकनिष्ठया नित्यं स्वाध्यासापनयं कुरु॥ २८३॥**

बोधवान् मुनिको कुनै पनि वस्तु लिनु वा दिनु नहुनाले कुनै पनि कर्तव्य हुँदैन, यसकारण निरन्तर आत्मा निष्ठाद्वारा आत्मामा भएको झुटो ज्ञान वा कल्पनालाई छाड।

**तत्त्वमस्यादिवाक्योत्थब्रह्मात्मैकत्वबोधतः।**
**ब्रह्मण्यात्मत्वदार्ढ्याय स्वाध्यासापनयं कुरु॥ २८४॥**

'**तत्त्वमसि**' (छान्दो० ६। ८) आदि महावाक्यबाट भएको ब्रह्म र आत्माको एकत्त्व ज्ञानबाट ब्रह्ममा आत्मबुद्धिलाई दृढ गर्नको लागि आफ्नो झुटो ज्ञान वा कल्पनालाई छोड।

**अहंभावस्य देहेऽस्मिन्निःशेषविलयावधि।**
**सावधानेन युक्तात्मा स्वाध्यासापनयं कुरु॥ २८५॥**

यो शरीरमा जुन अहंभाव (मेरोपना) भइरहेको छ, त्यसको जबसम्म पूर्णरूपमा लय हुँदैन तबसम्म सावधानपूर्वक युक्तात्मा (ठिक किसिमले) आफ्नो झुटो ज्ञान वा कल्पनालाई छोड।

**प्रतीतिर्जीवजगतोः स्वप्नवद्भाति यावता।**
**तावन्निरन्तरं विद्वन्स्वाध्यासापनयं कुरु॥ २८६॥**

जबसम्म सपना समान जीव र जगतको ज्ञान रहिरहन्छ (भइरहन्छ) तबसम्म हे विद्वन्! आफ्नो आत्मामा भएको यो झुटो ज्ञान वा कल्पनालाई छोड्दै गर (जाउ)।

**निद्राया लोकवार्तायाः शब्दादेरपि विस्मृतेः।**
**क्वच्चिन्नावसरं दत्त्वा चिन्तयात्मानमात्मनि॥ २८७॥**

निन्द्रा, लौकिक कुराकानी, अथवा शब्दआदि कुनै पनि तरिकाले आत्म विस्मृत्तिको अवसर नदिई अर्थात् कुनै पनि कारणबाट स्वरूपलाई नभुलेर आफ्नो अन्तकरणमा निरन्तर आत्माको चिन्तन गर।

**मातापित्रोर्मलोद्भूतं मलमांसमयं वपुः।**
**त्यक्त्वा चाण्डालवद्दूरं ब्रह्मीभूय कृती भव॥ २८८॥**

आमाबावुको मलबाट (रज वीर्यबाट) उत्पन्न भएको तथा मल मासुले भरिएको यो शरीर चण्डालको समान टाढैबाट छाडेर ब्रह्म भावमा स्थित भएर धन्य-धन्य होउ।

**घटाकाशं महाकाश इवात्मानं परात्मनि।**
**विलाप्याखण्डभावेन तूष्णीं भव सदा मुने॥ २८९॥**

हे मुने! (घटाकास नास भएपनि) जसरी घटाकास महाकाशमा मिल्न जान्छ। त्यसरी नै जीवात्माको परमात्मामा लीन (विलय) गरेर सधै अखण्ड भावबाट मौन भएर (चुप लागेर) रही रह।

**स्वप्रकाशमधिष्ठानं स्वयंभूय सदात्मना।**
**ब्रह्माण्डमपि पिण्डाण्डं त्यज्यतां मलभाण्डवत्॥ २९०॥**

जगतको अधिष्ठान जो स्वयंप्रकाश परब्रह्म हो, त्यो सत्य स्वरूपबाट आफैं एक भएर पिण्ड र ब्रह्माण्ड दुवै उपाधिको मलबाट भरिएको भाँडोको समान छाडिदेउ।

**चिदात्मनि सदानन्दे देहारूढामहंधियम्।**
**निवेश्य लिङ्गमुत्सृज्य केवलो भव सर्वदा॥ २९१॥**

शरीरमा व्याप्त भएको अहम्बुद्धिको नित्यानन्दस्वरूप चिदात्मामा स्थित गरेर लिङ्ग शरीरको अभिमान छाडी सधै अद्वितीय रूपमा स्थित होउ।

**यत्रैष जगदाभासो दर्पणान्तः पुरं यथा।**
**तद्ब्रह्माहमिति ज्ञात्वा कृतकृत्यो भविष्यसि॥ २९२॥**

जसमा यो जगतको आभास ऐनामा देखिएको नगरको समान ज्ञान (प्रतित) भइरहेको छ त्यो ब्रह्म नै म हुँ, त्यस्तो जान्नाले तिमी धन्य धन्य हुन जान्छौ।

**यत्सत्यभूतं निजरूपमाद्यं**
**चिदद्वयानन्दमरूपमक्रियम् ।**
**तदेत्य मिथ्यावपुरुत्सृजेत-**
**च्छैलूषवद्वेषमुपात्तमात्मनः ॥ २९३॥**

जो चेतन, अद्वितीय, आनन्दस्वरूप र निष्क्रिय ब्रह्म सत्य स्वरूप तथा आफ्नो आद्य (पहिला मूल) स्वरूप हो उसलाई प्राप्त भएर नटक (नाच्ने मान्छे) सरह धारण गरिएको यो शरीररूपी झुटो आवरणको आस्था छाडिदेउ।

## अहंपदार्थ-निरूपण

**सर्वात्मना दृश्यमिदं मृषैव**
**नैवाहमर्थः क्षणिकत्वदर्शनात्।**
**जानाम्यहं सर्वमिति प्रतीतिः**
**कुतोऽहमादेः क्षणिकस्य सिध्येत्॥ २९४॥**

यो देखिएको संसार सधैँ झुटा नै हो। यसको क्षणिकता देख्नमा आउँछ, यसकारण यो अहं पदार्थ हुन सक्दैन। त्यसकारण यो क्षणिक अहंकारादिको 'म सबै कुरा जान्दछु'-यस्तो ज्ञान कसरी हुन सक्दछ?

**अहंपदार्थस्त्वहमादिसाक्षी**
**नित्यं सुषुप्तावपि भावदर्शनात्।**
**ब्रूते ह्यजो नित्य इति श्रुतिः स्वयं**
**तत्प्रत्यगात्मा सदसद्विलक्षणः॥ २९५॥**

अहं पदार्थ त अहंकार आदिको साक्षी हो, किनकी उसको सत्ता सुषुप्तिमा पनि देखिन्छ। स्वयं श्रुति पनि उसलाई '**अजो नित्यः**' यस्तो भन्दछ। त्यसकारण त्यो प्रत्यगात्मा (परमेश्वर) हो र सत् असत्बाट विलक्षण (अनौठो) छ।

**विकारिणां सर्वविकारवेत्ता**
**नित्योऽविकारो भवितुं समर्हति।**
**मनोरथस्वप्नसुषुप्तिषु स्फुटं**
**पुनः पुनर्दृष्टमसत्त्वमेतयोः॥ २९६॥**

अहंकार आदि विकारी वस्तुको सबै विकारको जान्नेवाला नित्य तथा अविकारी नै हुनुपर्दछ। मनोरथ, सपना र सुषुप्ति समयमा यी स्थूल सूक्ष्म दुवै शरीरको अभाव पटक पटक स्पष्ट देखिएको छ। (अतः यो अहं पदार्थ आत्मा कसरी हुन सक्छ?)

**अतोऽभिमानं त्यज मांसपिण्डे**
**पिण्डाभिमानिन्यपि बुद्धिकल्पिते।**
**कालत्रयाबाध्यमखण्डबोधं**
**ज्ञात्वा स्वमात्मानमुपैहि शान्तिम्॥ २९७॥**

यसकारण (यसरी) यो मासुको पिण्ड र यसको बुद्धिकल्पना अभिमानी जीवमा अहंबुद्धि छाडेर आफ्नो आत्माको तीनै कालमा बाधा नभएको र अखण्ड ज्ञानस्वरूप जानेर शान्ति प्राप्त गर।

**त्यजाभिमानं कुलगोत्रनाम-**
**रूपाश्रमेष्वार्द्रशवाश्रितेषु ।**

**लिङ्गस्य धर्मानपि कर्तृतादीं-**
**स्त्यक्त्वा भवाखण्डसुखस्वरूपः ॥ २९८ ॥**

यो जलथल मासु पिण्डमा आश्रित रहने कुल, गोत्र, नाम, रूप र आश्रमको अभिमान छोड तथा कर्तापन भोक्तापन आदि लिङ्ग शरीर धर्मको पनि छाडेर अखण्ड आनन्दस्वरूप होउ।

## अहंकार-निन्दा

**सन्त्यन्ये प्रतिबन्धाः पुंसः संसारहेतवो दृष्टाः।**
**तेषामेकं मूलं प्रथमविकारो भवत्यहङ्कारः ॥ २९९ ॥**

पुरूषको यो संसार बन्धनको प्राप्तिको कारणरूप अरू पनि धेरै प्रतिवन्ध छ, तर ती सबैको मूल पहिलो विकार अहंकार नै हो (किनकी अन्य सबै अनात्मभावको प्रार्दुभाव यसैबाट हुन्छ)।

**यावत्स्यात्स्वस्य सम्बन्धोऽहङ्कारेण दुरात्मना।**
**तावन्न लेशमात्रापि मुक्तिवार्ता विलक्षणा ॥ ३०० ॥**

जबसम्म यो दुरात्मा अहंकारबाट आत्माको सम्बन्ध छ तबसम्म मुक्ति जस्तो विलक्षण कुराको थोरै मात्र पनि आशा नराखे हुन्छ।

**अहङ्कारग्रहान्मुक्तः स्वरूपमुपपद्यते।**
**चन्द्रवद्विमलः पूर्णः सदानन्दः स्वयंप्रभः ॥ ३०१ ॥**

अहंकाररूपी ग्रह (राहु) बाट मुक्ति भएपछि चन्द्रमाको सरह आत्मा, निर्मल, पूर्ण एवं नित्यान्द स्वरूप आफैंमा प्रकाश भएर आफ्नो स्वरूपको प्राप्त हुन जान्छ।

**यो वा पुरे सोऽहमिति प्रतीतो**
**बुद्ध्या विक्लृप्तस्तमसातिमूढया।**
**तस्यैव निःशेषतया विनाशे**
**ब्रह्मात्मभावः प्रतिबन्धशून्यः ॥ ३०२ ॥**

अज्ञानबाट धेरै मोहित बुद्धिको कल्पनाबाट यो शरीरमा नै जुन 'यो

नै म हुँ' यस्तो ज्ञान भइरहन्छ त्यसको सबै नाश भएपछि ब्रह्ममा निर्बाध आत्मभाव हुन जान्छ।

**ब्रह्मानन्दनिधिर्महाबलवताहङ्कारघोराहिना**
**संवेष्ट्यात्मनि रक्ष्यते गुणमयैश्चण्डैस्त्रिभिर्मस्तकैः।**
**विज्ञानाख्यमहासिना द्युतिमता विच्छिद्य शीर्षत्रयं**
**निर्मूल्याहिमिमं निधिं सुखकरं धीरोऽनुभोक्तुं क्षमः॥ ३०३॥**

ब्रह्मानन्दरूपी परमधनको अहंकार रूप ठुलो सर्पले आफ्नो सत्त्व, रज, तम रूप तीन प्रचण्ड शिरमा छोपेर (ढाकेर) राखेको हुन्छ। जब विवेकी पुरूष अनुभव ज्ञानरूप चम्किलो ठुलो हतियारबाट यी तीनै शिरको काटेर सर्पको नास गरिदिन्छ, तव ऊ यो परम आनन्ददायी सम्पत्तिको भोग (उपयोग) गर्न सक्दछ।

**यावद्वा यत्किञ्चिद्विषदोषस्फूर्तिरस्ति चेद्देहे।**
**कथमारोग्याय भवेत्तद्वदहन्तापि योगिनो मुक्त्यै॥ ३०४॥**

जबसम्म शरीरमा विषको थोरै पनि दोष रहन्छ तवसम्म ऊ उसबाट (रोग) निरोग कसरी रहन देला? त्यस्तै प्रकार योगीको मुक्तिको मार्गमा अहंकारको थोरै मात्र लेस पनि ठुलो प्रतिवन्धक हुन जान्छ।

**अहमोऽत्यन्तनिवृत्त्या तत्कृतनानाविकल्पसंहृत्या।**
**प्रत्यक्तत्त्वविवेकादयमहमस्मीति विन्दते तत्त्वम्॥ ३०५॥**

अहंकारको निःशेष निवृत्तिबाट त्यसबाट उत्पन्न भएको विभिन्न प्रकारका विकल्पको नाश भएर गएपछि आत्म तत्त्वको विवेक भएपछि 'यो आत्मा नै म हुँ' यस्तो तत्त्वबोध प्राप्त हुन जान्छ।

**अहंकर्तर्यस्मिन्नहमिति मतिं मुंच सहसा**
**विकारात्मन्यात्मप्रतिफलजुषि स्वस्थितिमुषि।**
**यदध्यासात्प्राप्ता जनिमृतिजरादुःखबहुला**
**प्रतीचश्चिन्मूर्तेस्तव सुखतनोः संसृतिरियम्॥ ३०६॥**

यो विकारात्मक आत्मप्रतिविम्बयुक्त र स्वरूपलाई छोपिएकोले अहंकारमा अहंबुद्धिको चाडै नै छाडिदिन्छ। यसको अध्यास (झुटो ज्ञान वा कल्पना)बाट नै तिमी 'चैतन्यमूर्ति' आनन्दस्वरूप प्रत्यगात्मा (परमेश्वर) को जन्म, मरण, बुढ्यौली आदि विभिन्न प्रकारको दुःखबाट पूर्ण यो संसार बन्धन प्राप्त भएको हो।

**सदैकरूपस्य चिदात्मनो विभो-**
**रानन्दमूर्तेरनवद्यकीर्तेः ।**
**नैवान्यथा क्वाप्यविकारिणस्ते**
**विनाहमध्यासममुष्य संसृतिः ॥ ३०७ ॥**

यो अहंकार रूप झुटो ज्ञान वा कल्पना (अध्यास) को विना तिमी सधै एक रूप, चिदात्मा, व्यापक, आनन्दस्वरूप, पवित्रकीर्ति र अविकारी आत्माको अरू कुनै प्रकार संसार बन्धनको प्राप्त हुन सक्दैन।

**तस्मादहङ्कारमिमं स्वशत्रुं**
**भोक्तुर्गले कण्टकवत्प्रतीतम्।**
**विच्छिद्य विज्ञानमहासिना स्फुटं**
**भुङ्क्ष्वात्मसाम्राज्यसुखं यथेष्टम्॥ ३०८ ॥**

यसकारण हे विद्वान! खाना खाने पुरूषको गलामा(घाँटीमा) काँडाको समान(सरह) रोकिने यो अहंकार रूप आफ्नो शत्रुको विज्ञानरूप महाखड्गबाट राम्रो तरिकाले काटेर आत्म-साम्राज्य सुखको पुरा भोग गर।

**ततोऽहमादेर्विनिवर्त्य वृत्तिं**
**सन्त्यक्तरागः परमार्थलाभात्।**
**तूष्णीं समास्स्वात्मसुखानुभूत्या**
**पूर्णात्मना ब्रह्मणि निर्विकल्पः ॥ ३०९ ॥**

फेरी अहंकार आदिको कर्तृत्व, भोक्तृत्व आदि वृत्तियलाई हटाएर परमार्थ तत्त्वको प्राप्तिबाट रागरहित भएर आत्मानन्दको अनुभवबाट ब्रह्मभावमा पुर्णरूपमा स्थित भएर निर्विकल्प र मौन (चुप) भएर रह।

**समूलकृत्तोऽपि महानहं पुन-**
**र्व्युल्लेखितः स्याद्यदि चेतसा क्षणम्।**
**सञ्जीव्य विक्षेपशतं करोति**
**नभस्वता प्रावृषि वारिदो यथा॥३१०॥**

यो बलियो अहंकार जड मूलदेखि (जरासहितको डाँठ) नष्ट गरिदिए पछि पनि यदि एक क्षण मात्र पनि चित्तको सम्पर्क गरेमा फेरी प्रकट भएर सयौं उत्पात उत्पन्न गरिदिन्छ, जसरी कि वर्षाकालमा वायु (हावा)बाट जम्मा भएको बादल।

## क्रिया, चिन्ता र वासनाको त्याग

**निगृह्य शत्रोरहमोऽवकाशः**
**क्वचिन्न देयो विषयानुचिन्त्या।**
**स एव संजीवनहेतुरस्य**
**प्रक्षीणजम्बीरतरोरिवाम्बु ॥३११॥**

यो अहंकार रूप शत्रुको निग्रह गरेपछि फेरी विषय चिन्तनद्वारा यसको शिर उठाउने मौका कहिल्यै दिन हुँदैन, किनकी नष्ट भएको जम्वीर (ज्यामिरको रूख) को बोटमा पानीको समान यसको फेरी पलाउनेको कारण यो विषय चिन्तन नै हो।

**देहात्मना संस्थित एव कामी**
**विलक्षणः कामयिता कथं स्यात्।**
**अतोऽर्थसन्धानपरत्वमेव**
**भेदप्रसक्त्या भवबन्धहेतुः॥३१२॥**

जो पुरूष देहात्म बुद्धिमा स्थित छ, उही कामनावाला हुन्छ। जसको शरीरसँग सम्बन्ध रहदैन त्यस्तो विलक्षण आत्मा सकाम हुन सक्दछ? यसको लागि भेद शक्तिको कारण हुनाले विषय चिन्तनमा लागि रहनु नै संसार वन्धनको मुख्य कारण हो।

**कार्यप्रवर्धनाद्बीजप्रवृद्धिः परिदृश्यते।**
**कार्यनाशाद्बीजनाशस्तस्मात्कार्यं निरोधयेत्॥ ३१३॥**

कार्य बढ्नाले उसको बिजको वृद्धि भएको देखिन्छ र कार्यको नाश भएपछि वीज पनि नष्ट हुन्छ, यसको लागि कार्यको नै नाश गर्नुपर्दछ।

**वासनावृद्धितः कार्यं कार्यवृद्ध्या च वासना।**
**वर्धते सर्वथा पुंसः संसारो न निवर्तते॥ ३१४॥**

वासना बढ्नाले कार्य बढ्छ र कार्य बढ्नाले वासना बढ्छ, यसप्रकार मनुष्यको संसार बन्धन कसैगरी पनि छुट्दैन।

**संसारबन्धविच्छित्त्यै तद्द्वयं प्रदहेद्यतिः।**
**वासनावृद्धिरेताभ्यां चिन्तया क्रियया बहिः॥ ३१५॥**

यसकारण संसार बन्धनको काट्नको लागि मुनि यी दुबैको नाश गर। विषयको चिन्ता र बाह्य-क्रिया यसबाट नै वासनाको वृद्धि हुन्छ।

**ताभ्यां प्रवर्धमाना सा सूते संसृतिमात्मनः।**
**त्रयाणां च क्षयोपायः सर्वावस्थासु सर्वदा॥ ३१६॥**
**सर्वत्र सर्वतः सर्वं ब्रह्ममात्रावलोकनम्।**
**सद्भाववासनादार्ढ्यात्तत्त्रयं लयमश्नुते॥ ३१७॥**

यी दुबैबाट बढेर त्यो वासना आत्माको लागि संसाररूप बन्धन उत्पन्न गर्दछ। यी तीनैको नाशको उपाय सबै अवस्थामा सदा सबै ठाउँमा सबैलाई ब्रह्म मात्र देख्नु नै हो। यो ब्रह्ममय वासनाले दृढ भएपछि यी तीनैको लय हुन जान्छ।

**क्रियानाशे भवेच्चिन्तानाशोऽस्माद्वासनाक्षयः।**
**वासनाप्रक्षयो मोक्षः सा जीवन्मुक्तिरिष्यते॥ ३१८॥**

क्रियाको नष्ट भएर जानाले चिन्ताको नाश हुन्छ र चिन्ताको नाशले वासनाको क्षय हुन्छ, यस वासना क्षयको नाम नै मोक्ष हो र यसैलाई जीवमुक्ति भनिएको छ।

**सद्वासनास्फूर्तिविजृम्भणे सति**
**ह्यसौ विलीना त्वहमादिवासना।**
**अतिप्रकृष्टाप्यरुणप्रभायां**
**विलीयते साधु यथा तमिस्त्रा॥ ३१९॥**

सूर्यको प्रभाको उदय भएपछि जसरी अत्यन्त घोर अधेरी रातको सर्वथा नाश भएर जान्छ त्यसै गरी ब्रह्म वासनाको स्फूर्तिको विस्तार भएपछि यो अहंकारादी वासना लिन् (विलय) हुन जान्छ।

**तमस्तमःकार्यमनर्थजालं**
**न दृश्यते सत्युदिते दिनेशे।**
**तथाद्वयानन्दरसानुभूतौ**
**नैवास्ति बन्धो न च दुःखगन्धः॥ ३२०॥**

सूर्यको उदय भएपछि जसरी अन्धकार र उसमा हुने (चोरी आदि) अनर्थ समूह कहि देखिदैन, त्यसरी नै यो अद्वितीय आनन्दको रसमा अनुभव भएपछि न त संसार बन्धन रहन्छ र न दुःखको गन्ध नै रहन्छ।

## प्रमाद( असावधानी )-निन्दा

**दृश्यं प्रतीतं प्रविलापयन्स्वयं**
**सन्मात्रमानन्दघनं विभावयन्।**
**समाहितः सन्बहिरन्तरं वा**
**कालं नयेथाः सति कर्मबन्धे॥ ३२१॥**

यदि तिम्रो कर्मबन्धन अझै बाँकी छ त यो प्रतियमान दृश्यको लय गरेपछि तथा बाहिर भित्रबाट सावधान रहेर आफ्नो सत्तामात्र आनन्दमय स्वरूपको चिन्तन गरेर कालक्षेप (दिन गुजारा गर्नु) गर।

**प्रमादो ब्रह्मनिष्ठायां न कर्तव्यः कदाचन।**
**प्रमादो मृत्युरित्याह भगवान्ब्रह्मणः सुतः॥ ३२२॥**

ब्रह्म विचारमा कहिले प्रमाद (असावधानी) नगर्नु, किनकी ब्रह्माजीको पुत्र (भगवान् सनत्कुमार) ले 'प्रमाद मृत्यू हो' यस्तो भनेका छन्।

**न प्रमादादनर्थोऽन्यो ज्ञानिनः स्वस्वरूपतः।**
**ततो मोहस्ततोऽहंधीस्ततो बन्धस्ततो व्यथा॥ ३२३॥**

विचारवान पुरूषको लागि आफ्नो स्वरूपाअनुसन्धानबाट प्रमाद गर्नु भन्दा बढी अरू कुनै अनर्थ छैन, किनकी यसैमा मोह हुन्छ र मोहबाट अहंकार, अहंकारबाट बन्धन तथा बन्धनबाट दुःखको प्राप्ति हुन जान्छ।

**विषयाभिमुखं दृष्ट्वा विद्वांसमपि विस्मृतिः।**
**विक्षेपयति धीदोषैर्योषा जारमिव प्रियम्॥ ३२४॥**

जसरी कुटला स्त्री आफ्नो प्रेमी जार पुरूषलाई उसको बुद्धि बिगारेर पागल बनाइदिन्छे त्यही प्रकार विद्वान पुरूषको पनि विषयमा प्रवृत्त भएको देखेर आत्म विस्मृति बुद्धि दोषबाट विक्षिप्त गरिदिन्छ।

**यथापकृष्टं शैवालं क्षणमात्रं न तिष्ठति।**
**आवृणोति तथा माया प्राज्ञं वापि पराङ्मुखम्॥ ३२५॥**

जस प्रकार शैवाल (पानी सिमाली)लाई पानीबाट एकपटक हटाउँदा क्षण भर पनि अलग रहन सक्दैन (तुरून्त उसले फेरी ढाकी लिन्छ) त्यही किसिमले आत्म विचारहिन विद्वानको पनि मायाले फेरी घेरी लिन्छ (बान्दछ)।

**लक्ष्यच्युतं सद्यदि चित्तमीषद्**
**बहिर्मुखं सन्निपतेत्ततस्ततः।**
**प्रमादतः प्रच्युतकेलिकन्दुकः**
**सोपानपङ्क्तौ पतितो यथा तथा॥ ३२६॥**

जसरी असावधानी वस (हातबाट छुटेर) सिढीमा खसेको खेलको साधन, एउटा सिढीबाट दोस्रो सिढीमा गिर्दै (झर्दै) तल जान्छ त्यसरी नै यदि चित्त आफ्नो लक्ष्य (ब्रह्म) बाट हटेर थोरै पनि बाहिर गयो भने फेरी तल तल नै झर्छ।

**विषयेष्वाविशच्चेतः संकल्पयति तद्गुणान्।**
**सम्यक्संकल्पनात्कामः कामात्पुंसः प्रवर्तनम्॥ ३२७॥**

विषयमा लागेको चित्त उसको गुणको चिन्तन गर्दछ फेरी निरन्तर चिन्तन गर्नाले उसको कामना जागृत हुन्छ र कामनाले पुरूषको विषयमा प्रवृत्ति (लागिरहनु-मन पराउनु) हुन जान्छ।

**ततः स्वरूपविभ्रंशो विभ्रष्टस्तु पतत्यधः।**
**पतितस्य विना नाशं पुनर्नारोह ईक्ष्यते।**
**सङ्कल्पं वर्जयेत्तस्मात्सर्वानर्थस्य कारणम्॥ ३२८॥**

विषयको प्रवृत्तिले मनुष्य आत्मस्वरूपबाट पतन हुन्छ र जो एक पटक स्वरूपबाट पतन हुन्छ उसको निरन्तर अर्धः पतन भइरहन्छ तथा पतित पुरूषको नाशको शिवाय फेरी उत्थान प्रायः कहिल्यै देख्न पाइदैन। यस कारण सम्पूर्ण अनर्थको कारणरूप संकल्पको त्याग गरिदिनु पर्दछ।

**अतः प्रमादान्न परोऽस्ति मृत्यु-**
**र्विवेकिनो ब्रह्मविदः समाधौ।**
**समाहितः सिद्धिमुपैति सम्यक्**
**समाहितात्मा भव सावधानः॥ ३२९॥**

यसकारण विवेकी ब्रह्मवेत्ता पुरूषको लागि समाधिमा प्रमाद (असावधान) गर्नुभन्दा अरू ठुलो मृत्यू कुनै छैन। समाहित पुरूष नै पूर्ण आत्म सिद्धि प्राप्त गर्न सक्दछ, यसरी सावधानीपूर्वक चित्तलाई समाहित (स्थिर) गर।



# असत्-परिहार ( खरावी त्याग )

**जीवतो यस्य कैवल्यं विदेहे स च केवलः।**
**यत्किञ्चित्पश्यतो भेदं भयं ब्रूते यजुःश्रुतिः॥ ३३०॥**

जसले जीवन छदै कैवल्यपद प्राप्त गर्दछ उसको देहपात (मृत्यू) को अनन्तर कैवल्यमुक्ति हुन्छ, किनकी जसले थोरै मात्रै भेद देख्दछ उसको लागि यर्जुवेदको श्रुति डरलाग्दो बताइएको छ।

**यदा कदा वापि विपश्चिदेष**
**ब्रह्मण्यनन्तेऽप्यणुमात्रभेदम् ।**
**पश्यत्यथामुष्य भयं तदैव**
**यद्वीक्षितं भिन्नतया प्रमादात्॥ ३३१॥**

कहिले काहीं यो विद्वान अनन्त ब्रह्ममा अणुमात्रको पनि भेद देखेमा पनि भयको प्राप्ति हुन्छ। किनकी स्वरूपको असावधानीबाट नै अखण्ड आत्मामा भेदको प्रतिति (ज्ञान) हुने हो।

**श्रुतिस्मृतिन्यायशतैर्निषिद्धे**
**दृश्येऽत्र यः स्वात्ममतिं करोति।**
**उपैति दुःखोपरि दुःखजातं**
**निषिद्धकर्ता स मलिम्लुचो यथा॥ ३३२॥**

श्रुति, स्मृति र सयौँ युक्तिबाट निषिद्ध (मनाही गरिएको) भएको यो दृश्य (देहादि) मा जो आत्मबुद्धि गर्दछ, उ मनाही गरिएको कर्म गर्नेले चोरको समान दुःख माथी दुःख भोग्नु पर्छ।

**सत्याभिसन्धानरतो विमुक्तो**
**महत्त्वमात्मीयमुपैति नित्यम्।**
**मिथ्याभिसन्धानरतस्तु नश्येद्**
**दृष्टं तदेतद्यदचोरचोरयोः॥ ३३३॥**

जो अद्वितीय ब्रह्मरूप सत्य पदार्थको खोज गर्दछ उही मुक्त भएर

आफ्नो नित्य महत्त्वको प्राप्त गर्दछ र जो झुटा देखिने पदार्थको पछाडी रहन्छ उ नष्ट हुन्छ, यसरी नै साधु र चोरको विषयमा* पनि देखिएको छ।

**यतिरसदनुसन्धिं बन्धहेतुं विहाय**
**स्वयमयमहमस्मीत्यात्मदृष्ट्यैव तिष्ठेत्।**
**सुखयति ननु निष्ठा ब्रह्मणि स्वानुभूत्या**
**हरति परमविद्याकार्यदुःखं प्रतीतम्॥ ३३४॥**

यति (योगनिष्ठ सन्यासी) लाई चाहिन्छ की असत् पदार्थको पछि छाडेर 'यो साक्षात ब्रह्म नै म हुँ' यस्तो आत्मदृष्टिमा स्थिर रह। आफ्नो अनुभवबाट उत्पन्न भएको ब्रह्मनिष्ठा नै अविद्याको कार्यभूत यो प्रतीयमान (जान्न सकिदो) प्रपंचको दुःखलाई हटाएर परम् सुख दिन्छ।

**बाह्यानुसन्धिः परिवर्धयेत्फलं**
**दुर्वासनामेव ततस्ततोऽधिकाम्।**
**ज्ञात्वा विवेकैः परिहृत्य बाह्यं**
**स्वात्मानुसन्धिं विदधीत नित्यम्॥ ३३५॥**

बाह्य विषयको चिन्तनले आफ्नो दुर्वासनारूप फलको नै उत्तरोत्तर बढछ, यसको लागि विवेकपूर्वक आत्मस्वरूप जानेर बाह्य विषयलाई छाडेर सधै आत्मानुसन्धान नै गरिरह।

**बाह्ये निरुद्धे मनसः प्रसन्नता**
**मनःप्रसादे परमात्मदर्शनम्।**
**तस्मिन्सुदृष्टे भवबन्धनाशो**
**बहिर्निरोधः पदवी विमुक्तेः॥ ३३६॥**

---

(*यस प्रसङ्गको छान्दोग्योपनिषद् (६।१६।१-२) मा यसप्रकार वर्णन गरिएको छ कि जुन व्यक्ति उपर चोरी गरेको शंका हुन्छ उसलाई राजपुरूष तताइएको बन्चरो (परशु) दिन्छ। यदि उसले चोरी गरेको हो र उ 'मैले चोरी गरेको होइन' यस्तो भनेर झुटो कुरा गर्दछ भने उसलाई पोल्दछ र त्यसपछि राजपुरूष पनि उसलाई सजाय दिन्छ र यदि उ वास्तवमा चोर होइन भने सत्यबाट सुरक्षित रहनाको कारण उसलाई बन्चरोले पोल्दैन र उसलाई राजपुरूषले पनि छाडिदिन्छ।

बाह्य पर्दाथलाई रोकिदिनाले मनमा आनन्द हुन्छ र मनमा आनन्दको उद्देक (बढदो) भएपछि परमात्माको साक्षात्कार हुन्छ र उसको सम्यक साक्षात्कार भएपछि संसार बन्धनको नाश हुन्छ। यस प्रकारको बाह्य बस्तुको निषेध (रोक) नै मुक्तिको मार्ग हो।

**कः पण्डितः सन्सदसद्विवेकी**
**श्रुतिप्रमाणः परमार्थदर्शी।**
**जानन्हि कुर्यादसतोऽवलम्बं**
**स्वपातहेतोः शिशुवन्मुमुक्षुः॥ ३३७॥**

सत् असत् वस्तुको विवेकी, श्रुति प्रमाण जान्ने परमार्थ तत्त्वको ज्ञाता यस्तो कुन बुद्धीमान होला जसले मुक्तिको इच्छा राखेर पनि जानिबुझि बालकको समान आफ्नो पतनको कारण असत् पदार्थको ग्रहण गदर्छ।

**देहादिसंसक्तिमतो न मुक्ति-**
**र्मुक्तस्य देहाद्यभिमत्यभावः।**
**सुप्तस्य नो जागरणं न जाग्रतः**
**स्वप्नस्तयोर्भिन्नगुणाश्रयत्वात्॥ ३३८॥**

जसको शरीर आदि अनात्म बस्तुमा आसक्ती छ उसको मुक्ति हुन सक्दैन र जो मुक्त भएको छ, उसको शरीरमा अभिमान हुन सक्दैन। जसरी निदाएको पुरूषलाई जागृतीको अनुभव हुँदैन र जागृत पुरूषको सपनाको अनुभव हुँदैन किनकी यी दुवै अवस्था भिन्न गुणको अवस्थामा रहेका छन्।

## आत्मनिष्ठाको विधान

**अन्तर्बहिः स्वं स्थिरजङ्गमेषु**
**ज्ञानात्मनाधारतया विलोक्य।**
**त्यक्ताखिलोपाधिरखण्डरूपः**
**पूर्णात्मना यः स्थित एष मुक्तः॥ ३३९॥**

जो सबै स्थावर जंगम (प्राण नभएको) पदार्थको भित्र र बाहिर आफ्नो ज्ञान स्वरूपले अर्को आधारभूत देखेर समस्त उपाधिलाई छाडेर अखण्ड परिपूर्ण रूपबाट स्थित रहन्छ ऊ नै मुक्त हो।

**सर्वात्मना बन्धविमुक्तिहेतुः**
**सर्वात्मभावान्न परोऽस्ति कश्चित्।**
**दृश्याग्रहे सत्युपपद्यतेऽसौ**
**सर्वात्मभावोऽस्य सदात्मनिष्ठया॥ ३४०॥**

संसार बन्धनबाट सधै मुक्त सर्वात्मभाव (सबैलाई आत्मरूप देख्ने भाव) बाट बढेर अरू कुनै (उपाय) छैन। निरन्तर आत्मा निष्ठामा स्थित रहनाले दृश्यको अग्रहण (बाधा) भएर यो सर्वात्मभावको प्राप्ति हुन्छ।

**दृश्यस्याग्रहणं कथं नु घटते देहात्मना तिष्ठतो**
**बाह्यार्थानुभवप्रसक्तमनसस्तत्तत्क्रियां कुर्वतः।**
**संन्यस्ताखिलधर्मकर्मविषयैर्नित्यात्मनिष्ठापरै-**
**स्तत्त्वज्ञैः करणीयमात्मनि सदानन्देच्छुभिर्यत्नतः॥ ३४१॥**

जुन व्यक्ति शरीरादि बुद्धिमा स्थित रहेर बाह्य पदार्थको मनमा आसक्ति राखेर उसैको लागि निरन्तर काममा लागि रहन्छ उसको दृश्यको अप्रतिति (अज्ञान) कसरी हुन सक्छ? यसकारण नित्यानन्द इच्छुक तत्त्वज्ञानीको चाहियो कि यो सबै धर्म, कर्म एंव विषयलाई त्यागेर निरन्तर आत्मनिष्ठामा तत्पर भएर आफ्नो आत्मामा ज्ञान भएर यस दृश्य प्रपञ्चको प्रयासपूर्वक अग्रहण (बाध) गर।

**सार्वात्म्यसिद्धये भिक्षोः कृतश्रवणकर्मणः।**
**समाधिं विदधात्येषा शान्तो दान्त इति श्रुतिः॥ ३४२॥**

'**शान्तो दान्त उपरतस्तितिक्षुः**' (बृह०४।४।२३) यो श्रुति योगनिष्ठ संन्यासीको लागि वेदान्त श्रवणको अनन्तर सार्वात्भ्यभावको सिद्धिको लागि समाधीको विधान गर्दछ।

**आरूढशक्तेरहमो विनाशः**
**कर्तुं न शक्यः सहसापि पण्डितैः।**
**ये निर्विकल्पाख्यसमाधिनिश्चला-**
**स्तानन्तरानन्तभवा हि वासनाः॥ ३४३॥**

अहंकारको शक्ति जबसम्म बढ्दै चढ्दै रहन्छ तबसम्म कुनै विद्वान उसको एकाएक नाश गर्न सक्दैन, किनकी जो महापुरूष निर्विकल्प समाधिमा अविचल भावमा स्थित भएको छ उसको भित्र पनि अनन्त जन्मको वासना देखिन्छ।

**अहंबुद्ध्यैव मोहिन्या योजयित्वावृतेर्बलात्।**
**विक्षेपशक्तिः पुरुषं विक्षेपयति तद्गुणैः॥ ३४४॥**

मोहित गर्नेले अहंकार बुद्धिको साथ आफ्नो आवरण शक्तिको द्वारा पुरूषको संयोग गराएर विक्षेप शक्ति उस (अहंबुद्धि) को गुणबाट मनुष्यलाई विक्षिप्त गरिदिन्छ।

**विक्षेपशक्तिविजयो विषमो विधातुं**
**निःशेषमावरणशक्तिनिवृत्त्यभावे।**
**दृग्दृश्ययोः स्फुटपयोजलवद्विभागे**
**नश्येत्तदावरणमात्मनि च स्वभावात्।**
**निःसंशयेन भवति प्रतिबन्धशून्यो**
**विक्षेपणं न हि तदा यदि चेन्मृषार्थे॥ ३४५॥**
**सम्यग्विवेकः स्फुटबोधजन्यो**
**विभज्य दृग्दृश्यपदार्थतत्त्वम्।**
**छिनत्ति मायाकृतमोहबन्धं**
**यस्माद्विमुक्तस्य पुनर्न संसृतिः॥ ३४६॥**

आवरण शक्तिको पूर्ण निवृत्ति विना विक्षेप शक्तिमा विजय पाउन अत्यन्त कठिन छ। दुध र पानी जस्तै द्रष्टा र दृश्यको अलग अलग भएको स्पष्ट ज्ञान भएपछि आत्मामा बसेको त्यो आवरण शक्ति आफू

आफैंमा नष्ट हुन जान्छ । यदि झुट्टा देख्नेले (यो बुद्धि आदि) पदार्थमा द्रष्टा र दृश्य पदार्थको स्वरूपको अलग अलग गरेर स्पष्ट बोधको कारण हुनेवाला निःस्नेहपूर्वक बाधरहित(दुःख रहित) पूर्ण विवेक भएमा फेरी विक्षेप हुँदैन र उ विवेक माया जनित मोह बन्धनलाई पनि काट्न सक्दछ, जसबाट मुक्त भएका पुरूषको फेरी (जन्ममरणरूप) संसारको प्राप्ति हुँदैन।

**परावरैकत्वविवेकवह्नि-**
**र्दहत्यविद्यागहनं ह्यशेषम्।**
**किं स्यात्पुनः संसरणस्य बीज-**
**मद्वैतभावं समुपेयुषोऽस्य॥ ३४७॥**

ब्रह्म र आत्माको एकत्त्व ज्ञानरूप अग्नि अविद्यारूप समस्त वनको भस्म गरिदिन्छ (अविद्याको सर्वथा नष्ट भएपछि) जब जीवको अद्वैत भावको प्राप्ति हुन जान्छ तब उसको पुनः संसार प्राप्तिको कारण नै किन रहन जान्छ?

**आवरणस्य निवृत्ति-**
**र्भवति च सम्यक्पदार्थदर्शनतः।**
**मिथ्याज्ञानविनाश-**
**स्तद्वद्विक्षेपजनितदुःखनिवृत्तिः ॥ ३४८॥**

आत्मवस्तुको ठिक ठिक साक्षात्कार भएपछि आवरणको नाश हुन जान्छ तथा झुटो ज्ञानको नाश र विक्षेप- जनित दुःखको निवृत्ति हुन जान्छ।



# अधिष्ठान-निरूपण

**एतत्त्रितयं दृष्टं सम्यग्रज्जुस्वरूपविज्ञानात्।**
**तस्माद्वस्तु सतत्त्वं ज्ञातव्यं बन्धमुक्तये विदुषा॥ ३४९॥**

डोरीमा भ्रमको कारण सर्पको प्रतिति हुन्छ र त्यो झुटो प्रतितिबाट नै भय, कम्प आदि दुःखको प्राप्ति हुन्छ तर वत्ति(प्रकाश) आदिको द्वारा जुन प्रकार डोरीको स्वरूपको यथार्थ ज्ञान भएपछि डोरीको अज्ञान (आवरण) अज्ञान जन्य सर्प (मल) र सर्प प्रतितिबाट हुन जाने भय, कम्प आदि(विक्षेप) यी तीन एकसाथ निवृत्त भएको देखिन्छ(त्यस्तै प्रकार आत्म स्वरूपको ज्ञान भएपछि आत्माको अज्ञान, अज्ञानजन्य प्रपंचको प्रतिति र उसबाट हुने दुःखको एकैसाथ निवृत हुन जान्छ) यसकारण संसार बन्धनबाट छुट्नको लागि विद्वानले तत्त्वसहित आत्मपदार्थको ज्ञान प्राप्त गर्नुपर्दछ।

**अयोऽग्नियोगादिव सत्समन्वयान्**
**मात्रादिरूपेण विजृम्भते धीः।**
**तत्कार्यमेतद्द्वितयं यतो मृषा**
**दृष्टं भ्रमस्वप्नमनोरथेषु॥ ३५०॥**

अग्निको संयोगबाट जसरी फलाम (कोदालो आदि विभिन्न प्रकारको रूपमा धारण गर्दछ) त्यही किसिमले आत्माको संयोगबाट बुद्धि (शब्द, स्पर्श, रूप, रस र गन्ध आदि) विभिन्न प्रकारका विषयमा प्रकाशित हुन्छ। यो द्वैतप्रपञ्च त्यो बुद्धिको नै कार्य हो, यस कारण झुटो हो, किनकी भ्रम, स्वप्न र मनोरथको समय यसको प्रतितिको झुटत्त्व स्पष्ट देखिन जान्छ।

**ततो विकाराः प्रकृतेरहंमुखा**
**देहावसाना विषयाश्च सर्वे।**
**क्षणेऽन्यथाभावितया ह्यमीषा-**
**मसत्त्वमात्मा तु कदापि नान्यथा॥ ३५१॥**

यसको लागि अहंकारबाट लिएर शरीरसम्म प्रकृतिलाई जित्ने विकार अथवा विषय हो त्यो सबै क्षण क्षणमा बदलिने हुनाले असत्य हो, आत्मा त कहिल्यै बदलिदैन, उ त सधै एक रस रहन्छ।

**नित्याद्वयाखण्डचिदेकरूपो**
**बुद्ध्यादिसाक्षी सदसद्विलक्षणः।**
**अहंपदप्रत्ययलक्षितार्थः**
**प्रत्यक्सदानन्दघनः परात्मा॥ ३५२॥**

जुन '**अहम्**' पदको प्रतितिबाट लक्षित हुन्छ त्यो नित्य आनन्द धन परमात्मा त सधै अद्वितीय, अखण्ड, चैतन्य स्वरूप, बुद्धि आदिको साक्षी सत् असत्‌बाट भिन्न र प्रत्यक् (अन्तरतम) हो।

**इत्थं विपश्चित्सदसद्विभज्य**
**निश्चित्य तत्त्वं निजबोधदृष्ट्या।**
**ज्ञात्वा स्वमात्मानमखण्डबोधं**
**तेभ्यो विमुक्तः स्वयमेव शाम्यति॥ ३५३॥**

विद्वान पुरुष यसप्रकार सत् र असत्‌को विभाजन गरेर आफ्नो ज्ञान दृष्टिबाट तत्त्वको निश्चिय गरेर र अखण्ड बोध स्वरूप आत्मालाई जानेर असत् पदार्थबाट मुक्त भएर आफैं नै शान्त हुन जान्छ।

## समाधि-निरूपण

**अज्ञानहृदयग्रन्थेर्निःशेषविलयस्तदा ।**
**समाधिनाविकल्पेन यदाद्वैतात्मदर्शनम्॥ ३५४॥**

अज्ञानरूप हृदयको ग्रन्थीको सर्वथा नाश तव हुन्छ जब निर्विकल्प समाधिद्वारा अद्वैत आत्मस्वरूपको साक्षात्कार गरेको हुन्छ।

**त्वमहमिदमितीयं कल्पना बुद्धिदोषात्**
**प्रभवति परमात्मन्यद्वये निर्विशेषे।**
**प्रविलसति समाधावस्य सर्वो विकल्पो**
**विलयनमुपगच्छेद्वस्तुतत्त्वावधृत्या ॥ ३५५॥**

अद्वितीय र निर्विशेष परमात्माको बुद्धिको दोषबाट तिमी, म, यो यस्तो कल्पना हुन्छ र उही सम्पूर्ण विकल्प समाधिमा विघ्न रूपमा स्फुरित भएको हुन्छ तर तत्त्व वस्तुको यथावत ग्रहण हुनाले त्यो सब लिन हुन जान्छ।

**शान्तो दान्तः परमुपरतः क्षान्तियुक्तः समाधिं**
**कुर्वन्नित्यं कलयति यतिः स्वस्य सर्वात्मभावम्।**
**तेनाविद्यातिमीरजनितान्साधु दग्ध्वा विकल्पान्**
**ब्रह्माकृत्या निवसति सुखं निष्क्रियो निर्विकल्पः ॥ ३५६ ॥**

योगी पुरूष चित्तको शान्ति, इन्द्रिय, निग्रह विषयमा उपरती र क्षमाबाट युक्त भएर समाधिमा निरन्तर अभ्यास गरेर आफ्नो सर्वात्मभावको अनुभव गर्दछ र उसद्वारा अविद्यारूप अन्धकारबाट उत्पन्न भएको समस्त विकल्पको सबै प्रकारले ध्वंस गरेर निष्क्रिय र निर्विकल्प भएर आनन्दपूर्वक ब्रह्माकार वृत्तिमा रहेको हुन्छ।

**समाहिता ये प्रविलाप्य बाह्यं**
**श्रोत्रादि चेतः स्वमहं चिदात्मनि।**
**त एव मुक्ता भवपाशबन्धै-**
**र्नान्ये तु पारोक्ष्यकथाभिधायिनः ॥ ३५७ ॥**

जो व्यक्ति श्रोतादि इन्द्रियवर्ग तथा चित्त र अहंकार यी सबै बाह्य वस्तुको आत्मामा लिन गरेर समाधिमा स्थिर रहन्छ उ नै संसारबन्धनबाट मुक्त हो। जो केवल परोक्ष ब्रह्म ज्ञानको कुरा बनाएर रहन्छ उ कहिल्यै मुक्त हुन सक्दैन।

**उपाधिभेदात्स्वयमेव भिद्यते**
**चोपाध्यपोहे स्वयमेव केवलः।**
**तस्मादुपाधेर्विलयाय विद्वान्**
**वसेत्सदाकल्पसमाधिनिष्ठया ॥ ३५८ ॥**

उपाधिको भेदबाट नै आत्मामा भेदको प्रतिति(ज्ञान) हुन्छ र उपाधिको

लय भएपछि उ केवल आफू मात्र रहन्छ, यसबाट उपाधिको लय गर्नको लागि विचारवान पुरूष सदा निर्विकल्प समाधिमा स्थित भएर रह।

**सति सक्तो नरो याति सद्भावं ह्येकनिष्ठया।**
**कीटको भ्रमरं ध्यायन्भ्रमरत्वाय कल्पते॥ ३५९॥**

एकाग्रचित्तबाट निरन्तर सत्स्वरूप ब्रह्ममा स्थित रहनाले मनुष्य ब्रह्म स्वरूप नै हुन जान्छ जसरी भ्रमर (कमलकोट्टी)को डरले ध्यान गर्दा गर्दै किरा कमलकोठीको स्वरूप हुन जान्छ।

**क्रियान्तरासक्तिमपास्य कीटको**
**ध्यायन्यथालिं ह्यलिभावमृच्छति।**
**तथैव योगी परमात्मतत्त्वं**
**ध्यात्वा समायाति तदेकनिष्ठया॥ ३६०॥**

जसरी अन्य समस्त क्रियाको आसक्तिलाई छाडेर केवल कमलकोठीको नै ध्यान गर्दागर्दै किरा कमलकोटीको रूप हुन जान्छ, त्यसरी नै योगी एकनिष्ठ भएर परमात्मा तत्त्वको चिन्तन गर्दागर्दै परमात्मा भाव नै प्राप्त हुन जान्छ।

**अतीव सूक्ष्मं परमात्मतत्त्वं**
**न स्थूलदृष्ट्या प्रतिपत्तुमर्हति।**
**समाधिनात्यन्तसुसूक्ष्मवृत्त्या**
**ज्ञातव्यमार्यैरतिशुद्धबुद्धिभिः ॥ ३६१॥**

परमात्मा तत्त्व अत्यन्त सूक्ष्म छ, उसलाई स्थूल दृष्टिबाट कसैले पनि प्राप्त गर्न सक्दैन, यसको लागि अति शुद्ध बुद्धि भएको सत्पुरूषले उसलाई समाधिद्वारा अति सूक्ष्म वृत्तिबाट जान्नु पर्दछ।

**यथा सुवर्णं पुटपाकशोधितं**
**त्यक्त्वा मलं स्वात्मगुणं समृच्छति।**
**तथा मनः सत्त्वरजस्तमोमलं**
**ध्यानेन सन्त्यज्य समेति तत्त्वम्॥ ३६२॥**

जसरी (अग्निमा) पुटपाक विधिबाट गालिएको सुन सम्पूर्ण मल छाडेर आफ्नो स्वभाविक स्वरूपको प्राप्त गर्दछ त्यही किसिमले मन ध्यानको द्वारा सत्त्व, रज, तमरूप मललाई छाडी आत्मा प्राप्त गर्दछ।

**निरन्तराभ्यासवशात्तदित्थं**
**पक्वं मनो ब्रह्मणि लीयते यदा।**
**तदा समाधिः स विकल्पवर्जितः**
**स्वतोऽद्वयानन्दरसानुभावकः ॥ ३६३ ॥**

जुन समय रात दिनको निरन्तर अभ्यासबाट परिपक्व भएर मन ब्रह्ममा लिन हुन जान्छ, त्यस समय अद्वितीय ब्रह्मनान्दरसको अनुभव गर्नेले त्यो निर्विकल्प समाधि आफैंमा नै सिद्ध हुन जान्छ।

**समाधिनानेन समस्तवासना-**
**ग्रन्थेर्विनाशोऽखिलकर्मनाशः ।**
**अन्तर्बहिः सर्वत एव सर्वदा**
**स्वरूपविस्फूर्तिरयत्नतः स्यात् ॥ ३६४ ॥**

यो निर्विकल्प समाधिबाट सबै वासना ग्रथीहरूको नाश हुन्छ तथा कर्म वासनाको नाशबाट सम्पूर्ण कर्मको नाश हुन जान्छ र फेरी भित्र बाहिर सर्वत्र विना प्रयत्नबाट निरन्तर स्वरूपको स्फूर्ति दिन लाग्दछ।

**श्रुतेः शतगुणं विद्यान्मननं मननादपि।**
**निदिध्यासं लक्षगुणमनन्तं निर्विकल्पकम् ॥ ३६५ ॥**

वेदान्तको श्रवणबाट मात्र उसलाई मनन गर्नु सयगुणा राम्रो र मननबाट लाख गुना श्रेयकर निदिध्यास (आत्मा भावनालाई आफ्नो चित्तमा स्थिर राख्ने) हो तथा निदिध्यासन भन्दा पनि अनन्तगुना निर्विकल्प समाधिको महत्त्व छ। (जसबाट चित्त फेरी आत्मस्वरूपमा कहिल्यै पनि चलायमान हुदैन)।

**निर्विकल्पकसमाधिना स्फुटं**
**ब्रह्मतत्त्वमवगम्यते ध्रुवम्।**

**नान्यथा चलतया मनोगतेः**
**प्रत्ययान्तरविमिश्रितं भवेत्॥ ३६६॥**

निर्विकल्प समाधिद्वारा निश्चय नै ब्रह्मतत्त्वको स्पष्ट ज्ञान हुन्छ र कुनै प्रकार त्यस्तो बोध हुन सक्दैन, किनकी अन्य अवस्थामा चित्त वृत्तिको चंचल रहनाले उसमा अन्यान्य (अरूअरू) प्रतीतिको पनि मेल रहन्छ।

**अतः समाधत्स्व यतेन्द्रियः सदा**
**निरन्तरं शान्तमनाः प्रतीचि।**
**विध्वंसय ध्वान्तमनाद्यविद्यया**
**कृतं सदेकत्वविलोकनेन॥ ३६७॥**

यसको लागि सधै संयतेन्द्रिय (इन्द्रिय संयम गरेर) भएर शान्त मनबाट निरन्तर प्रत्यगात्मा ब्रह्ममा चित्त स्थिर गर र सच्चितानन्द ब्रह्मको साथ आफ्नो एकता देखेर अनादि अविद्याबाट उत्पन्न अज्ञानान्धकारलाई ध्वंस (विनास) गर।

**योगस्य प्रथमं द्वारं वाङ्निरोधोऽपरिग्रहः।**
**निराशा च निरीहा च नित्यमेकान्तशीलता॥ ३६८॥**

बोली रोक्नु, द्रव्यको संग्रह नगर्नु, लौकिक पदार्थको आशा छोड्नु कामनाको त्याग गर्नु र नित्य एकान्तमा रहनु यी सबै योगका पहिला ढोका हुन्।

**एकान्तस्थितिरिन्द्रियोपरमणे हेतुर्दमश्चेतसः**
**संरोधे करणं शमेन विलयं यायादहंवासना।**
**तेनानन्दरसानुभूतिरचला ब्राह्मी सदा योगिन-**
**स्तस्माच्चित्तनिरोध एव सततं कार्यः प्रयत्नान्मुनेः॥ ३६९॥**

एकान्तमा रहनु इन्द्रिय दमनको कारण हो, इन्द्रिय दमन चित्तको निरोधको कारण हो, र चित्त-निरोधबाट वासनाको नाश हुन्छ तथा वासनाको नष्ट भएपछि योगीको ब्रह्मनन्दरसको अविचल अनुभव हुन्छ, यसको लागि मुनिले सदा प्रयत्नपूर्वक चित्तको निरोध नै गर्नुपर्दछ।

**वाचं नियच्छात्मनि तं नियच्छ**
**बुद्धौ धियं यच्छ च बुद्धिसाक्षिणि।**
**तं चापि पूर्णात्मनि निर्विकल्पे**
**विलाप्य शान्तिं परमां भजस्व॥ ३७०॥**

बोलीलाई मनमा लय गर, मनलाई बुद्धिमा र बुद्धिलाई बुद्धिको साक्षी आत्मामा तथा बुद्धि साक्षी (कुटस्थ)को निर्विकल्प पूर्ण ब्रह्ममा लय गरेर परम शान्तिको अनुभव गर।

**देहप्राणेन्द्रियमनोबुद्ध्यादिभिरुपाधिभिः ।**
**यैर्यैर्वृत्तेः समायोगस्तत्तद्भावोऽस्य योगिनः॥ ३७१॥**

शरीर, प्राण, इन्द्रिय, मन र बुद्धि यी उपाधिबाट जस जसको साथ योगीको चित्त वृत्तिमा संयोग हुन्छ त्यही त्यही भावको उसलाई प्राप्ति हुन्छ।

**तन्निवृत्त्या मुनेः सम्यक्सर्वोपरमणं सुखम्।**
**संदृश्यते सदानन्दरसानुभवविप्लवः॥ ३७२॥**

जब मुनीको चित्त यी सबै उपाधिबाट निवृत्त हुन जान्छ त उसको पूर्ण उपरतिको आनन्द स्पष्ट तथा प्रतीत हुन लाग्दछ जसबाट उसको चित्तमा सच्चिदानन्दरसानुभवको बाढी आउन लाग्दछ।

## वैराग्य-निरूपण

**अन्तस्त्यागो बहिस्त्यागो विरक्तस्यैव युज्यते।**
**त्यजत्यन्तर्बहिःसङ्गं विरक्तस्तु मुमुक्षया॥ ३७३॥**

विरक्त पुरूषले नै आन्तरिक र बाह्य दुबै प्रकारले त्याग गर्न ठिक छ उसले मोक्षको इच्छाबाट आन्तरिक र बाह्य संगको त्याग दिन्छ।

**बहिस्तु विषयैः सङ्गं तथान्तरहमादिभिः।**
**विरक्त एव शक्नोति त्यक्तुं ब्रह्मणि निष्ठितः॥ ३७४॥**

इन्द्रियको विषयको साथ बाह्य संग अरू अहंकारादिको साथ आन्तरिक संग यी दुबैको ब्रह्मनिष्ठ विरक्त पुरूष नै त्याग गर्न सक्दछ।

**वैराग्यबोधौ पुरुषस्य पक्षिवत्**
**पक्षौ विजानीहि विचक्षण त्वम्।**
**विमुक्तिसौधाग्रतलाधिरोहणं**
**ताभ्यां विना नान्यतरेण सिध्यति॥ ३७५॥**

हे विद्वान! वैराग्य र बोध यी दुबै चराको दुबै पखेटाको समान मोक्ष कामी पुरूषको पखेटा संझ। यी दुबैमा कुनै पनि एउटाको विना केवल एउटा पखेटाको द्वारा कुनै मुक्तरूपी महलको छतमा (अटारी) चढ्न सक्दैन। (अर्थात् मोक्ष प्राप्तिको लागि वैराग्य र बोध दुबैको आवश्यकता पर्दछ)।

**अत्यन्तवैराग्यवतः समाधिः**
**समाहितस्यैव दृढप्रबोधः।**
**प्रबुद्धतत्त्वस्य हि बन्धमुक्ति-**
**र्मुक्तात्मनो नित्यसुखानुभूतिः॥ ३७६॥**

अत्यन्त वैराग्यवानलाई नै समाधिको लाभ हुन्छ, समाधिस्थ पुरूषको नै दृढबोध हुन्छ तथा सुदृढ बोधवान नै संसार बन्धनबाट छुट्छ र जो संसार बन्धनबाट छुट्छ उसलाई नित्यानन्दको अनुभव हुन जान्छ।

**वैराग्यान्न परं सुखस्य जनकं पश्यामि वश्यात्मन-**
**स्तच्चेच्छुद्धतरात्मबोधसहितं स्वाराज्यसाम्राज्यधुक्।**
**एतद्द्वारमजस्रमुक्तियुवतेर्यस्मात्त्वमस्मात्परं**
**सर्वत्रास्पृहया सदात्मनि सदा प्रज्ञां कुरु श्रेयसे॥ ३७७॥**

जितेन्द्रिय पुरूषको लागि वैराग्य भन्दा अरू सुखदायक मलाई अरू कुनै पनि प्रतीत (ज्ञानी) हुँदैन र उ यदि कही शुद्ध आत्मज्ञानबाट सहित भएमा तब त स्वर्गीय सामाज्यको सुख दिने हुन्छ। यो मुक्तरूप कामिनी (प्रेमगर्ने स्त्री) को निरन्तर खुला भएको ढोका हो। यसको लागि हे वत्स! तिमी आफ्नो कल्याणको लागि सबैबाट इच्छारहित भएर सदा सच्चितानन्द ब्रह्ममा नै आफ्नो बुद्धि स्थिर गर।

**आशां छिन्धि विषोपमेषु विषयेष्वेषैव मृत्योः सृति-**
**स्त्यक्त्वा जातिकुलाश्रमेष्वभिमतिं मुञ्चातिदूरात्क्रियाः।**
**देहादावसति त्यजात्मधिषणां प्रज्ञां कुरुष्वात्मनि**
**त्वं द्रष्टास्यमलोऽसि निर्द्वयपरं ब्रह्मासि यद्वस्तुतः॥ ३७८॥**

विषको समान विषयको आशालाई छाड, किनकी यो (स्वरूप विस्मृति रूप) मृत्यूको मार्ग हो तथा जाति, कुल र आश्रम आदिको अभिमान छाडेर टाढैबाट कर्मलाई नमस्कार गर। शरीर आदि असत् पदार्थमा आत्मबुद्धिलाई छाड र आत्मामा अहंबुद्धि गर। किनकी तिमी त वास्तवमा यी सबैको द्रष्टा र मल तथा द्वैतबाट रहित जो परब्रह्म हो त्यही हौ।

## ध्यान-विधि

**लक्ष्ये ब्रह्मणि मानसं दृढतरं संस्थाप्य बाह्येन्द्रियं**
**स्वस्थाने विनिवेश्य निश्चलतनुश्चोपेक्ष्य देहस्थितिम्।**
**ब्रह्मात्मैक्यमुपेत्य तन्मयतया चाखण्डवृत्त्यानिशं**
**ब्रह्मानन्दरसं पिबात्मनि मुदा शून्यैः किमन्यैर्भ्रमैः॥ ३७९॥**

चित्तलाई आफ्नो लक्ष्य ब्रह्ममा दृढतापूर्वक स्थिर गरेर बाह्य इन्द्रियको (तिनको विषयबाट हटेर) आ-आफ्नो गोलकमा स्थिर गर, शरीरलाई निश्चल राख र उसको स्थितिको धेरै ध्यान नदेउ। यस प्रकार ब्रह्म र आत्माको एकता गरेर तन्मयभावबाट अखण्ड वृत्तिले अहर्निश(रातदिन) मन मनै आनन्दपूर्वक ब्रह्मानन्दरस पिऊ र अरू धेरै कुरा गरेरमात्र के लिनु छ?

**अनात्मचिन्तनं त्यक्त्वा कश्मलं दुःखकारणम्।**
**चिन्तयात्मानमानन्दरूपं यन्मुक्तिकारणम्॥ ३८०॥**

दुःखको कारण र मोहरूप अनात्म चिन्तनलाई छोडेर आनन्दस्वरूप आत्माको चिन्तन गर, जुन साक्षात मुक्तिको कारण हो।

**एष स्वयंज्योतिरशेषसाक्षी**
**विज्ञानकोशे विलसत्यजस्रम्।**

**लक्ष्यं विधायैनमसद्विलक्षण-**
**मखण्डवृत्त्यात्मतयानुभावय ॥ ३८१ ॥**

यो जो स्वयंप्रकाश सबैको साक्षी निरन्तर विज्ञानमय कोशमा रहन्छ (बस्दछ) सबै अनित्य पदार्थभन्दा भिन्न यो परमात्माको नै आफ्नो लक्ष्य बनाएर यसलाई (धरातल) अखण्ड वृत्तिबाट आत्माभावबाट चिन्तन गर।

**एतमच्छिन्नया वृत्त्या प्रत्ययान्तरशून्यया।**
**उल्लेखयन्विजानीयात्स्वस्वरूपतया स्फुटम् ॥ ३८२ ॥**

अन्य प्रतीति (ज्ञान) बाट रहित अखण्ड वृत्तिबाट यो एउटाको नै चिन्तन गरेर योगी यसको स्पष्टतया आफ्नो स्वरूप जान्दछ।

**अत्रात्मत्वं दृढीकुर्वन्नहमादिषु सन्त्यजन्।**
**उदासीनतया तेषु तिष्ठेद्घटपटादिवत् ॥ ३८३ ॥**

यस प्रकार यो परमात्मामा नै आत्मभावको दृढ गरेर र अहंकारादि मा आत्माबुद्धि छाडेर उनलाई शरीरबाट भिन्न घटपट आदि वस्तुको समान (जस्तै) उदासिन हौ।

## आत्म-दृष्टि

**विशुद्धमन्तःकरणं स्वरूपे**
**निवेश्य साक्षिण्यवबोधमात्रे।**
**शनैः शनैर्निश्चलतामुपानयन्**
**पूर्णं स्वमेवानुविलोकयेत्ततः ॥ ३८४ ॥**

सबैको साक्षी र ज्ञानस्वरूप आत्मामा आफ्नो शुद्ध चित्त लगाएर विस्तार विस्तार निश्चलता प्राप्त गर्दै अन्तमा सबैतिर आफूलाई परिपूर्ण देख।

**देहेन्द्रियप्राणमनोऽहमादिभिः**
**स्वाज्ञानक्लृप्तैरखिलैरुपाधिभिः ।**
**विमुक्तमात्मानमखण्डरूपं**
**पूर्णं महाकाशमिवावलोकयेत् ॥ ३८५ ॥**

आफ्नो अज्ञानबाट कल्पना गरिएको शरीर, इन्द्रिय, प्राण, मन र

अहंकार आदि समस्त उपाधिबाट रहित अखण्ड आत्माको महाकाशको तरह सबैतिर परिपूर्ण देख।

**घटकलशकुशूलसूचिमुख्यै-**
**र्गगनमुपाधिशतैर्विमुक्तमेकम् ।**
**भवति न विविधं तथैव शुद्धं**
**परमहमादिविमुक्तमेकमेव ॥ ३८६ ॥**

जसरी आकाश घट, कलश, कुशुल (अनाज भण्डार) सूची (सुई) आदि सयौँ उपाधिबाट रहित एक नै रहन्छ, विभिन्न उपाधिको कारण उ अलग अलग हुँदैन, त्यही किसिमले अहंकारादि उपायबाट रहित एक शुद्ध आत्मा नै परमात्मा हो।

**ब्रह्मादिस्तम्बपर्यन्ता मृषामात्रा उपाधयः।**
**ततः पूर्णं स्वमात्मानं पश्येदेकात्मना स्थितम्॥ ३८७॥**

ब्रह्मा देखि तृण सम्म सबै उपाधि झुटा हुन्, यसको लागि आफू सदा एकरूपले स्थित परिपूर्ण आत्मस्वरूप देख्नुपर्दछ।

**यत्र भ्रान्त्या कल्पितं यद्विवेके**
**तत्तन्मात्रं नैव तस्माद्विभिन्नम्।**
**भ्रान्तेर्नाशे भ्रान्तिदृष्टाहितत्त्वं**
**रज्जुस्तद्वद्विश्वमात्मस्वरूपम् ॥ ३८८ ॥**

जुन वस्तुको जहाँ (जुन आधारमा) भ्रमबाट कल्पना हुन जान्छ त्यो आधारको ठिक ठिक ज्ञान भएपछि त्यो कल्पना गरिएको वस्तु त्यो अनुसार नै निश्चित हुन्छ उसभन्दा भिन्न उसको सत्ता सिद्ध हुँदैन, जसरी भ्रान्तिको नष्ट भएपछि डोरीमा भ्रान्तिवस देखिने सर्प डोरी रूपमा प्रत्यक्ष हुन्छ। त्यसरी नै अज्ञानको नष्ट भएपछि सम्पूर्ण विश्व आत्मस्वरूप नै जान्न सकिन्छ।

**स्वयं ब्रह्मा स्वयं विष्णुः स्वयमिन्द्रः स्वयं शिवः।**
**स्वयं विश्वमिदं सर्वं स्वस्मादन्यन्न किञ्चन॥ ३८९॥**

आफू नै ब्रह्म, आफू नै विष्णु, आफैं इन्द्र र आफु नै शिव आफू नै सारा विश्व हो आफू भन्दा भिन्न अरू कुनै पनि छैन।

**अन्तः स्वयं चापि बहिः स्वयं च**
**स्वयं पुरस्तात्स्वयमेव पश्चात्।**
**स्वयं ह्यवाच्यां स्वयमप्युदीच्यां**
**तथोपरिष्टात्स्वयमप्यधस्तात् ॥ ३९० ॥**

आफू नै भित्र, आफू नै बाहिर, आफू नै आफू नै अगाडी, आफू नै पछाडी, आफू नै दाया, आफू नै बाया र आफू नै माथी आफू नै तल हो।

**तरङ्गफेनभ्रमबुद्‌बुदादि**
**सर्वं स्वरूपेण जलं यथा तथा।**
**चिदेव देहाद्यहमन्तमेतत्**
**सर्वं चिदेवैकरसं विशुद्धम्॥ ३९१ ॥**

जसरी तरङ्ग, फिज, भवँर (भूमरी) र बुद्‌बुद् आदि स्वरूपबाट सबै जल नै हो त्यसरी नै शरीरदेखी लिएर अहंकारसम्म यी सारा विश्व पनि अखण्ड शुद्ध चैतन्य आत्मा नै हो।

**सदेवेदं सर्वं जगदवगतं वाङ्मनसयोः**
**सतोऽन्यन्नास्त्येव प्रकृतिपरसीम्नि स्थितवतः।**
**पृथक् किं मृत्स्नायाः कलशघटकुम्भाद्यवगतं**
**वदत्येष भ्रान्तस्त्वमहमिति मायामदिरया॥ ३९२ ॥**

मन र वाणिबाट जानिने यो सारा जगत् सत्स्वरूप नै हो, जुन महापुरूष प्रकृति भन्दा पर आत्म स्वरूपमा स्थित छ, उसको दृष्टिमा सत्यभन्दा फरक अरू कुनै पनि छैन। माटो भन्दा फरक घडा, कलश र कुम्भ आदि के हो? मनुष्य मायामयी मदिराबाट उन्मुक्त भएर नै 'म त' यस्तो भेदबुद्धि युक्त वाणी बोल्दछ।

**क्रियासमभिहारेण यत्र नान्यदिति श्रुतिः।**
**ब्रवीति द्वैतराहित्यं मिथ्याध्यासनिवृत्तये॥ ३९३ ॥**

कार्यरूप द्वैतको उसंहार गर्दै 'जहाँ अरू कुनै पनि देखिदैन' यस्तो अद्वैत परक श्रुति* झुटा अध्यासको (झुटो ज्ञान वा कल्पना) निवृत्तिको लागि बारम्वार द्वैतको अभाव बताइन्छ।

**आकाशवन्निर्मलनिर्विकल्प-**
**निःसीमनिष्पन्दननिर्विकारम् ।**
**अन्तर्बहिःशून्यमनन्यमद्वयं**
**स्वयं परं ब्रह्म किमस्ति बोध्यम्॥ ३९४॥**

जो परब्रह्म स्वयं आकाशको समान निर्मल, निर्विकल्प निःसीम निश्चल, निर्विकार, बाहिर भित्र सबैतिर शुन्य, अनन्य र अद्वितीय हो उ के ज्ञानको विषय हुन सक्छ?

**वक्तव्यं किमु विद्यतेऽत्र बहुधा ब्रह्मैव जीवः स्वयं**
**ब्रह्मैतज्जगदाततं नु सकलं ब्रह्माद्वितीयं श्रुतेः।**
**ब्रह्मैवाहमिति प्रबुद्धमतयः सन्त्यक्तबाह्याः स्फुटं**
**ब्रह्मीभूय वसन्ति सन्ततचिदानन्दात्मनैव ध्रुवम्॥ ३९५॥**

यो विषयमा अरू धेरै के भन्नु छ? जीव त स्वयं ब्रह्म नै हो र ब्रह्म नै यो सम्पूर्ण जगत रूपमा फैलिएको छ, किनकी श्रुतिमा भनिन्छ की ब्रह्म अद्वितीय हो र यो निश्चित छ जसलाई यसको ज्ञान (बोध) हुन्छ म नै ब्रह्म हुँ उ बाह्य विषयको सबैलाई त्यागेर (छाडेर) ब्रह्म भावबाट सदा सच्चिदनन्द स्वरूपमा नै स्थित रहन्छ।

**जहि मलमयकोशेऽहंधियोत्थापिताशां**
**प्रसभमनिलकल्पे लिङ्गदेहेऽपि पश्चात्।**
**निगमगदितकीर्तिं नित्यमानन्दमूर्तिं**
**स्वयमिति परिचीय ब्रह्मरूपेण तिष्ठ॥ ३९६॥**

यो मलमय कोशमा अहंबुद्धिबाट भएको आशक्तिलाई छाडी यसपछि

* 'यत्र नान्यत् पश्यति नान्यच्छृणोति नान्यद्विजानाति स भूमा'
(छान्दो० ७। २४। १)

वायुरूप लिङ्ग शरीरमा पनि त्यसलाई दृढतापूर्वक त्याग गर तथा जसको कीर्तिमा वेद बखान (ब्याख्या) गर्दछ त्यो आनन्दस्वरूप जानेर सधै ब्रह्म रूपमा स्थिर भएर रह।

**शवाकारं यावद्भजति मनुजस्तावदशुचिः**
**परेभ्यः स्यात्क्लेशो जननमरणव्याधिनिलयः।**
**यदात्मानं शुद्धं कलयति शिवाकारमचलं**
**तदा तेभ्यो मुक्तो भवति हि तदाह श्रुतिरपि॥ ३९७॥**

श्रुति पनि यहि भन्दछ की मनुष्य जबसम्म यो मृतक तुल्य शरीरमा आशक्त रहन्छ तबसम्म उ अत्यन्त अपवित्र रहन्छ र जन्ममरण तथा ब्याधि को आश्रय बनेर उसले दोश्रोबाट अत्यन्त दुःख भोग्नुपर्दछ। तर जब उ आफ्नो कल्याणस्वरूप अचल र शुद्ध आत्माको साक्षात्कार गर्दछ तब ती सबै दुःखबाट मुक्ति पाउँछ।

## प्रपंचको बाध ( दुःख )

**स्वात्मन्यारोपिताशेषाभासवस्तुनिरासतः ।**
**स्वयमेव परं ब्रह्म पूर्णमद्वयमक्रियम्॥ ३९८॥**

आफ्नो आत्मामा आरोपित समस्त (सबै) कल्पना गरिएका बस्तुको निरास (आस नभएको) गरिदिनाले मनुष्य स्वयं अद्वितीय, अक्रिय र पूर्ण पर ब्रह्म नै हो।

**समाहितायां सति चित्तवृत्तौ**
**परात्मनि ब्रह्मणि निर्विकल्पे।**
**न दृश्यते कश्चिदयं विकल्पः**
**प्रजल्पमात्रः परिशिष्यते ततः॥ ३९९॥**

निर्विकल्प परमात्मा परब्रह्ममा चित्त वृत्तिमा स्थिर भए पछि यो दृश्य विकल्प कहि पनि देखिदैन। त्यो समय केवल बाचारम्भण (बोलीको वकवाद) मात्र रहन जान्छ।

**असत्कल्पो विकल्पोऽयं विश्वमित्येकवस्तुनि।**
**निर्विकारे निराकारे निर्विशेषे भिदा कुतः॥ ४००॥**

त्यो एक वस्तु ब्रह्ममा यो संसार झुटा वस्तु देखिएको कल्पना मात्र हो। निर्विकार, निराकार र निर्विशेष वस्तुमा भेद(भिन्नता) कहाँबाट आयो?

**द्रष्टृदर्शनदृश्यादिभावशून्यैकवस्तुनि ।**
**निर्विकारे निराकारे निर्विशेषे भिदा कुतः॥ ४०१॥**

त्यो द्रष्टा, दृश्य र दर्शन आदि भावमा शून्य निर्विकार, निराकार र निर्विशेष एक वस्तुमा भला (फेरी) भेद (भिन्नता) कहाँबाट आयो?

**कल्पार्णव इवात्यन्तपरिपूर्णैकवस्तुनि।**
**निर्विकारे निराकारे निर्विशेषे भिदा कुतः॥ ४०२॥**

प्रलयकालको समुन्द्रको समान अत्यन्त परिपूर्ण एक पदार्थमा जुन निर्विकार, निराकार र निर्विशेष हो भला(फेरी) भेद(भिन्नता) कहाँबाट आयो?

**तेजसीव तमो यत्र प्रलीनं भ्रान्तिकारणम्।**
**अद्वितीये परे तत्त्वे निर्विशेषे भिदा कुतः॥ ४०३॥**

प्रकाशमा जसरी अन्धकार हराउँछ (लिन हुनु) त्यसरी नै जसमा भ्रमको कारण अज्ञान हराउछ त्यस्तो अद्वितीय र निर्विशेष परम तत्त्वमा भला (फेरी) भिन्नता कहाँबाट आयो?

**एकात्मके परे तत्त्वे भेदवार्ता कथं भवेत्।**
**सुषुप्तौ सुखमात्रायां भेदः केनावलोकितः॥ ४०४॥**

एकात्मक अद्वितीय परमतत्त्वमा फेरी भेदको कुरा नै के हुन सक्छ? केवल सुख स्वरूपा सुषुप्तीमा कसले विभिन्नता देखेको हो?

**नह्यस्ति विश्वं परतत्त्वबोधात्**
**सदात्मनि ब्रह्मणि निर्विकल्पे।**
**कालत्रये नाप्यहिरीक्षितो गुणे**
**नह्यम्बुबिन्दुर्मृगतृष्णिकायाम् ॥ ४०५॥**

परम्तत्त्वको जानेपछि सत्स्वरूप निर्विकल्प परब्रह्ममा विश्वको केही

जानकारी नै हुँदैन, तीनै अवस्थामा पनि कहिले कसैले डोरीमा सर्प र मृगतृष्णामा पानीको बूँद देखिदैन।

**मायामात्रमिदं द्वैतमद्वैतं परमार्थतः।**
**इति ब्रूते श्रुतिः साक्षात्सुषुप्तावनुभूयते॥ ४०६॥**

श्रुति साक्षत् भन्दछ की यो द्वैत माया मात्र हो, वास्तवमा त अद्वैत नै हो, र यसरी नै सुषुप्तिमा अनुभव पनि हुन्छ।

**अनन्यत्वमधिष्ठानादारोप्यस्य निरीक्षितम्।**
**पण्डितै रज्जुसर्पादौ विकल्पो भ्रान्तिजीवनः॥ ४०७॥**

डोरी-सर्प आदिमा बुद्धिमान पुरूषले अध्यस्त बस्तुको अधिष्ठानबाट अभेद स्पष्ट देख्दछ, यसको लागि (ब्रह्ममा अध्यस्त यो संसाररूप) विकल्प अज्ञानजन्य भ्रमको कारण नै जीवित (स्थित) हो।

## आत्म-चिन्तनको विधान (नियम)

**चित्तमूलो विकल्पोऽयं चित्ताभावे न कश्चन।**
**अतश्चित्तं समाधेहि प्रत्यग्रूपे परात्मनि॥ ४०८॥**

यो विकल्प चित्त -मूलक हो, चित्तको अभाव भएपछि यसको कही नाम निशान पनि रहदैन। यसको लागि चित्तको प्रत्येक चैतन्य-स्वरूप आत्मामा स्थिर गर।

**किमपि सततबोधं केवलानन्दरूपं**
**निरुपममतिवेलं नित्यमुक्तं निरीहम्।**
**निरवधि गगनाभं निष्कलं निर्विकल्पं**
**हृदि कलयति विद्वान्ब्रह्म पूर्णं समाधौ॥ ४०९॥**

कुनै नित्य बोध स्वरूप केवलानन्द रूप, उपमा रहित, कालातीत, नित्यमुक्त, निश्चेष्ट, आकाशको समान निःसीम कलारहित, निर्विकल्प पूर्ण ब्रह्मको विद्वान समाधि अवस्थामा आफ्नो अन्तःकरणमा साक्षात अनुभव गर्दछ।

**प्रकृतिविकृतिशून्यं भावनातीतभावं**
**समरसमसमानं मानसम्बन्धदूरम्।**
**निगमवचनसिद्धं नित्यमस्मत्प्रसिद्धं**
**हृदि कलयति विद्वान्ब्रह्म पूर्णं समाधौ॥ ४१०॥**

कारण र कार्यबाट रहित, मानवी भावनाबाट अतीत, समरस, उपमारहित, प्रमाणको पहुँचबाट पर (टाढा), वेद वाक्यबाट सिद्ध, नित्य, अस्मत्(म) रूपमा स्थित पूर्ण ब्रह्मको विद्वान समाधि अवस्थामा आफ्नो अन्त:करणमा अनुभव गर्दछ।

**अजरममरमस्ताभासवस्तुस्वरूपं**
**स्तिमितसलिलराशिप्रख्यमाख्याविहीनम्।**
**शमितगुणविकारं शाश्वतं शान्तमेकं**
**हृदि कलयति विद्वान्ब्रह्म पूर्णं समाधौ॥ ४११॥**

अजर, अमर, आभास शून्य, वस्तुस्वरूप, निश्चल जल राशीको समान, नाम रूपले रहित, गुणको विकारबाट शून्य, नित्य, शान्तस्वरूप र अद्वितीय पूर्ण ब्रह्मको विद्वान समाधि अवस्थामा हृदयमा साक्षात अनुभव गर्दछ।

**समाहितान्त:करण: स्वरूपे**
**विलोकयात्मानमखण्डवैभवम्।**
**विच्छिन्धि बन्धं भवगन्धगन्धितं**
**यत्नेन पुंस्त्वं सफलीकुरुष्व॥ ४१२॥**

आफ्नो स्वरूपमा चित्तलाई स्थिर गरेर अखण्ड ऐश्वर्य सम्पन्न आत्माको साक्षात्कार गर, संसार गन्धबाट युक्त बन्धनलाई काट र यत्नपूर्वक आफ्नो मनुष्य जन्मको सफल गर।

**सर्वोपाधिविनिर्मुक्तं सच्चिदानन्दमद्वयम्।**
**भावयात्मानमात्मस्थं न भूय: कल्पसेऽध्वने॥ ४१३॥**

सबै उपाधिबाट रहित अद्वितीय सच्चिदानन्द स्वरूप आफ्नो अन्त:करणमा स्थित आत्माको चिन्तन गर्दै रह, यसबाट तिमी फेरी संसार चक्रमा पर्दैनौ।

# दृश्यको उपेक्षा

**छायेव पुंसः परिदृश्यमान-**
**माभासरूपेण फलानुभूत्या।**
**शरीरमाराच्छववन्निरस्तं**
**पुनर्न सन्धत्त इदं महात्मा॥ ४१४॥**

मनुष्यलाई छायाँको समान केबल आभास रूपमा देखिने यो शरीरको, यसको फलको विचार गरेर शव(लास) को समान एकपटक बाध (कष्ट) गर्नाले महात्मगण यसलाई फेरी स्वीकार गर्दैन।

**सततविमलबोधानन्दरूपं समेत्य**
**त्यज जडमलरूपोपाधिमेतं सुदूरे।**
**अथ पुनरपि नैष स्मर्यतां वान्तवस्तु**
**स्मरणविषयभूतं कल्पते कुत्सनाय॥ ४१५॥**

आफ्नो नित्य र निर्मल चिदानन्दमय स्वरूपलाई प्राप्त गरेर यो मलरूप जड उपाधिको टाडैबाट सधैको लागि त्याग गरिदेउ र फेरी कहिल्यै यसको याद पनि नगर, किनकी निषेद गरिएको वस्तुको याद गर्नाले वान्ता जस्तो विगार्ने वाला नै हुन्छ।

**समूलमेतत्परिदह्य वह्नौ**
**सदात्मनि ब्रह्मणि निर्विकल्पे।**
**ततः स्वयं नित्यविशुद्धबोधा-**
**नन्दात्मना तिष्ठति विद्वरिष्ठः॥ ४१६॥**

विचारवानमा श्रेष्ठ महात्माजन यो स्थूल सुक्ष्म जगतको यसको मूलकारण मायासहित निर्विकल्प सत्स्वरूप ब्रह्माग्निमा भस्म गरेर फेरी स्वयं नित्य विशुद्ध बोधानन्दस्वरूपजस्तो स्थित रहन्छ।

**प्रारब्धसूत्रग्रथितं शरीरं**
**प्रायातु वा तिष्ठतु गोरिव स्त्रक्।**
**न तत्पुनः पश्यति तत्त्ववेत्ता-**
**नन्दात्मनि ब्रह्मणि लीनवृत्तिः॥ ४१७॥**

गाई आफ्नो गलामा परेको माला रहनु अथवा झर्नुमा कुनै ध्यान दिदैन यस्तै प्रकार प्रारब्धको डोरीमा बाधिएको यो शरीर रहनु अथवा नरहनु, जसको चित्तवृत्ति आनन्दस्वरूप ब्रह्ममा लीन भएको छ, त्यस्तो तत्त्ववेत्ता फेरी यहाँ देखा पर्दैन।

**अखण्डानन्दमात्मानं विज्ञाय स्वस्वरूपतः।**
**किमिच्छन् कस्य वा हेतोर्देहं पुष्णाति तत्त्ववित्॥ ४१८॥**

अखण्ड आनन्दस्वरूप आत्माको नै आफ्नो स्वरूप बुझेर (जानेर) कुन इच्छा तथा कुन कारणबाट तत्त्ववेत्ता यो शरीरलाई पोषण गर्दछ?

## आत्मज्ञानको फल

**संसिद्धस्य फलं त्वेतज्जीवन्मुक्तस्य योगिनः।**
**बहिरन्तः सदानन्दरसास्वादनमात्मनि॥ ४१९॥**

आत्मज्ञानमा सम्यक सिद्धि प्राप्त गरेको जीवमुक्त योगीलाई यो फल मिल्दछ कि आफ्नो आत्माको नित्यानन्द रसको बाहिर भित्र निरन्तर आस्वादन (आनन्दपान) गरिरहन्छ।

**वैराग्यस्य फलं बोधो बोधस्योपरतिः फलम्।**
**स्वानन्दानुभवाच्छान्तिरेषैवोपरतेः फलम्॥ ४२०॥**

वैराग्यको फल बोध हो र बोधको फल उपरति (विषयबाट उदासिनता) हो तथा उपरतिको फल यो हो कि आत्मानन्दको अनुभवबाट चित्त शान्त होस्।

**यद्युत्तरोत्तराभावः पूर्वपूर्वं तु निष्फलम्।**
**निवृत्तिः परमा तृप्तिरानन्दोऽनुपमः स्वतः॥ ४२१॥**

यदि पछि-पछिका वस्तुको प्राप्त नभएमा पहिला कुरा निष्फल हो। (अर्थात् आत्म शान्ति विना उपरति, उपरति विना बोध र बोध विना वैराग्य निष्फल हो)। विषयबाट निवृत्त हुन जानु नै परम् तृप्ति हो र त्यही साक्षात् अनुपम आनन्द हो।

**दृष्टदुःखेष्वनुद्वेगो विद्यायाः प्रस्तुतं फलम्।**
**यत्कृतं भ्रान्तिवेलायां नाना कर्म जुगुप्सितम्।**
**पश्चान्नरो विवेकेन तत्कथं कर्तुमर्हति॥ ४२२॥**

प्रारब्धवस प्राप्त भएको दुःखबाट विचलित नहुनु नै आत्म ज्ञानको सबैभन्दा पहिलो फल हो। भ्रान्ती (भ्रम) को समय पुरूषले जुन जुन विभिन्न प्रकारको निन्दनीय कर्म गर्दछ त्यसैको ज्ञान भएपछि उसले विवेकपूर्ण कसरी गर्न सक्दछ?

**विद्याफलं स्यादसतो निवृत्तिः**
**प्रवृत्तिरज्ञानफलं तदीक्षितम्।**
**तज्ज्ञाज्ञयोर्यन्मृगतृष्णिकादौ**
**नो चेद्विदो दृष्टफलं किमस्मात्॥ ४२३॥**

विद्याको फल असत्‌बाट निवृत्त हुनु र अविद्याको उसमा प्रवृत्त हुनु हो। यी दुबै फल ज्ञानी र अज्ञानी पुरूषको मृगतृष्णा आदिको प्रतीतिमा उसलाई जान्ने वा नजान्नेमा देखिन्छ। नभए(यदि मुर्ख मानिसको सरह विद्वानको पनि असत् पदार्थमा प्रवृत्ति बनिरहेमा) विद्याको प्रत्यक्षफल नै के हुन्छ?

**अज्ञानहृदयग्रन्थेर्विनाशो यद्यशेषतः।**
**अनिच्छोर्विषयः किन्नु प्रवृत्तेः कारणं स्वतः॥ ४२४॥**

यदि अज्ञानरूपी हृदयको ग्रन्थिको सर्वथा नाश भएमा त्यो इच्छारहित पुरूषको लागि संसारिक विषय के स्वतः नै प्रवृतिको कारण हुन जान्छ?

**वासनानुदयो भोग्ये वैराग्यस्य परोऽवधिः।**
**अहंभावोदयाभावो बोधस्य परमोऽवधिः।**
**लीनवृत्तेरनुत्पत्तिर्मर्यादोपरतेस्तु सा॥ ४२५॥**

भोग्यवस्तुमा वासनाको उदय नहुनु वैराग्यको चरम अवधि हो, चित्तमा अहंकारको सर्वथा उदय नहुनु नै बोधको चरम सीमा हो र लीन भएको वृत्तियको पुनः उत्पन्न नहुनु यो उपरामताको सीमा हो।

# जीवमुक्तको लक्षण

**ब्रह्माकारतया सदा स्थिततया निर्मुक्तबाह्यार्थधी-**
**रन्यावेदितभोग्यभोगकलनो निद्रालुवद्बालवत्।**
**स्वप्नालोकितलोकवज्जगदिदं पश्यन्क्वचिल्लब्धधी-**
**रास्ते कश्चिदनन्तपुण्यफलभुग्धन्यः स मान्यो भुवि॥ ४२६॥**

निरन्तर ब्रह्माकार वृत्तिमा स्थित रहनाको कारण जसको बुद्धि बाह्य विषयबाट निस्कन्छ र जो निन्द्रालु अथवा बालकको समान, दोश्राले निवेदन गरेर पछि भोग्य पदार्थको सेवन गर्दछ तथा कहिलेकाहीँ विषयमा बुद्धि गएर पनि जो यो संसारको स्वप्न प्रपंचको समान देख्दछ, उ अनन्त पुण्यको फलको भोग्ने कुनै ज्ञानी महापुरूष यो पृथ्वी तलमा धन्य हो र सबैको माननीय हो।

**स्थितप्रज्ञो यतिरयं यः सदानन्दमश्नुते।**
**ब्रह्मण्येव विलीनात्मा निर्विकारो विनिष्क्रियः॥ ४२७॥**

जो यति (परमेश्वर, सन्यासी) परब्रह्ममा चित्तलाई लीन गरेर विकार र क्रियालाई त्याग (छाडेर) गरेर सदा आनन्दस्वरूप ब्रह्ममा मग्न रहन्छ, उ स्थित प्रज्ञ कहलिन्छ।

**ब्रह्मात्मनोः शोधितयोरेकभावावगाहिनी।**
**निर्विकल्पा च चिन्मात्रा वृत्तिः प्रज्ञेति कथ्यते।**
**सुस्थिता सा भवेद्यस्य जीवन्मुक्तः स उच्यते॥ ४२८॥**

(**'तत्त्वमसि'** आदि महावाक्यबाट) शोधित ब्रह्म र आत्माको एकताको ग्रहण गर्नेले विकल्प रहित चिन्मात्र-वृत्तिलाई प्रज्ञा भनिन्छ। यो चिन्मात्र-वृत्ति जसमा स्थिर रहन्छ उसैलाई जीवमुक्त भनिन्छ।

**यस्य स्थिता भवेत्प्रज्ञा यस्यानन्दो निरन्तरः।**
**प्रपञ्चो विस्मृतप्रायः स जीवन्मुक्त इष्यते॥ ४२९॥**

जसको प्रज्ञा स्थिर हो, जो निरन्तर आत्मानन्दको अनुभव गर्दछ र प्रपञ्चलाई भूलेसरह रहन्छ उही पुरूषलाई जीवमुक्त मानिन्छ।

**लीनधीरपि जागर्ति यो जाग्रद्धर्मवर्जितः।**
**बोधो निर्वासनो यस्य स जीवन्मुक्त इष्यते॥ ४३०॥**

वृत्तिमा लीन रहेपनि जो जागी रहन्छ तर वास्तवमा जो जागृतिको धर्मबाट रहित छ* तथा जसको बोध सर्वथा वासना रहित छ उ पुरूष जीवमुक्त भनिन्छ ।

**शान्तसंसारकलनः कलावानपि निष्कलः।**
**यः सचित्तोऽपि निश्चिन्तः स जीवन्मुक्त इष्यते॥ ४३१॥**

जसको संसार वासना शान्त भएको छ, जो कलावान भएर पनि कलाहिन छ अर्थात व्यवहार दृष्टिमा माथिबाट विकारवान प्रतीत (देखिने) भएर पनि जो निरन्तर आफ्नो निर्विकार स्वरूपमा नै स्थित रहन्छ तथा जो चित्तयुक्त भएर निश्चित छ, उही पुरूषलाई जीवमुक्त मानिन्छ।

**वर्तमानेऽपि देहेऽस्मिञ्छायावदनुवर्तिनि।**
**अहंताममताभावो जीवन्मुक्तस्य लक्षणम्॥ ४३२॥**

प्रारब्धको समाप्ति पछि छायाँको समान सदैव सत्य रहने यो शरीर वर्तमान रहेर पनि अहंभाव (म मेरो पन) को अभाव भएपछि जीवमुक्तको लक्षण हो।

**अतीताननुसन्धानं भविष्यदविचारणम्।**
**औदासीन्यमपि प्राप्ते जीवन्मुक्तस्य लक्षणम्॥ ४३३॥**

बितेका कुराको याद नगर्नु, भविष्यको चिन्ता नगर्नु र वर्तमानमा प्राप्त भएको सुख दुःखादिमा उदासीनता(तटस्थता) यो जीवमुक्तिको लक्षण हो।

**गुणदोषविशिष्टेऽस्मिन्स्वभावेन विलक्षणे।**
**सर्वत्र समदर्शित्वं जीवन्मुक्तस्य लक्षणम्॥ ४३४॥**

---

*'वृत्तिमा लीन रहेपनि जो जागीरहन्छ' यसको अभिप्राय हो कि यद्यपी उसको चित्त सम्पूर्ण दृश्य पदार्थको बाधा (दुःख) गरेर निरन्तर ब्रह्ममा लीन रहन्छ, तर पनि उ निदाएको पुरूषको समान संज्ञाशून्य हुदैन, सबै व्यवहार यथावत् रूपमा गर्दै रहन्छ। तर व्यवहार गरेर पनि उसले सपना समान सम्झेको कारण उसको अन्य पुरूषको सरह देखिएको पदार्थमा आस्था हुँदैन। यसो हुँदा 'वास्तवमा उ जागृतिको धर्मबाट रहित हो।'

आफ्नो आत्मस्वरूपबाट सर्वथा फरक यो गुणदोषमय संसारमा सबैतिर समदर्शी हुनु जीवमुक्तिको लक्षण हो।

**इष्टानिष्टार्थसम्प्राप्तौ समदर्शितयात्मनि।**
**उभयत्राविकारित्वं जीवन्मुक्तस्य लक्षणम्॥ ४३५॥**

इष्ट अथवा अनिष्ट वस्तुको प्राप्तिमा समभाव राख्नुको कारण दुवै अवस्थामा चित्तलाई कुनै विकार नहुनु जीवमुक्त पुरूषको लक्षण हो।

**ब्रह्मानन्दरसास्वादासक्तचित्ततया यतेः।**
**अन्तर्बहिरविज्ञानं जीवन्मुक्तस्य लक्षणम्॥ ४३६॥**

ब्रह्मानन्दरसास्वादमा चित्तको आशक्ति रहनाको कारण बाह्य र आन्तरिक वस्तुको कुनै ज्ञान नहुनु जीवमुक्तको लक्षण हो।

**देहेन्द्रियादौ कर्तव्ये ममाहंभाववर्जितः।**
**औदासीन्येन यस्तिष्ठेत्स जीवन्मुक्तलक्षणः॥ ४३७॥**

शरीर र इन्द्रिय आदिमा र कर्तव्यमा जुन ममता र अहंकारबाट रहित भएर उदासिनता (तथष्टता) पूर्वक रहन्छ उही पुरूष जीवमुक्तको लक्षणबाट मुक्त हो।

**विज्ञात आत्मनो यस्य ब्रह्मभावः श्रुतेर्बलात्।**
**भवबन्धविनिर्मुक्तः स जीवन्मुक्तलक्षणः॥ ४३८॥**

जसले श्रुति प्रमाणबाट आफ्नो आत्माको ब्रह्मत्त्व जानेको छ र जो संसार बन्धनबाट रहित छ उही पुरूष जीवमुक्तको लक्षण हो।

**देहेन्द्रियेष्वहंभाव इदंभावस्तदन्यके।**
**यस्य नो भवतः क्वापि स जीवन्मुक्त इष्यते॥ ४३९॥**

जसको शरीर र इन्द्रिय आदिमा अहंभाव तथा अन्य वस्तुमा इदं (यो) भाव कहिल्यै नभएको पुरूष जीवमुक्त मानिन्छ।

**न प्रत्यग्ब्रह्मणोर्भेदं कदापि ब्रह्मसर्गयोः।**
**प्रज्ञया यो विजानाति स जीवन्मुक्त इष्यते॥ ४४०॥**

जो आफ्नो तत्त्वावगाहिनी बुद्धिबाट आत्मा र ब्रह्म तथा ब्रह्म र संसारमा कुनै भेद देख्दैन उही पुरूष जीवयुक्त मानिएको छ।

**साधुभिः पूज्यमानेऽस्मिन्पीड्यमानेऽपि दुर्जनैः।**
**समभावो भवेद्यस्य स जीवन्मुक्त इष्यते॥ ४४१॥**

साधु पुरूषद्वारा यो शरीरको सत्कार गरेर जाने र दुष्टजनबाट पीडित भएर पनि जसको चित्तमा समानभाव रहन्छ उही मनुष्य जीवमुक्त मानिन्छ।

**यत्र प्रविष्टा विषयाः परेरिता**
**नदीप्रवाहा इव वारिराशौ।**
**लिनन्ति सन्मात्रतया न विक्रिया-**
**मुत्पादयन्त्येष यतिर्विमुक्तः॥ ४४२॥**

समुन्द्रमा मिसिए पछि जसरी नदिको प्रवाह समुन्द्र रूप हुन जान्छ त्यसरी नै अर्को द्वारा प्रस्तुत गरिएको विषय आत्मस्वरूप प्रतीत हुनाले जसको चित्तमा कुनै प्रकारको क्षोभ (डाहा) उत्पन्न गर्दैन उ ब्रह्मनिष्ठ सन्यासी (यति) जीवमुक्त हो।

**विज्ञातब्रह्मतत्त्वस्य यथापूर्वं न संसृतिः।**
**अस्ति चेन्न स विज्ञातब्रह्मभावो बहिर्मुखः॥ ४४३॥**

ब्रह्म तत्त्वलाई जानेको विद्वानलाई पूर्ववत संसारको आस्था रहदैन र यदि फेरी संसारको आस्था बनि रह्यो भने सम्झन पर्यो की उ त संसारी नै हो। उसलाई ब्रह्म तत्त्वको ज्ञान नै भएको छैन।

**प्राचीनवासनावेगादसौ संसरतीति चेत्।**
**न सदेकत्वविज्ञानान्मन्दीभवति वासना॥ ४४४॥**

यदि भनौकी पूर्ववासनाको प्रवलताले फेरी यसको संसारमा प्रवृत्ति रहन सक्दछ, यस्तो कुरा होइन किनकी ब्रह्मको एकत्त्व ज्ञानबाट (विषयको दुःख हुन जानाको कारण) यसको वासना मन्द हुन जान्छ।

**अत्यन्तकामुकस्यापि वृत्तिः कुण्ठति मातरि।**
**तथैव ब्रह्मणि ज्ञाते पूर्णानन्दे मनीषिणः॥ ४४५॥**

जसरी अत्यन्त कामी पुरूषको पनि कामवृत्ति आमालाई देखेर कुण्ठित हुन्छ, त्यहि किसिमले पूर्णानन्दस्वरूपब्रह्मलाई जानेपछि विद्वानको संसारमा प्रवृत्ति हुँदैन।

## प्रारब्ध-विचार

**निदिध्यासनशीलस्य बाह्यप्रत्यय ईक्ष्यते।**
**ब्रवीति श्रुतिरेतस्य प्रारब्धं फलदर्शनात्॥ ४४६॥**

निदिध्यासनशील (आत्मचिन्तनमा लागेको) पुरूषको बाह्य पदार्थको प्रतीति भएको देखिन्छ, फलभोग देखिने कारण श्रुति उसलाई उसको प्रारव्ध बताउँछ।

**सुखाद्यनुभवो यावत्तावत्प्रारब्धमिष्यते।**
**फलोदयः क्रियापूर्वो निष्क्रियो न हि कुत्रचित्॥ ४४७॥**

(युक्तिबाट पनि) जबसम्म सुख दुःख आदिको अनुभव हुन्छ तवसम्म प्रारव्ध मानिन्छ, किनकी फलको भोग क्रियापूर्वक हुन्छ विनाकर्मको कहि हुँदैन।

**अहं ब्रह्मेति विज्ञानात्कल्पकोटिशतार्जितम्।**
**सञ्चितं विलयं याति प्रबोधात्स्वप्नकर्मवत्॥ ४४८॥**

बिउझेपछि जसरी सपना अवस्थाको कर्म लीन हुन जान्छ त्यसरी नै 'म ब्रह्म हुँ' यस्तो ज्ञान भएपछि करोडौं कर्मको संचित कर्म नष्ट हुन जान्छ।

**यत्कृतं स्वप्नवेलायां पुण्यं वा पापमुल्बणम्।**
**सुप्तोत्थितस्य किं तत्स्यात्स्वर्गाय नरकाय वा॥ ४४९॥**

सपनामा जुन पूण्य तथा पाप गरेको हुन्छ के बुँझेपछि त्यो स्वर्ग अथवा नरकको प्राप्तिको कारण हुन सक्छ?

**स्वमसङ्गमुदासीनं परिज्ञाय नभो यथा।**
**न श्लिष्यते यतिः किञ्चित्कदाचिद्भाविकर्मभिः॥ ४५०॥**

जुन यति (ब्रह्मनिष्ठ सन्यासी) आफूलाई आकाशको समान असंग र उदासीन (तथष्ट) जान्दछ उ कुनै पनि आगामी कर्मबाट कहिल्यै थोरै पनि लिप्त हुन सक्दैन।

**न नभो घटयोगेन सुरागन्धेन लिप्यते।**
**तथात्मोपाधियोगेन तद्धर्मैर्नैव लिप्यते॥ ४५१॥**

जसरी घडाको सम्बन्धबाट घडामा राखिएको मदिराको गन्धबाट

आकाशको कुनै सम्बन्ध हुँदैन, त्यही किसिमले उपाधिको सम्बन्धले आत्मा उपाधिको सम्बन्धमा धर्मबाट लिप्त हुँदैन।

**ज्ञानोदयात्पुरारब्धं कर्म ज्ञानान्न नश्यति।**
**अदत्त्वा स्वफलं लक्ष्यमुद्दिश्योत्सृष्टबाणवत्॥ ४५२॥**
**व्याघ्रबुद्ध्या विनिर्मुक्तो बाणः पश्चात्तु गोमतौ।**
**न तिष्ठति छिनत्त्येव लक्ष्यं वेगेन निर्भरम्॥ ४५३॥**

लक्ष्य भेदी छोडिएको वाणको समान ज्ञानको उदयबाट पहिला शुरू गरिएको कर्म आफ्नो फल नदिइकन ज्ञानबाट नष्ट हुँदैन जसरी बाघ संझेर गाईका उपर छाडिएको वाण पछि त्यसलाई गाई भन्ने जानेर पनि विचमा रोक्न सकिदैन, उसले त तुरून्त आफ्नो लक्ष्य पुरा गर्दछ।

**प्रारब्धं बलवत्तरं खलु विदां भोगेन तस्य क्षयः**
**सम्यग्ज्ञानहुताशनेन विलयः प्राक्सञ्चितागामिनाम्।**
**ब्रह्मात्मैक्यमवेक्ष्य तन्मयतया ये सर्वदा संस्थिता-**
**स्तेषां तत्त्रितयं न हि क्वचिदपि ब्रह्मैव ते निर्गुणम्॥ ४५४॥**

विद्वानको प्रारव्ध कर्म अवश्य बलवान् हुन्छ। उसको क्षय भोगबाट नै हुन सक्दछ। त्यसको अतिरिक्त पूर्व संचित र आगामी कर्मको त तत्त्वज्ञानरूप अग्निबाट क्षय हुन जान्छ तर जसले ब्रह्म र आत्माको एकतालाई जानेर सधै उसै भावमा स्थित रहन्छ भने उनको दृष्टिमा त त्यो (प्रारब्ध, संचित र आगामी) तीनै प्रकारको कर्म हुँदैन, उ त मानै साक्षात् निर्गुण ब्रह्म नै हो।

**उपाधितादात्म्यविहीनकेवल-**
**ब्रह्मात्मनैवात्मनि तिष्ठतो मुनेः।**
**प्रारब्धसद्भावकथा न युक्ता**
**स्वप्नार्थसम्बन्धकथेव जाग्रतः॥ ४५५॥**

जुन मुनिश्रेष्ठ उपाधिको सम्बन्धलाई छाडेर केवल ब्रह्मात्मा भावमा नै आफ्नो स्वरूपमा स्थित रहन्छ त्यसको प्रारब्ध कर्मको स्थितिको कुरा सपनामा देखिएको पदार्थबाट उठेको पुरूष सम्बन्ध बताउनुजस्तो अनुचित हुन्छ।

**न हि प्रबुद्धः प्रतिभासदेहे**
**देहोपयोगिन्यपि च प्रपञ्चे।**
**करोत्यहन्तां ममतामिदन्तां**
**किन्तु स्वयं तिष्ठति जागरेण॥ ४५६॥**

जागेको पुरूष सपनाको प्रतिभास (एउटा वस्तुमा अर्को भान हुने) शरीर तथा त्यो शरीर उपयोगी सपना प्रपञ्चमा कहिल्यै अहंता, ममता, इदंता (मै, मेरो, योपना) रहदैन, उ त केवल जागृत भावबाट नै रहन्छ।

**न तस्य मिथ्यार्थसमर्थनेच्छा**
**न सङ्ग्रहस्तज्जगतोऽपि दृष्टः।**
**तत्रानुवृत्तिर्यदि चेन्मृषार्थे**
**न निद्रया मुक्त इतीष्यते ध्रुवम्॥ ४५७॥**

उसको न त झुटो वस्तुलाई सिद्ध गर्ने इच्छा हुन्छ र न उसको साथमा संसारिक पदार्थको संग्रह नै देखिन्छ। यदि फेरी पनि उसको झुटो पदार्थमा प्रवृत्ति रहेमा यो निश्चित छ कि वास्तवमा उसको नीद छुटेको छैन।

**तद्वत्परे ब्रह्मणि वर्तमानः**
**सदात्मना तिष्ठति नान्यदीक्षते।**
**स्मृतिर्यथा स्वप्नविलोकितार्थे**
**तथा विदः प्राशनमोचनादौ॥ ४५८॥**

यसरी सदा ब्रह्म भावमा रहने पुरूष ब्रह्म रूपमा नै स्थित रहन्छ, उ (ब्रह्मको शिवाय) अरू कुनै देख्दैन। जसरी सपनामा देखिएको पदार्थको याद आउँछ, त्यस्तै गरी विद्वानको खाना खानु र छोड्नु आदि क्रिया स्वभावअनुसार आफैं नै भइरहन्छ।

**कर्मणा निर्मितो देहः प्रारब्धं तस्य कल्प्यताम्।**
**नानादेरात्मनो युक्तं नैवात्मा कर्मनिर्मितः॥ ४५९॥**

शरीर कर्मबाट नै बनेको हो अतः प्रारब्ध पनि उसैलाई सम्झनुपर्छ अनादि आत्माको प्रारब्ध मान्नु ठिक होइन किनकी आत्मा कर्मबाट बनेको होइन।

**अजो नित्य इति ब्रूते श्रुतिरेषा त्वमोघवाक्।**
**तदात्मना तिष्ठतोऽस्य कुतः प्रारब्धकल्पना॥ ४६०॥**

'आत्मा अजन्मा, नित्य र अनादि हो' यस्तो यथार्थ भनाइ श्रुतिले भन्दछ फेरी त्यो आत्मा स्वरूपमा सदा स्थित रहनेवाला विद्वानको प्रारब्ध कर्म बाकी रहने कल्पना कसरी हुन सक्छ?

**प्रारब्धं सिध्यति तदा यदा देहात्मना स्थितिः।**
**देहात्मभावो नैवेष्टः प्रारब्धं त्यज्यतामतः॥ ४६१॥**

प्रारब्ध त त्याहाँसम्म सिद्ध हुन्छ जबसम्म शरीरमा आत्मा भावना रहन्छ र देहात्मभाव मुमुक्षुको लागि इष्ट हुँदैन उसको लागि प्रारब्धको आस्थालाई पनि छाडिदिनु पर्दछ।

**शरीरस्यापि प्रारब्धकल्पना भ्रान्तिरेव हि।**
**अध्यस्तस्य कुतः सत्त्वमसत्त्वस्य कुतो जनिः।**
**अजातस्य कुतो नाशः प्रारब्धमसतः कुतः॥ ४६२॥**

वास्तवमा शरीरलाई पनि प्रारब्ध मान्नु भ्रम नै हो। किनकी उ त आफैंमा अध्यस्त वस्तुको सत्ता नै कहाँ हुन्छ? तथा उसको सत्ता नै छैन, उसको जन्म पनि कहाँबाट आयो? र जसको जन्म नै छैन, उसको नाश पनि कसरी हुन सक्छ। यसरी जुन सर्वथा सत्ता शून्य हो, त्यस (शरीर) को पनि प्रारब्ध कसरी हुन सक्छ?

**ज्ञानेनाज्ञानकार्यस्य समूलस्य लयो यदि।**
**तिष्ठत्ययं कथं देह इति शङ्कावतो जडान्।**
**समाधातुं बाह्यदृष्ट्या प्रारब्धं वदति श्रुतिः॥ ४६३॥**
**न तु देहादिसत्यत्वबोधनाय विपश्चिताम्।**
**यतः श्रुतेरभिप्रायः परमार्थैकगोचरः॥ ४६४॥**

जसले यस्तो शंका गर्दछ छ कि यदि ज्ञानबाट अज्ञानको मुल सहित नाश हुन्छ भने ज्ञानीको यो स्थूल शरीर कसरी रहन्छ, ती मूर्खलाई सम्झाउनुको लागि श्रुति माथिल्लो दृष्टिबाट (व्यवहार सत्तालाई लिएर) प्रारब्ध त्यसको कारण बताउँछन्। ती विद्वानलाई शरीरादिका सत्यत्त्व

सम्झाउनको लागि यस्तो भनिदैन। किनकी श्रुतिको अभिप्राय (उद्देश्य) त एकमात्र परमार्थ वस्तुको वर्णन गर्नमा नै हो।

## नानात्व-निषेध

**परिपूर्णमनाद्यन्तमप्रमेयमविक्रियम् ।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४६५॥**

(श्रुति भन्दछ) वास्तवमा सर्वत्र परिपूर्ण, अनादि, अनन्त, अप्रमेय र अविकारी एक अद्वितीय ब्रह्म नै हो उसका अन्य विभिन्न पदार्थ छैन।

**सद्घनं चिद्घनं नित्यमानन्दघनमक्रियम्।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४६६॥**

जो धनिभूत सत् चित्त र आनन्द हो, यस्तो एउटा नित्य अक्रिय र अद्वितीय ब्रह्म नै सत्य वस्तु हो। उसमा कुनै विभिन्न पदार्थ हुँदैन।

**प्रत्यगेकरसं पूर्णमनन्तं सर्वतोमुखम्।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४६७॥**

जुन अन्तरात्मा, एकरस, परिपूर्ण, अनन्त र सर्वव्यापक हो यस्तो एक अद्वितीय ब्रह्म नै हो, उसमा अन्य विभिन्न पदार्थ छैन।

**अहेयमनुपादेयमनाधेयमनाश्रयम् ।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४६८॥**

जुन न छाडिने छ, न लिइन्छ र न कुनैमा स्थित हुन योग्य छ तथा जसको कुनै आधार छैन यस्तो एउटा अद्वितीय ब्रह्म नै सत्य हो उसमा विभिन्न पदार्थ केही छैन।

**निर्गुणं निष्कलं सूक्ष्मं निर्विकल्पं निरञ्जनम्।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४६९॥**

जो गुण र कलाबाट रहित छ, सुक्ष्म, निर्विकल्प र निर्मल छ, यस्तो अद्वितीय ब्रह्म नै सत्य हो, उसमा विभिन्न पदार्थ केहि पनि हुँदैन।

**अनिरूप्यस्वरूपं यन्मनोवाचामगोचरम्।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४७०॥**

जसको रूप वर्णन गर्न सकिदैन तथा जो मन र वाणीको विषय पनि होइन, यस्तो एक अद्वितीय ब्रह्म नै हो, उसको विभिन्न वस्तु कुनै पनि छैन।

**सत्समृद्धं स्वतःसिद्धं शुद्धं बुद्धमनीदृशम्।**
**एकमेवाद्वयं ब्रह्म नेह नानास्ति किञ्चन॥ ४७१॥**

जो सत्य, वैभवपूर्ण, स्वत:सिद्ध, शुद्ध बोधस्वरूप र उपमारहित हो यस्तो एक अद्वितीय ब्रह्म नै सत्य हो। उसमा विभिन्न पदार्थ केहि पनि छैन (हुँदैन)।

## आत्मानुभवको उपदेश

**निरस्तरागा निरपास्तभोगाः**
**शान्ताः सुदान्ता यतयो महान्तः।**
**विज्ञाय तत्त्वं परमेतदन्ते**
**प्राप्ताः परां निर्वृतिमात्मयोगात्॥ ४७२॥**

जसको कुनै पनि वस्तुमा राग छैन र भोगको पनि अन्त भएको छ तथा जसको चित्त शान्त एवं इन्द्रिय संयत छ, त्यो महात्मा सन्यासजन नै यो परम् तत्त्वलाई जानेर अन्तमा यो अध्यात्म योगद्वारा परम् शान्तिको प्राप्त हुन्छ।

**भवानपीदं परतत्त्वमात्मनः**
**स्वरूपमानन्दघनं विचार्य।**
**विधूय मोहं स्वमनःप्रकल्पितं**
**मुक्तः कृतार्थो भवतु प्रबुद्धः॥ ४७३॥**

अत: हे बावु! तिमी पनि आत्माको यो परमतत्त्व र आनन्दघात-स्वरूपमा विचार गरेर आफ्नो मन:कल्पित मोहलाई छाडेर मुक्त होउ र यसप्रकार अज्ञान निद्राबाट जागेर कृतार्थ होउ।

**समाधिना साधु विनिश्चलात्मना**
**पश्यात्मतत्त्वं स्फुटबोधचक्षुषा।**

**निःसंशयं सम्यगवेक्षितश्चे-**
**च्छ्रुतः पदार्थो न पुनर्विकल्प्यते॥ ४७४॥**

समाधिद्वारा सबै प्रकारबाट निश्चल भएको चित्त र विकसित ज्ञानबाट यो आत्मातत्त्वलाई देख, किनकी यदि सुनिएको पदार्थ निसन्देह भएर सबै किसिमले देखिएमा त्यसको विषयमा फेरी कुनै शंका हुँदैन।

**स्वस्याविद्याबन्धसम्बन्धमोक्षात्**
**सत्यज्ञानानन्दरूपात्मलब्धौ ।**
**शास्त्रं युक्तिर्देशिकोक्तिः प्रमाणं**
**चान्तःसिद्धा स्वानुभूतिः प्रमाणम्॥ ४७५॥**

आफ्नो अज्ञानरूप बन्धनमा संसर्ग छुट्नाले जुन सच्चिदानन्द स्वरूप आत्माको प्राप्ति हुन्छ, उसमा शास्त्र, युक्ति, गुरूवाक्य र अन्तः कारणले सिद्ध हुने आफ्नो अनुभव प्रमाण हो।

**बन्धो मोक्षश्च तृप्तिश्च चिन्तारोग्यक्षुधादयः।**
**स्वेनैव वेद्या यज्ज्ञानं परेषामानुमानिकम्॥ ४७६॥**

बन्धन, मोक्ष, तृप्ति, चिन्ता, आरोग्य र भोक आदि आफूले जानिन्छ अर्कोलाई जुन ज्ञान हुन्छ उ त केवल अनुमान मात्र हो।

**तटस्थिता बोधयन्ति गुरवः श्रुतयो यथा।**
**प्रज्ञयैव तरेद्विद्वानीश्वरानुगृहीतया॥ ४७७॥**

श्रुतिको समान गुरूले पनि ब्रह्मको केवल तथष्ट रूपले बोध गराउछन् विद्वानको लागि आफ्नो ईश्वरानुग्रहीत* बुद्धिबाट (त्यसलाई साक्षात अनुभव गरेर) यो संसार सागरको पार हुन्छ।

---

*ब्रह्मको साक्षात् निरूपण कसैले पनि गर्न सक्दैन, किनकी उ शब्दको शक्तिवृत्ति भन्दा बाहिर छ, शब्द त्याहासम्म पुग्न नै सक्दैन। उसको ज्ञान त लक्षणावृत्तिबाट नै हुन सक्छ। अतः ब्रह्मको साक्षात्कार गर्नको लागि उसको उपाधि रूप यो निखिल (भएभरको सबै) प्रपञ्चको बाध (दुःख) गर्नुपर्दछ, किनकी यसमा उसको स्वरूपको आन्छादित (छोपिएको) गरेको हुन्छ। तर दृश्यको बाघ (दुःख) उसमा झुटो बुद्धि हुँदा बाहेक हुन सक्दैन र यस्तो बुद्धि शिष्यको ईश्वर कृपाबाट नै प्राप्त हुन्छ। यसो हुँदा बोध हुनको लागि शास्त्र-कृपा र गुरू-कृपाको समान भगवत कृपा पनि अत्यन्त आवश्यक छ।

**स्वानुभूत्या स्वयं ज्ञात्वा स्वमात्मानमखण्डितम्।**
**संसिद्धः ससुखं तिष्ठेन्निर्विकल्पात्मनात्मनि॥ ४७८॥**

आफ्नो अनुभवबाट अखण्ड आत्माको आफैंले जानेर सिद्ध भएको पुरूष निर्विकल्प भावबाट आनन्दपूर्वक सधै आत्मामा नै स्थित रहन्छ।

**वेदान्तसिद्धान्तनिरुक्तिरेषा**
**ब्रह्मैव जीवः सकलं जगच्च।**
**अखण्डरूपस्थितिरेव मोक्षो**
**ब्रह्माद्वितीये श्रुतयः प्रमाणम्॥ ४७९॥**

वेद्धान्तको सिद्धान्तले यो बताउँछ कि जीव र सम्पूर्ण जगत केवल ब्रह्म नै हो उस अद्वितीय ब्रह्ममा निरन्तर अखण्ड रूपबाट स्थित रहनु नै मोक्ष हो। ब्रह्म अद्वितीय छ–यो विषयमा श्रुति प्रमाण हो।

## बोधको उपलब्ध

**इति गुरुवचनाच्छ्रुतिप्रमाणात्**
**परमवगम्य सतत्त्वमात्मयुक्त्या ।**
**प्रशमितकरणः समाहितात्मा**
**क्वचिदचलाकृतिरात्मनिष्ठितोऽभूत् ॥४८०॥**

यस प्रकार गुरूको श्रुति प्रमाणयुक्त वचन र आफ्नो युक्तिद्वारा परमात्मा तत्त्वलाई जानेर चित्त र इन्द्रिय शान्त हुन जानाले कुनै एक शिष्य निश्चल वृत्तिबाट आत्मस्वरूपमा स्थित हुन्छ।

**कञ्चित्कालं समाधाय परे ब्रह्मणि मानसम्।**
**व्युत्थाय परमानन्दादिदं वचनमब्रवीत्॥ ४८१॥**

अरू केहि समयसम्म परब्रह्ममा चित्तलाई समाहित गरी फेरी त्यो परमानन्दमयी स्थितिबाट उठेर यो वचन बोल।

**बुद्धिर्विनष्टा गलिता प्रवृत्ति-**
**र्ब्रह्मात्मनोरेकतयाधिगत्या ।**

**इदं न जानेऽप्यनिदं न जाने**
**किं वा कियद्वा सुखमस्त्यपारम्॥ ४८२॥**

अहो! ब्रह्म र आत्माको एकताको ज्ञान हुनाले मेरो बुद्धि त एकदम नष्ट हुन गयो, विषयमा मेरो सारा प्रवृत्ति हटेर गयो मलाई न इंद (प्रत्यक्ष वस्तु) को ज्ञान छ र न अनिंद (अप्रत्यक्ष) को, र न म यो जान्दछु कि त्यो अपार आनन्द कस्तो र कति छ।

**वाचा वक्तुमशक्यमेव मनसा मन्तुं न वा शक्यते**
**स्वानन्दामृतपूरपूरितपरब्रह्माम्बुधेर्वैभवम् ।**
**अम्भोराशिविशीर्णवार्षिकशिलाभावं भजन्मे मनो**
**यस्यांशांशलवे विलीनमधुनानन्दात्मना निर्वृतम्॥ ४८३॥**

जलराशी (समुन्द्र, पानीमा) परेर पग्लिएको वर्षाकालिन असिनाको अवस्था प्राप्त भएको मेरो मन जुन आनन्दामृतसमुन्द्रको एक अंशको पनि अंशमा लिन भएर अब अति आनन्दरूपमा स्थित भएको छ, त्यो आत्मानन्दस्वरूप अमृतप्रवाहबाट परिपूर्ण परम्ब्रह्म समुन्द्रको वैभव वाणीबाट बताउन सकिदैन र मनबाट मनन गर्न सकिदैन।

**क्व गतं केन वा नीतं कुत्र लीनमिदं जगत्।**
**अधुनैव मया दृष्टं नास्ति किं महदद्भुतम्॥ ४८४॥**

त्यो संसार कहाँ गयो? उसलाई कसले लिएर गयो? यो कहाँ लीन भयो? अहो! बडो आश्चर्य छ, जुन संसारलाई मैले अहिले देखिरहेको थिए उ कहि देखिदैन।

**किं हेयं किमुपादेयं किमन्यत्किं विलक्षणम्।**
**अखण्डानन्दपीयूषपूर्णे ब्रह्ममहार्णवे॥ ४८५॥**

यो अखण्ड आनन्दमृतपूर्ण ब्रह्म-समुन्द्रमा कुन वस्तु छाड्न योग्य छ? कुन लिन योग्य? कुन सामान्य छ? र कुन विलक्षण छ?

**न किञ्चिदत्र पश्यामि न शृणोमि न वेद्म्यहम्।**
**स्वात्मनैव सदानन्दरूपेणास्मि विलक्षणः॥ ४८६॥**

अब मैले यहाँ न केहि देख्छु, न सुन्छु र न म कुनै जान्दछु नै। म

त आफ्नो नित्यानन्द आत्मामा स्थिर भएर आफ्नो पहिलाको अवस्थामा सर्वथा (सबैतिर) विलक्षण भएको छु।

**नमो नमस्ते गुरवे महात्मने**
**विमुक्तसङ्गाय सदुत्तमाय।**
**नित्याद्वयानन्दरसस्वरूपिणे**
**भूम्ने सदापारदयाम्बुधाम्ने ॥ ४८७॥**

**यत्कटाक्षशशिसान्द्रचन्द्रिकापातधूतभवतापजश्रमः।**
**प्राप्तवानहमखण्डवैभवानन्दमात्मपदमक्षयं क्षणात्॥ ४८८॥**

जसको कृपाकटाक्षरूप चन्द्रको स्निग्ध (प्रकाश, उज्यालो) चन्द्रिकाको संसर्गबाट संसार तापजन्य श्रमलाई हटेर जानाले मैले क्षणभरमा अखण्ड ऐश्वर्य र आनन्दमय अक्षय आत्मपद प्राप्त गरेको छु, ती संगरहित, सन्तशिरोमणी, नित्य-अद्वितीय-आनन्दरस स्वरूप अति महान र नित्य-अपार-दयासागर महात्मा गुरूदेवलाई बारम्वार नमस्कार छ।

**धन्योऽहं कृतकृत्योऽहं विमुक्तोऽहं भवग्रहात्।**
**नित्यानन्दस्वरूपोऽहं पूर्णोऽहं तदनुग्रहात्॥ ४८९॥**

ती श्रीगुरूदेवको कृपाले आज म धन्य छु, कृत कृत्य हुँ, संसारबन्धनबाट रहित हुँ तथा नित्यानन्द स्वरूप र सर्वत्र परिपूर्ण हुँ।

**असङ्गोऽहमनङ्गोऽहमलिङ्गोऽहमभङ्गुरः।**
**प्रशान्तोऽहमनन्तोऽहमतान्तोऽहं चिरन्तनः॥ ४९०॥**

म असंग हुँ, अशरीर हुँ, अलिंग हुँ र अक्षय हुँ, तथा अत्यन्त शान्त अनन्त, अतान्त (निरीह) र पुरातन हुँ।

**अकर्ताहमभोक्ताहमविकारोऽहमक्रियः।**
**शुद्धबोधस्वरूपोऽहं केवलोऽहं सदाशिवः॥ ४९१॥**

म अकर्ता हुँ, अभोक्ता हुँ, अविकारी हुँ, अक्रिय हुँ, शुद्धबोध स्वरूप हुँ, एक हुँ र नित्य कल्याण स्वरूप हुँ।

**द्रष्टुः श्रोतुर्वक्तुः कर्तुर्भोक्तुर्विभिन्न एवाहम्।**
**नित्यनिरन्तरनिष्क्रियनिःसीमासङ्गपूर्णबोधात्मा॥ ४९२॥**

द्रष्टा, श्रोता, वक्ता, कर्ता, भोक्ता म यी सबैभन्दा भिन्न हुँ म त नित्य, निरन्तर, निष्क्रिय, नी:सीम असंग र पूर्णबोधस्वरूप हुँ।

**नाहमिदं नाहमदोऽप्युभयोरवभासकं परं शुद्धम्।**
**बाह्याभ्यन्तरशून्यं पूर्णं ब्रह्माद्वितीयमेवाहम्॥ ४९३॥**

म न यो हुँ, न उ हुँ, बरू यी दुबै (स्थुल-सुक्ष्म-जगत्) को प्रकाशन बाह्यन्तरशून्य, पूर्ण, अद्वितीय र शुद्ध परब्रह्म नै हुँ।

**निरुपममनादितत्त्वं त्वमहमिदमद इतिकल्पनादूरम्।**
**नित्यानन्दैकरसं सत्यं ब्रह्माद्वितीयमेवाहम्॥ ४९४॥**

जुन उपमारहित अनादितत्त्व 'त, म, यो, उ' आदिको कल्पनाबाट अत्यन्त ढाडा छ उ नित्यानन्दैकरसस्वरूप सत्य र अद्वितीय ब्रह्म नै मै हुँ।

**नारायणोऽहं नरकान्तकोऽहं**
**पुरान्तकोऽहं पुरुषोऽहमीशः।**
**अखण्डबोधोऽहमशेषसाक्षी**
**निरीश्वरोऽहं निरहं च निर्ममः॥ ४९५॥**

म (क्षीरसमुन्द्रशायी) नारायण हुँ, नरकासुरको विघातक हुँ, त्रिपुर दैत्यको नाश गर्ने वाला हुँ परम पुरूष हुँ र ईश्वर हुँ। म अखण्डबोध स्वरूप हुँ सबैको साक्षी हुँ, स्वतन्त्र हुँ तथा अहंमता र ममताबाट रहित हुँ।

**सर्वेषु भूतेष्वहमेव संस्थितो**
**ज्ञानात्मनान्तर्बहिराश्रयः सन्।**
**भोक्ता च भोग्यं स्वयमेव सर्वं**
**यद्यत्पृथग्दृष्टमिदन्तया पुरा॥ ४९६॥**

ज्ञान स्वरूपबाट सबैको आश्रय भएर सबै प्राणीको बाहिर र भित्र म स्थित छु तथा पहिला जुन जुन पदार्थ प्रत्यक्षवृत्तिद्वारा फरक फरक देखिएको थियो उ भोक्ता र भोग्य सबै कुरा स्वयं म नै हुँ।

**मय्यखण्डसुखाम्भोधौ बहुधा विश्ववीचयः।**
**उत्पद्यन्ते विलीयन्ते मायामारुतविभ्रमात्॥ ४९७॥**

मेरो अखण्ड आनन्द समुन्द्रमा विश्वरूपी विभिन्न तरङ मायारूपी वायुको वेगबाट उठ्दै र विलाउँदै रहन्छ।

**स्थूलादिभावा मयि कल्पिता भ्रमा-**
**दारोपिता नु स्फुरणेन लोकैः।**
**काले यथा कल्पकवत्सराय-**
**नर्त्वादयो निष्कलनिर्विकल्पे॥ ४९८॥**

जसरी निष्कल (हानि-वृद्धि-शून्य) र निर्विकल्प समयमा स्वरूपबाट कुनै कल्प, वर्ष, अयन (उत्तरायण-दक्षिणायन) र ऋतु आदिको विभाग छैन, त्यही किसिमले मानिसमा भ्रमवस केवल स्फुरण (संझना) मात्रबाट नै आरोपित गरेर ममा स्थूल सुक्ष्म आदि भावको कल्पना गरिएको छ।

**आरोपितं नाश्रयदूषकं भवेत्**
**कदापि मूढैर्मतिदोषदूषितैः।**
**नार्द्रीकरोत्यूषरभूमिभागं**
**मरीचिकावारिमहाप्रवाहः ॥ ४९९॥**

बुद्धि-दोषबाट दूषित, अज्ञानीद्वारा आरोपित गरिएको वस्तु आफ्नो आश्रयलाई दूषित गर्न सक्दैन। जसरी मृगतृष्णाको ठूलो जलप्रवाह आफ्नो आश्रय मरूभूमी खण्डलाई (कत्ति पनि) हिलो बनाउदैन।

**आकाशवल्लेपविदूरगोऽह-**
**मादित्यवद्भास्यविलक्षणोऽहम् ।**
**अहार्यवन्नित्यविनिश्चलोऽह-**
**मम्भोधिवत्पारविवर्जितोऽहम् ॥ ५००॥**

म आकाशको समान निर्लेप हुँ, सूर्यको समान अप्रकाश्य हुँ, पर्वतको समान नित्य निश्चल हुँ र समुन्द्रको समान अपार हुँ।

**न मे देहेन सम्बन्धो मेघेनेव विहायसः।**
**अतः कुतो मे तद्धर्मा जाग्रत्स्वप्नसुषुप्तयः॥ ५०१॥**

जसरी बादलको आकाशसँग कुनै सम्बन्ध रहदैन, त्यसरी नै मेरो पनि

शरीरसँग कुनै सम्बन्ध छैन, फेरी यो शरीरको धर्म जाग्रत सपना र सुषुप्ति आदि म मा कसरी हुन सक्छ?

**उपाधिरायाति स एव गच्छति**
**स एव कर्माणि करोति भुङ्क्ते।**
**स एव जीर्यन्म्रियते सदाहं**
**कुलाद्रिवन्निश्चल एव संस्थितः॥ ५०२॥**

उपाधि पनि आउँछ त्यही जान्छ तथा उसैले कर्म गर्दछ र त्यसको फल भोग्दछ तथा वृद्धाअवस्थाको प्राप्त भएपछि मर्दछ। म त कुल पर्वतको समान नित्य निश्चल भावमा नै रहन्छु।

**न मे प्रवृत्तिर्न च मे निवृत्तिः**
**सदैकरूपस्य निरंशकस्य।**
**एकात्मको यो निविडो निरन्तरो**
**व्योमेव पूर्णः स कथं नु चेष्टते॥ ५०३॥**

म सदा एक रस र निरवयवको न कुनै विषयमा प्रवृत्ति छ र न कसैबाट निवृत्ति हुन सक्छ, जो निरन्तर एकरूप धनीभूत र आकाशको समान पूर्ण छ उ कुन प्रकार चेष्टा गर्न सक्दछ।

**पुण्यानि पापानि निरिन्द्रियस्य**
**निश्चेतसो निर्विकृतेर्निराकृतेः।**
**कुतो ममाखण्डसुखानुभूते-**
**र्ब्रूते ह्यनन्वागतमित्यपि श्रुतिः॥ ५०४॥**

इन्द्रिय, चित्त, विकार र आकृत्तिबाट रहित मरो अखण्ड आनन्दस्वरूपको पाप वा पून्य कसरी हुन सक्छु? र '**अनन्वागतं पुण्येनानन्वागतं पापेन**'* (वृह० ४।३।२२) यो श्रुति पनि यस्तो नै बताउँछ।

*यो आत्मा पून्य (शास्त्रविहित कर्म) र पाप (शास्त्रनिषिद्ध कर्म) बाट असम्वद्ध छ।

**छायया स्पृष्टमुष्णं वा शीतं वा सुष्ठु दुष्ठु वा।**
**न स्पृशत्येव यत्किञ्चित्पुरुषं तद्विलक्षणम्॥ ५०५॥**
**न साक्षिणं साक्ष्यधर्माः संस्पृशन्ति विलक्षणम्।**
**अविकारमुदासीनं गृहधर्माः प्रदीपवत्॥ ५०६॥**

जसरी उष्ण-शीत, राम्रो-नराम्रो कुनै पनि वस्तु छायाँमा रहँदा पनि उसबाट सर्वथा (कहिल्यै पनि) भिन्न पुरूषको कत्ति पनि स्पर्श (हुन) सक्दैन तथा घरमा प्रकाशित गर्ने वत्तिमा जसरी घरको (सुन्दरता, मलिनता आदि) कुनै धर्मको कुनै प्रभाव हुँदैन, त्यसरी नै शरीर आदि दृश्य पदार्थमा धर्म उसको विलक्षण उनको साक्षी आत्माको जुन विकार रहित एवं उदासिन छ, कत्ति पनि छुन सक्दैन।

**रवेर्यथा कर्मणि साक्षिभावो**
**वह्नेर्यथा वायसि दाहकत्वम्।**
**रज्जोर्यथारोपितवस्तुसङ्ग-**
**स्तथैव कूटस्थचिदात्मनो मे॥ ५०७॥**

मनुष्यको कर्ममा जसरी सूर्यको साक्षीभाव छ फलामको जलाउनुमा जसरी अग्निको दाहकता छ र आरोपित सर्प आदिमा जसरी डोरी सँगै छ त्यसरी नै मेरो कुटस्थ चेतन आत्माको विषयमा साक्षीभाव छ [अर्थात् जसरी उनको प्रवृत्ति स्वभाविक छ, क्रियमाण छैन, उसरी नै आत्माको साक्षीभाव पनि विषयको अपेक्षाबाट स्वभाविक छ, त्यो उनको क्रिया होइन।]

**कर्तापि वा कारयितापि नाहं**
**भोक्तापि वा भोजयितापि नाहम्।**
**द्रष्टापि वा दर्शयितापि नाहं**
**सोऽहं स्वयंज्योतिरनीदृगात्मा॥ ५०८॥**

म न गर्ने वाला हुँ, न गराउने वाला हुँ, न भोग्ने वाला हुँ, न भोगाउने वाला हुँ, र न देख्नेवाला, न देखाउने वाला हुँ। म त सबैबाट विलक्षण स्वयंप्रकाश आत्मा नै हुँ।

**चलत्युपाधौ प्रतिविम्बलौल्य-**
**मौपाधिकं मूढधियो नयन्ति।**
**स्वविम्बभूतं रविवद्विनिष्क्रियं**
**कर्तास्मि भोक्तास्मि हतोऽस्मि हेति॥ ५०९॥**

जसरी(जलरूप) उपाधिबाट चंचल भएपछि मूर्खबुद्धि पुरूष औपाधिक (उपाधी) प्रतिविम्बको चंचलतामा विम्बभूत सूर्यमा आरोप गर्दछ, त्यही किसिमले उ सूर्यको समान निष्क्रिय आत्मामा [चित्तको चंचलताको आरोप गरेरे] 'म कर्ता हुँ, भोक्ता हुँ' अहो! मरें मरें यस्तो गर्दछ।

**जले वापि स्थले वापि लुठत्वेष जडात्मकः।**
**नाहं विलिप्य तद्धर्मैर्घटधर्मैर्नभो यथा॥ ५१०॥**

घडाको धर्मबाट जसरी आकाशको कुनै सम्बन्ध हुँदैन त्यसरी नै यो जड शरीर जलमा अथवा स्थलमा कुनै पनि ठाउँमा रहेको होस् म यसको धर्मबाट लिप्त हुन सक्दिन (हुँदिन)।

**कर्तृत्वभोक्तृत्वखलत्वमत्तता-**
**जडत्वबद्धत्वविमुक्ततादयः ।**
**बुद्धेर्विकल्पा न तु सन्ति वस्तुतः**
**स्वस्मिन्परे ब्रह्मणि केवलेऽद्वये॥ ५११॥**

कर्तापन, भोक्तापन, दुष्टता, उन्मन्तता, जडता, बन्धन र मोक्ष यी सबै बुद्धिका कल्पना हुन्, यी प्रकृति आदिबाट अतीत (बितेको) केवल अद्वितीय ब्रह्मस्वरूप स्व-आत्मामा वस्तुतः हुँदैन।

**सन्तु विकाराः प्रकृतेर्दशधा शतधा सहस्त्रधा वापि।**
**किं मेऽसंगचितेस्तैर्न घनः क्वचिदम्बरं स्पृशति॥ ५१२॥**

प्रकृतिमा दसौँ, सयौँ र हजारौँ विकार किन नहुन ती बाट मेरो असंग चेतन आत्माको के सम्बन्ध? बादलले कहिल्यै पनि आकाशलाई छुन सक्दैन।

अव्यक्तादिस्थूलपर्यन्तमेत-
द्विश्वं यत्राभासमात्रं प्रतीतम्।
व्योमप्रख्यं सूक्ष्ममाद्यन्तहीनं
ब्रह्माद्वैतं यत्तदेवाहमस्मि॥ ५१३॥

अव्यक्तदेखी लिएर स्थूलभूतसम्म यो समस्त विश्व जसमा आभासमात्र प्रतीत हुन्छ तथा जुन आकाशको सरह सुक्ष्म र आदि अन्त्यबाट रहित अद्वैत ब्रह्म हो त्यो म नै हुँ।

सर्वाधारं सर्ववस्तुप्रकाशं
सर्वाकारं सर्वगं सर्वशून्यम्।
नित्यं शुद्धं निश्चलं निर्विकल्पं
ब्रह्माद्वैतं यत्तदेवाहमस्मि॥ ५१४॥

जुन सबैको आधार, सबै वस्तुको प्रकाशक, सर्वरूप, सर्वव्यापी, सबैबाट रहित नित्य, शुद्ध, निश्चल र विकल्प रहित अद्वैत ब्रह्म हो उ म नै हुँ।

यत्प्रत्यस्ताशेषमायाविशेषं
प्रत्यग्रूपं प्रत्ययागम्यमानम्।
सत्यज्ञानानन्तमानन्दरूपं
ब्रह्माद्वैतं यत्तदेवाहमस्मि॥ ५१५॥

जुन समस्त(सबै) मायिक भेदबाट रहित, अन्तरात्मारूप र साक्षात् प्रतीतिको अविषय तथा अनन्त सच्चिदानन्दस्वरूप अद्वैत ब्रह्म हो, उ म नै हो।

निष्क्रियोऽस्म्यविकारोऽस्मि निष्कलोऽस्मि निराकृतिः।
निर्विकल्पोऽस्मि नित्योऽस्मि निरालम्बोऽस्मि निर्द्वयः॥ ५१६॥

म क्रियारहित, विकाररहित, कलारहित र निराकार हुँ तथा निर्विकल्प नित्य निरालम्ब र अद्वितीय हुँ।

सर्वात्मकोऽहं सर्वोऽहं सर्वातीतोऽहमद्वयः।
केवलाखण्डबोधोऽहमानन्दोऽहं निरन्तरः॥ ५१७॥

म सबैको आत्मा, सर्वरूप, सबैभन्दा पर र अद्वितीय हुँ, तथा केवल अखण्डज्ञानस्वरूप र निरन्तर आनन्दरूप हुँ।

**स्वाराज्यसाम्राज्यविभूतिरेषा**
**भवत्कृपाश्रीमहिमप्रसादात् ।**
**प्राप्ता मया श्रीगुरवे महात्मने**
**नमो नमस्तेऽस्तु पुनर्नमोऽस्तु॥ ५१८॥**

हे गुरू! तपाईंको कृपा र महिमाको प्रसादबाट मलाई यो स्वराज्य-सम्राज्यको विभूति प्राप्त भएको छ, तपाईं महात्मालाई मेरो बारम्बार नमस्कार छ।

**महास्वप्ने मायाकृतजनिजरामृत्युगहने**
**भ्रमन्तं क्लिश्यन्तं बहुलतरतापैरनुदिनम्।**
**अहङ्कारव्याघ्रव्यथितमिममत्यन्तकृपया**
**प्रबोध्य प्रस्वापात्परमवितवान्मामसि गुरो॥ ५१९॥**

म मायाबाट प्रतित हुने जन्म, दुःख र मृत्यूको कारण अत्यन्त भयानक महास्वप्नमा घुमिरहेको हुँदा दिनदिनै विभिन्न प्रकारका तापबाट सन्तप्त भइरहेको थिए, हे गुरू! अहंकारी रूपी बाघबाट अत्यन्त व्यथित म दुःखीको निन्द्रा जगाएर तपाईंले मेरो धेरै ठुलो रक्षा गर्नु भयो।

**नमस्तस्मै सदेकस्मै कस्मैचिन्महसे नमः।**
**यदेतद्विश्वरूपेण राजते गुरुराज ते॥ ५२०॥**

हे गुरूराज! तपाईंको त्यस्तो महान् तेजलाई नमस्कार छ, जुन सत्यरूप र एक भएर पनि विश्वरूपबाट विराजमान छ।

## उपदेशको उपसंहार

**इति नतमवलोक्य शिष्यवर्यं**
**समधिगतात्मसुखं प्रबुद्धतत्त्वम्।**
**प्रमुदितहृदयः स देशिकेन्द्रः**
**पुनरिदमाह वचः परं महात्मा॥ ५२१॥**

यस प्रकार आत्मानन्द र तत्त्वबोधको प्राप्त भएर उ शिष्य श्रेष्ठले प्रणाम गरेको देखेर महात्मा गुरूदेव अति प्रसन्न चित्तबाट फेरी यसप्रकार उत्तम (श्रेष्ठ) वचन भन्न लाग्नुभयो।

**ब्रह्मप्रत्ययसन्ततिर्जगदतो ब्रह्मैव सत्सर्वतः**
**पश्याध्यात्मदृशा प्रशान्तमनसा सर्वास्ववस्थास्वपि।**
**रूपादन्यदवेक्षितुं किमभितश्चक्षुष्मतां विद्यते**
**तद्वद्ब्रह्मविदः सतः किमपरं बुद्धेर्विहारास्पदम्॥ ५२२॥**

हे बालक! आफ्नो अत्याध्मिक दृष्टिबाट शान्तचित्त भएर सबै अवस्थामा यस्तो देख की यो संसार ब्रह्म-प्रतीतिको नै प्रवाह हो, यसरी यो सर्वथा सत्यस्वरूप ब्रह्म नै हो। नेत्रयुक्त(आँखा भएको) व्यक्तिहरूले चारै तर्फ देख्नको लागि रूप बाहेक अरू के वस्तु छ? त्यही किसिमले ब्रह्म ज्ञानीको बुद्धिको विषय सत्यस्वरूप ब्रह्मा बाहेक अरू के हुन सक्दछ?

**कस्तां परानन्दरसानुभूति-**
**मुत्सृज्य शून्येषु रमेत विद्वान्।**
**चन्द्रे महाह्लादिनि दीप्यमाने**
**चित्रेन्दुमालोकयितुं क इच्छेत्॥ ५२३॥**

त्यो परमानन्दरसको अनुभव छाडेर अन्य सामान्य विषयमा कुन बुद्धिमान रमण (घुम्ने) गर्दछ? अति आनन्ददायक पूर्णचन्द्रबाट प्रकाशित भएर रहेकोले, चित्र लिखित चन्द्रमालाई देख्ने इच्छा कसले गर्दछ?

**असत्पदार्थानुभवे न किञ्चि-**
**न्न ह्यस्ति तृप्तिर्न च दुःखहानिः।**
**तदद्वयानन्दरसानुभूत्या**
**तृप्तः सुखं तिष्ठ सदात्मनिष्ठया॥ ५२४॥**

असत् पदार्थको अनुभवबाट न कुनै तृप्ति नै हुन्छ र न दुःखको नाश नै, त्यसकारण यो अद्वयानन्दरस (अनौठो रस) को अनुभवबाट तृप्त भएर सत्य आत्मनिष्ठ भावबाट सुखपूर्वक स्थित रहु।

**स्वमेव सर्वथा पश्यन्मन्यमानः स्वमद्वयम्।**
**स्वानन्दमनुभुञ्जानः कालं नय महामते॥ ५२५॥**

हे महाबुद्धे! सबैले केवल आफैलाई नै देख्छ, आफैलाई अद्वितीय मान्दछ र आत्मानन्दको अनुभव गरेर कालक्षेप (समय बिताउने) गर।

**अखण्डबोधात्मनि निर्विकल्पे**
**विकल्पनं व्योम्नि पुरःप्रकल्पनम्।**
**तदद्वयानन्दमयात्मना सदा**
**शान्तिं परामेत्य भजस्व मौनम्॥ ५२६॥**

अखण्डबोधस्वरूप निर्विकल्प आत्मामा कुनै विकल्पको हुनु आकाशमा शहरको कल्पना सरह हो। यसको लागि अद्वितीय आनन्दमय आत्मस्वरूपमा स्थित भएर परमशान्ति लाभ गरी मौन धारण गर।

**तूष्णीमवस्था परमोपशान्ति-**
**र्बुद्धेरसत्कल्पविकल्पहेतोः ।**
**ब्रह्मात्मना ब्रह्मविदो महात्मनो**
**यत्राद्वयानन्दसुखं निरन्तरम्॥ ५२७॥**

महात्मा ब्रह्मवेत्ताको झुटा विकल्पको कारण बुद्धिमा जुन ब्रह्मभावबाट मौन अवस्था हुन्छ त्यही परम उपशम (शान्त हुनु) हो, जसमा निरन्तर अद्वयानन्दरसको अनुभव हुन्छ।

**नास्ति निर्वासनान्मौनात्परं सुखकृदुत्तमम्।**
**विज्ञातात्मस्वरूपस्य स्वानन्दरसपायिनः॥ ५२८॥**

जसले आत्मस्वरूपलाई जानेको छ त्यो स्वानन्दरसको पान (पिउने) गर्नाले पुरूषको लागि वासनारहित मौनभन्दा ठुलो उत्तम सुखदायक अरू कुनै पनि हुँदैन।

**गच्छंस्तिष्ठन्नुपविशञ्छयानो वान्यथापि वा।**
**यथेच्छया वसेद्विद्वानात्मारामः सदा मुनिः॥ ५२९॥**

विद्वान मुनिलाई उचित हुन्छ कि हिँड्दा-डुल्दा, बस्दा-उठ्दा, सुत्दा-

जाग्दा अथवा कुनै अरू अवस्थामा रहँदा निरन्तर आत्मामा रमण (घुमने) गरेर इच्छाअनुकुल रह।

**न देशकालासनदिग्यमादि-**
**लक्ष्याद्यपेक्षा प्रतिबद्धवृत्तेः।**
**संसिद्धतत्त्वस्य महात्मनोऽस्ति**
**स्ववेदने का नियमाद्यपेक्षा॥ ५३०॥**

जसको चित्तवृत्ति निरन्तर आत्मा स्वरूपमा लागि रहेको छ तथा जसको आत्मातत्त्वको सिद्धि भएको छ उ महापुरूषलाई (ध्यानादिको उपयोगी) देश, काल, आसन, दिशा, यम, नियम तथा लक्ष्य आदिको कुनै आवश्यकता छैन। आफूले आफूलाई जान्नको लागि कुनै नियम आदिको किन आवश्यक?

**घटोऽयमिति विज्ञातुं नियमः को न्वपेक्ष्यते।**
**विना प्रमाणसुष्ठुत्वं यस्मिन्सति पदार्थधीः॥ ५३१॥**

'यो घडा हो' यस्तो जान्नको लागि जसलाई वस्तुको ज्ञान भएको छ, त्यो प्रमाण-सौष्ठव (स्पष्ट देखिएको)को अतिरिक्त (बाहेक) कुन नियमको आवश्यकता हुन्छ?

**अयमात्मा नित्यसिद्धः प्रमाणे सति भासते।**
**न देशं नापि वा कालं न शुद्धिं वाप्यपेक्षते॥ ५३२॥**

आत्म-नित्य सिद्ध छ प्रमाणको शुद्धि भएर नै उ आफैंमा जान्न लाग्दछ। (आफ्नो प्रतीतिको लागि) उ देश, काल अथवा शुद्धि आदि कुनैको पनि अपेक्षा राख्दैन।

**देवदत्तोऽहमित्येतद्विज्ञानं निरपेक्षकम्।**
**तद्वद्ब्रह्मविदोऽप्यस्य ब्रह्माहमिति वेदनम्॥ ५३३॥**

जसरी 'म देवदत्त हुँ' यस ज्ञानमा कुनै नियमको अपेक्षा हुँदैन, त्यही किसिमले ब्रह्मवेत्ताको लागि 'म ब्रह्म हुँ' यो ज्ञान स्वतः नै हुन्छ।

**भानुनेव जगत्सर्वं भासते यस्य तेजसा।**
**अनात्मकमसत्तुच्छं किं नु तस्यावभासकम्॥ ५३४॥**

सूर्यबाट जसरी जगत प्रकाशित हुन्छ त्यसरी नै त्यसको प्रकाशबाट समस्त असत् र तुच्छ अनात्मपदार्थ प्रकाशित (उज्यालो) हुन्छ, उसलाई प्रकाशित गर्ने अरू को हुन सक्दछ?

**वेदशास्त्रपुराणानि भूतानि सकलान्यपि।**
**येनार्थवन्ति तं किं नु विज्ञातारं प्रकाशयेत्॥ ५३५॥**

वेद, शास्त्र, पुराण र समस्त भूतमात्र जसबाट अर्थवान् भइरहेको छ उ सर्वसाक्षी परमात्मालाई अरू कसले प्रकाशित गर्दछ?

**एष स्वयंज्योतिरनन्तशक्ति-**
**रात्माप्रमेयः सकलानुभूतिः।**
**यमेव विज्ञाय विमुक्तबन्धो**
**जयत्ययं ब्रह्मविदुत्तमोत्तमः॥ ५३६॥**

यो (सर्वसाक्षी) आत्मा स्वयं प्रकाश, अनन्तशक्ति, अप्रमेय र सर्वानुभवस्वरूप हो, यसलाई जाने पछि उ ब्रह्मवेत्तामा सर्वश्रेष्ठ महात्मा संसार बन्धनबाट मुक्त भएर धन्य हुन जान्छ।

**न खिद्यते नो विषयैः प्रमोदते**
**न सज्जते नापि विरज्यते च।**
**स्वस्मिन्सदा क्रीडति नन्दति स्वयं**
**निरन्तरानन्दरसेन तृप्तः॥ ५३७॥**

विषयलाई प्राप्त भएर उ न दुःखी हुन्छ, न आनन्दित हुन्छ न उनमा आशक्त हुन्छ र न उसमा विरक्त रहन्छ। उ त निरन्तर आत्मानन्दरसबाट तृप्त भएर स्वयं आफू आफैंमा खेल्दछ र आनन्दित रहन्छ (हुन्छ)।

**क्षुधां देहव्यथां त्यक्त्वा बालः क्रीडति वस्तुनि।**
**तथैव विद्वान् रमते निर्ममो निरहं सुखी॥ ५३८॥**

जसरी खेलौना प्राप्त भएपछि बालक भोक र शारीरिक व्यथालाई

भुलेर उसमा खेल्न थाल्दछ त्यही किसिमले अहंकार र ममताबाट शून्य भएर विद्वान आफ्नो आत्मामा आनन्दपूर्वक रमण (घुमिरहनु) गरि रहन्छ।

**चिन्ताशून्यमदैन्यभैक्षमशनं पानं सरिद्वारिषु**
**स्वातन्त्र्येण निरङ्कुशा स्थितिरभीर्निद्रा श्मशाने वने।**
**वस्त्रं क्षालनशोषणादिरहितं दिग्वास्तु शय्या मही**
**सञ्चारो निगमान्तवीथिषु विदां क्रीडा परे ब्रह्मणि॥ ५३९॥**

ब्रह्मवेत्ता विद्वानले चिन्ता र दीनता रहित भिक्षान्न (भिक्षाबाट प्राप्त अन्न) नै भोजन तथा नदिको जल नै पिउने गर्दछन्। उनको स्थिति स्वतन्त्रतापूर्वक र निरंकुश (मनमानी) हुन्छ। उनलाई कुनै प्रकारको डर हुँदैन, उ वन अथवा मसानघाटमा सुखको निँद सँग सुत्न सक्दछ। धुनु, सुकाउनु आदिको अपेक्षा विना दिशा (अथवा वल्कालादि) नै उनको वस्त्र (कपडा) हो, पृथ्वी नै विच्छौना हो, उनको आउनु जानु वेदान्त-वीथि (बाटो) नै हुने गर्दछ र परब्रह्ममा नै उनको क्रिडा हुन्छ।

**विमानमालम्ब्य शरीरमेतद्**
**भुनक्त्यशेषान्विषयानुपस्थितान्।**
**परेच्छया बालवदात्मवेत्ता**
**योऽव्यक्तलिङ्गोऽननुषक्तबाह्यः॥ ५४०॥**

उ आत्मज्ञानी महापुरूष यो शरीररूप विमानमा बसेर अर्थात् आफ्नो सर्वाभिमान शून्य (सबै अभिमान छाडेर) शरीरको आश्रय लिएर दोश्रोबाट उपस्थित गरिएको सबै विषयलाई बालकले समान भोग्दछ, तर वास्तवमा उ प्रकट चिन्ह रहित र बाह्य पदार्थमा आशक्ति रहित हुन्छ।

**दिगम्बरो वापि च साम्बरो वा**
**त्वगम्बरो वापि चिदम्बरस्थः।**
**उन्मत्तवद्वापि च बालवद्वा**
**पिशाचवद्वापि चरत्यवन्याम्॥ ५४१॥**

चैतन्यरूप वस्त्रबाट युक्त उ महान भाग्यवान पुरूष वस्त्रहिन,

वस्त्रयुक्त अथवा मृग चर्मादि धारण गरेर उन्मत्तको समान, बालक सरह अथवा पिशाचादि को समान स्वेच्छानुकुल भूमण्डलमा घुमी रहन्छ।

**कामान्नी कामरूपी संश्चरत्येकचरो मुनिः।**
**स्वात्मनैव सदा तुष्टः स्वयं सर्वात्मना स्थितः॥५४२॥**

स्वयं सर्वात्मभावमा स्थित, सदा आफ्नो आत्मामा सन्तुष्ट र एक्लै घुम्नेवाला उ मुनि आफ्नो इच्छाअनुसार (जब इच्छा हुन्छ तब) अन्न ग्रहण (खाना) गर्दछ र मनमानी रूप धारण गरेर घुमिरहन्छ।

**क्वचिन्मूढो विद्वान्क्वचिदपि महाराजविभवः**
**क्वचिद्भ्रान्तः सौम्यः क्वचिदजगराचारकलितः।**
**क्वचित्पात्रीभूतः क्वचिदवमतः क्वाप्यविदित-**
**श्चरत्येवं प्राज्ञः सततपरमानन्दसुखितः॥५४३॥**

ब्रह्मवेत्ता महापुरूष कहिँ मूढ (मूर्ख), कहीँ विद्वान र कहीँ राजा महाराजाको समान ढाँडबाड तरिकाले देखिन्छ। उ कहीँ भ्रान्त (छटपटी) कहिँ शान्त र कहीँ अजिंगर (अजगर) को समान निश्चल भावबाट देखिएको हुन्छ। यस प्रकार निरन्तर परमात्मामा मग्न भएको विद्वान कहीं सम्मानित, कहीं अपमानित र कहीं अज्ञात रहेर अलक्षित (लक्ष्य नभएको) गतिबाट डुलिरहन्छ।

**निर्धनोऽपि सदा तुष्टोऽप्यसहायो महाबलः।**
**नित्यतृप्तोऽप्यभुञ्जानोऽप्यसमः समदर्शनः॥५४४॥**

उ गरिब भएर पनि सदा सन्तुष्ट, असहाय भएर पनि महाबलवान, खाना नखादा पनि नित्य तृप्त र विषयभाव (वर्तता) भएर पनि समदर्शी हुन्छ।

**अपि कुर्वन्नकुर्वाणश्चाभोक्ता फलभोग्यपि।**
**शरीर्यप्यशरीर्येष परिच्छिन्नोऽपि सर्वगः॥५४५॥**

उ महात्मा केही गरेर पनि अर्कता हो, विभिन्न प्रकारको फल भोगेर पनि अभोक्ता हो, शरीरधारी भएर पनि अशरीर हो र परिच्छिन (छिन्न नभएको) भएर पनि सर्वव्यापी हो।

**अशरीरं सदा सन्तमिमं ब्रह्मविदं क्वचित्।**
**प्रियाप्रिये न स्पृशतस्तथैव च शुभाशुभे॥ ५४६॥**

सदा अशरीर भावमा स्थित रहेर यी ब्रह्मवेत्ताको प्रिय अथवा अप्रिय शुभ तथा अशुभ कहिल्यै छुन सक्दैन।

**स्थूलादिसम्बन्धवतोऽभिमानिनः**
**सुखं च दुःखं च शुभाशुभे च।**
**विध्वस्तबन्धस्य सदात्मनो मुनेः**
**कुतः शुभं वाप्यशुभं फलं वा॥ ५४७॥**

जुन शरीरको स्थूल सुक्ष्म आदि शरीरसँग सम्बन्ध हुन्छ, उसको सुख अथवा दुःख, शुभ अथवा अशुभको प्राप्ति हुन्छ, जसको शारिरिक बन्धन छुटेको छ, उ सत्स्वरूप मुनिलाई शुभ अथवा अशुभ फलको प्राप्ति कसरी हुन सक्छ?

**तमसा ग्रस्तवद्भानादग्रस्तोऽपि रविर्जनैः।**
**ग्रस्त इत्युच्यते भ्रान्त्या ह्यज्ञात्वा वस्तुलक्षणम्॥ ५४८॥**
**तद्वद्देहादिबन्धेभ्यो विमुक्तं ब्रह्मवित्तमम्।**
**पश्यन्ति देहिवन्मूढाः शरीराभासदर्शनात्॥ ५४९॥**

वास्तविक कुरा नजानेको कारण जसरी राहुबाट ग्रस्त नहुँदा पनि ग्रस्त भएको अनुमान गरेको कारण मानिस भ्रमवस सूर्यलाई राहुग्रस्त भन्दछन्, त्यसरी नै शरीर बन्धनबाट छुटेको ब्रह्मवेत्ताको आभासमात्र शरीर देखेर अज्ञानी जन उनलाई शरीर सहर मान्दछन्।

**अहिनिर्ल्वयनीवायं मुक्तदेहस्तु तिष्ठति।**
**इतस्ततश्चाल्यमानो यत्किञ्चित्प्राणवायुना॥ ५५०॥**

यो मुक्त पुरूषको शरीर त सर्पको काचुली समान प्राणवायुद्वारा केही यता उता चलायमान भइरहेको हुन्छ। (उसमा कर्तृत्थाभिमानको अन्त्यताभाव भएको कारण वास्तवमा क्रिया हुँदैन)।

**स्त्रोतसा नीयते दारु यथा निम्नोन्नतस्थलम्।**
**दैवेन नीयते देहो यथाकालोपभुक्तिषु॥ ५५१॥**

जसरी पानीको प्रवाहले काठ अग्लो होचो स्थानमा बगाएर लिएर जान्छ, त्यही किसिमले दैवको द्वारा नै उसको शरीर समयानुकुल भोगको प्राप्त गर्दछ।

**प्रारब्धकर्मपरिकल्पितवासनाभिः**
**संसारिवच्चरति भुक्तिषु मुक्तदेहः।**
**सिद्धः स्वयं वसति साक्षिवदत्र तूष्णीं**
**चक्रस्य मूलमिव कल्पविकल्पशून्यः॥ ५५२॥**

मुक्त पुरूषको शरीर प्रारव्ध कर्मबाट कल्पित वासनाद्वारा संसारी पुरूषको समान विभिन्न भोगलाई भोग्दछ। सिद्ध पुरूष त स्वयं कुमाले चक्रको मूल (मानी) को सरह संकल्प विकल्पबाट रहित भएर साक्षीभावबाट मौन भएर रहन्छ।

**नैवेन्द्रियाणि विषयेषु नियुङ्क्त एष**
**नैवापयुङ्क्त उपदर्शनलक्षणस्थः।**
**नैव क्रियाफलमपीषदवेक्षते स**
**स्वानन्दसान्द्ररसपानसुमत्तचित्तः॥ ५५३॥**

ब्रह्मवेत्ता पुरूष अत्यन्त सघन(ठोस) आत्मानन्द रसपानबाट मातिएको भएर साक्षी रूपबाट स्थित भएको इन्द्रियलाई न त विषयमा लाग्दछ र न त्यो विषयबाट हट्दछ। उ आफ्नो कर्मको फल पनि देख्दैन।

**लक्ष्यालक्ष्यगतिं त्यक्त्वा यस्तिष्ठेत्केवलात्मना।**
**शिव एव स्वयं साक्षादयं ब्रह्मविदुत्तमः॥ ५५४॥**

जो लक्ष्य र अलक्ष्य दुबै दृष्टिलाई छाडेर केवल एक आत्मा रूपमा स्थित रहन्छ उ ब्रह्मवेत्तामा श्रेष्ठ महापुरूष साक्षात शिव नै हो। [अर्थात् अन्य वस्तुको अभावको कारण जसको कुनै लक्ष्य (प्राप्तव्य पाउने इच्छा) हुँदैन र जड अथवा निदाएको पुरूष समान जुन ज्ञान शून्य पनि हुँदैन, त्यो पुरूष नै श्रेष्ठतम आत्मनिष्ठ हो।]

**जीवन्नेव सदा मुक्तः कृतार्थो ब्रह्मवित्तमः।**
**उपाधिनाशाद्ब्रह्मैव सन् ब्रह्माप्येति निर्द्वयम्॥ ५५५॥**

यस्तो ब्रह्मज्ञानी बाँचेर पनि सदा मुक्त र कृतार्थ नै हो, शरीररूप उपाधिको नष्ट (क्षण) भएपछि उ ब्रह्मभावमा स्थित भएर अद्वितीय ब्रह्ममा लीन हुन जान्छ।

**शैलूषो वेषसद्भावाभावयोश्च यथा पुमान्।**
**तथैव ब्रह्मविच्छ्रेष्ठः सदा ब्रह्मैव नापरः॥ ५५६॥**

नाच्ने व्यक्ति (नट) जस्तो विचित्र वेष-विन्यास (कपडा लगाउनु) धारण गरी रहेर अथवा उसको अभावमा पनि पुरूष नै हो, ब्रह्मवेत्ता उपाधियुक्त सधै ब्रह्म नै हो र अरू केहि होइन।

**यत्र क्वापि विशीर्णं सत्पर्णमिव तरोर्वपुःपतनात्।**
**ब्रह्मीभूतस्य यतेः प्रागेव हि तच्चिदग्निना दग्धम्॥ ५५७॥**

ठाउँठाउँमा रूखबाट झरेका सुकेका पात सरह ब्रह्मीभूत योगनिष्ठ सन्यासीको शरीर जहाँ पनि ढलोस उ त पहिला नै चैतन्याग्निबाट बलेर रहेको हुन्छ ।

**सदात्मनि ब्रह्मणि तिष्ठतो मुनेः**
**पूर्णाद्वयानन्दमयात्मना सदा।**
**न देशकालाद्युचितप्रतीक्षा**
**त्वङ्मांसविट्पिण्डविसर्जनाय ॥ ५५८॥**

सत्स्वरूप ब्रह्ममा सदैव परिपूर्ण अद्वितीय आनन्द स्वरूपबाट स्थित रहेको मुनिको यो छाला, मासु र मलमुत्रको पिण्ड छाड्नको लागि कुनै योग्य देश काल आदिको अपेक्षा हुँदैन।

**देहस्य मोक्षो नो मोक्षो न दण्डस्य कमण्डलोः।**
**अविद्याहृदयग्रन्थिमोक्षो मोक्षो यतस्ततः॥ ५५९॥**

किनकी 'मोक्ष' हृदयको अविद्यारूप ग्रन्थिको नास गर्नु नै भनिन्छ। यसको लागि शरीर अथवा दण्ड-कमण्डलुको त्यागको नाम मोक्ष होइन।

**कुल्यायामथ नद्यां वा शिवक्षेत्रेऽपि चत्वरे।**
**पर्णं पतति चेत्तेन तरोः किं नु शुभाशुभम्॥ ५६०॥**

बोटबाट सुकेर झरेको पात नालीमा, नदीमा, शिवालयमा अथवा कुनै चौतारामा कुनै ठाउँमा खसोस् त्यसबाट वृक्ष(रूख)लाई के हानी-लाभ हुन्छ?

**पत्रस्य पुष्पस्य फलस्य नाशवद्**
**देहेन्द्रियप्राणधियां विनाशः।**
**नैवात्मनः स्वस्य सदात्मकस्या-**
**नन्दाकृतेर्वृक्षवदस्ति चैषः॥ ५६१॥**

बोटको पत्ता, फूल र फल समान नाश त जीवको शरीर, इन्द्रिय, प्राण र बुद्धि आदिको पनि हुन्छ सदानन्दस्वरूप स्वयं आत्माको नाश कहिल्यै हुँदैन्; त्यो त बोटको समान नित्य निश्चल छ।

**प्रज्ञानघन इत्यात्मलक्षणं सत्यसूचकम्।**
**अनूद्यौपाधिकस्यैव कथयन्ति विनाशनम्॥ ५६२॥**

'प्रज्ञानघन' यो आत्माको लक्षण उसको सत्यताको सूचक हो विज्ञ व्यक्ति यस्तो अनुवाद(वर्णन) गरेर उपाधि कल्पित वस्तुको नै विनाश बताउछन्।

**अविनाशी वा अरेऽयमात्मेति श्रुतिरात्मनः।**
**प्रब्रवीत्यविनाशित्वं विनश्यत्सु विकारिषु॥ ५६३॥**

'अरे यो आत्मा अविनाशी हो' यो श्रुति* पनि विकारी शरीर आदिको नाश भएपछि आत्माको अविनाशित्त्वको नै प्रतिपादन गर्दछ।

**पाषाणवृक्षतृणधान्यकटाम्बराद्या**
**दग्धा भवन्ति हि मृदेव यथा तथैव।**
**देहेन्द्रियासुमनआदि समस्तदृश्यं**
**ज्ञानाग्निदग्धमुपयाति परात्मभावम्॥ ५६४॥**

जसरी ढुङ्गा, रूख, झार, अन्न, भूष र वस्त्र आदि जलेर पनि माटो नै हुन्छ त्यही किसिमले शरीर, इन्द्रिय, प्राण र मन आदि सम्पूर्ण दृश्य पदार्थ ज्ञानाग्निबाट जलेर जाँदा पनि परमात्मा स्वरूप नै हुन्छ।

* 'अविनाशी वा अरेऽयमात्मानुच्छित्तिधर्मा' (बृह० ४।५।१४)

**विलक्षणं यथा ध्वान्तं लीयते भानुतेजसि।**
**तथैव सकलं दृश्यं ब्रह्मणि प्रविलीयते॥ ५६५॥**

जसरी सूर्यको प्रकाश भएर उसको विपरित स्वभाववाला अन्धकार उसैमा लीन हुन जान्छ त्यसरी नै सम्पूर्ण दृश्य प्रपञ्च ज्ञानोदय भएपछि ब्रह्ममा नै विलय हुन जान्छ।

**घटे नष्टे यथा व्योम व्योमैव भवति स्फुटम्।**
**तथैवोपाधिविलये ब्रह्मैव ब्रह्मवित्स्वयम्॥ ५६६॥**

घडाको नष्ट भएपछि जसरी घटकाश महाकाश नै हुन जान्छ त्यसरी नै उपाधिको विलय भएपछि ब्रह्मवेत्ता स्वयं ब्रह्म नै हुन जान्छ।

**क्षीरं क्षीरे यथा क्षिप्तं तैलं तैले जलं जले।**
**संयुक्तमेकतां याति तथात्मन्यात्मविन्मुनिः॥ ५६७॥**

जसरी दुधमा मिलेर दुध, तेलमा मिलेर तेल, पानीमा मिलेर पानी, एकै हुन जान्छ त्यसरी नै आत्मज्ञानी मुनि आत्मामा लीन भएपछि आत्म स्वरूप नै हुन जान्छ।

**एवं विदेहकैवल्यं सन्मात्रत्वमखण्डितम्।**
**ब्रह्मभावं प्रपद्यैष यतिर्नावर्तते पुनः॥ ५६८॥**

अखण्ड सत्तामात्र बाट स्थित हुनु नै विदेह-कैवल्य हो। यस प्रकार ब्रह्म-भावको प्राप्त भएर यो ब्रह्मनिष्ठ सन्यासी (यति) फेरी संसार चक्रमा पर्दैन।

**सदात्मैकत्वविज्ञानदग्धाविद्यादिवर्ष्मणः।**
**अमुष्य ब्रह्मभूतत्वाद्ब्रह्मणः कुत उद्भवः॥ ५६९॥**

ब्रह्म र आत्माको एकत्त्व ज्ञानरूप अग्निबाट अविद्याजन्य शरीरादि उपाधिको जलेपछि त्यो ब्रह्मवेत्ता ब्रह्म रूप नै हुन जान्छ र ब्रह्मको फेरी जन्म कसरी?

**मायाक्लृप्तौ बन्धमोक्षौ न स्तः स्वात्मनि वस्तुतः।**
**यथा रज्जौ निष्क्रियायां सर्पाभासविनिर्गमौ॥ ५७०॥**

बन्धन र मोक्ष मायाबाट नै भएको हो, त्यो वस्तुत आत्मामा हुदैन, जसरी क्रियाहिन डोरीमा सर्प प्रतिति हुन नहुनु भ्रम मात्र हो, वास्तवमा होइन।

**आवृतेः सदसत्त्वाभ्यां वक्तव्ये बन्धमोक्षणे।**
**नावृतिर्ब्रह्मणः काचिदन्याभावादनावृतम्।**
**यद्यस्त्यद्वैतहानिः स्याद्द्वैतं नो सहते श्रुतिः॥५७१॥**

अज्ञानमा आवरण शक्ति रहेर नरहेर पनि क्रमशः बन्ध र मोक्ष भनिन्छ र ब्रह्मको कुनै आवरण हुन सक्दैन, किनकी उसको अतिरिक्त अरू कुनै वस्तु नै छैन, अतः उ अनावृत्त हो। यदि ब्रह्मको पनि आवरण मानिएमा अद्वैत सिद्ध हुन सक्दैन र द्वैत श्रुतिको मान्य छैन।

**बन्धं च मोक्षं च मृषैव मूढा**
**बुद्धेर्गुणं वस्तुनि कल्पयन्ति।**
**दृगावृतिं मेघकृतां यथा रवौ**
**यतोऽद्वयासङ्गचिदेकमक्षरम् ॥५७२॥**

बन्ध र मोक्ष दुवै बुद्धिको गुण हो। जसरी बादलद्वारा दृष्टिलाई ढाकिदिंदा सूर्यलाई ढाकेको भनिन्छ, त्यहि किसिमले मुढ पुरूष उनको कल्पना आत्मतत्त्वमा व्यर्थ नै गर्दछ किनकी ब्रह्म त सदैव अद्वितीय, असंग, चैतन्य स्वरूप एउटा अर्को अविनाशी हो।

**अस्तीति प्रत्ययो यश्च यश्च नास्तीति वस्तुनि।**
**बुद्धेरेव गुणावेतौ न तु नित्यस्य वस्तुनः॥५७३॥**

पदार्थ हुनु नहुनु यस्तो जुन ज्ञान छ उ बुद्धिको नै गुण हो, नित्य वस्तु आत्माको होइन।

**अतस्तौ मायया क्लृप्तौ बन्धमोक्षौ न चात्मनि।**
**निष्कले निष्क्रिये शान्ते निरवद्ये निरंजने।**
**अद्वितीये परे तत्त्वे व्योमवत्कल्पना कुतः॥५७४॥**

यसो हुदा आत्मामा यो बन्ध र मोक्ष दुबै मायाबाट कल्पीत छ, वस्तुत होइन। किनकी आकाशको निरवयव, निष्क्रिय, शान्त, निर्मल, निरञ्जन र अद्वितीय परमतत्त्वमा कल्पना कसरी हुन सक्छ?

**न निरोधो न चोत्पत्तिर्न बद्धो न च साधकः।**
**न मुमुक्षुर्न वै मुक्त इत्येषा परमार्थता॥५७५॥**

अतः परमार्थ (वास्तविक कुरा) त यहि हो कि न कुनैको नाश हो, न उत्पत्ति हो, न बन्धन हो, न कुनै साधक हो तथा न मुमुक्षु (मुक्त हुन इच्छा गर्ने) हो न मुक्त हो।

**सकलनिगमचूडास्वान्तसिद्धान्तरूपं**
**परमिदमतिगुह्यं दर्शितं ते मयाद्य।**
**अपगतकलिदोषं कामनिर्मुक्तबुद्धिं**
**स्वसुतवदसकृत्त्वां भावयित्वा मुमुक्षुम्॥ ५७६॥**

हे बावु! कलिको दोषबाट रहित, कामनाशून्य तिमी मुमुक्षुको आफ्नो छोरा समान सम्झेर मैले बारम्वार (पटक पटक) सबै शास्त्रको सार-(निचोड) शिरोमणि यो अति गुह्य परम सिद्धान्त तिम्रो सामुन्नेमा भनेको (प्रकाशित गरेको) छु।

## शिष्यलाई विदा

**इति श्रुत्वा गुरोर्वाक्यं प्रश्रयेण कृताननतिः।**
**स तेन समनुज्ञातो ययौ निर्मुक्तबन्धनः॥ ५७७॥**

गुरूदेवको यस्तो वचन सुनेर शिष्यले अति नम्रताले उनलाई (गुरूलाई) प्रणाम गरे र संसार बन्धनबाट मुक्त भयौ उनको आज्ञा पाएर गए।

**गुरुरेवं सदानन्दसिन्धौ निर्मग्नमानसः।**
**पावयन्वसुधां सर्वां विचचार निरन्तरम्॥ ५७८॥**

र गुरू पनि सच्चिदानन्द समुन्द्रमा मग्नमन हुदै सम्पूर्ण पृथ्वीलाई पवित्र गर्दै विचरण (घुम्न) लागे।

## अनुबन्ध-चतुष्टय

**इत्याचार्यस्य शिष्यस्य संवादेनात्मलक्षणम्।**
**निरूपितं मुमुक्षूणां सुखबोधोपपत्तये॥ ५७९॥**

यस प्रकार गुरू र शिष्यको संवाद रूपबाट मुमुक्षुहरूको सुगमतले बोध हुनको लागि यो आत्म ज्ञानको निरूपण गरिएको हो।*

**हितमिममुपदेशमाद्रियन्तां**
**विहितनिरस्तसमस्तचित्तदोषाः ।**
**भवसुखविरताः प्रशान्तचित्ताः**
**श्रुतिरसिका यतयो मुमुक्षवो ये॥ ५८०॥**

वेदान्त विहित श्रवणादिबाट द्वारा जसको चित्तमा सबै दोष निस्केका छन् र जो संसार सुखबाट विरक्त, शान्तचित्त, श्रुतिरहस्यको रसिक र मोक्ष-कामी हो, त्यो ब्रह्मनिष्ठ सन्यासी (यति) यो हितकारी उपदेशको आदार गर्दछ।

## ग्रन्थ-प्रशंसा

**संसाराध्वनि तापभानुकिरणप्रोद्भूतदाहव्यथा-**
**खिन्नानां जलकाङ्क्षया मरुभुवि श्रान्त्या परिभ्राम्यताम्।**
**अत्यासन्नसुधाम्बुधिं सुखकरं ब्रह्माद्वयं दर्शय-**
**न्त्येषा शंकरभारती विजयते निर्वाणसन्दायिनी॥ ५८१॥**

संसार मार्गमा विभिन्न प्रकारका क्लेशरूपी सूर्यको किरणबाट उत्पन्न भएको पोलिएको व्यथाबाट पीड़ित भएर मरूभूमिमा पानीको इच्छाबाट भड्किरहेको थाकेको-माँदे (नशा) पुरूषको अति नजिकमा नै अद्वितीय ब्रह्मरूप अत्यन्त आनन्ददायक अमृतको समुन्द्र देखाउने यी श्री शंकराचार्यजीको निर्वाणदायीनी वाणी निरन्तर जयको प्राप्त भइरहेको छ।

*इति श्रीमत्परमहंसपरिव्राजकाचार्यगोविन्दभगवत्पूज्यपादशिष्यश्रीमच्छंकर-भगवत्कृतो विवेकचूडामणिः समाप्तः*



*यो श्लोकमा श्री शंकराचार्यजीले ग्रन्थको अनुबन्ध चतुष्ट्यको वर्णन गर्नु भएको हो। यो ग्रन्थको अधिकारी मुमुक्षु पुरूष हो, विषय आत्मज्ञान हो, सम्बन्ध निरूप्य-निरूपक हो र प्रयोजन 'मुमुक्षुहरूको सुगमताबाट आत्मज्ञानको सिद्धि' हो।

# भगवान् शंकराचार्य र विवेक-चूडामणि

संसारका दार्शनिकमा भगवान् शंकराचार्यको नाम सर्वाग्रणी छ। हालसम्म उनको जीवन चरित्र सम्बन्धी साना-ठुला हजारौँ पुस्तक प्रकाशित भइसकेका छन्, जसमा कुनै त दिग्विजय सम्बन्धी छन्। उदयवीर शास्त्रीको वेदान्तदर्शनको इतिहासको प्रथम भाग जुन वृहत कलेवर को छ, केवल आचार्यको काल निर्णयमा नै पर्यवसित भएको छ। दोश्रो आधुनिक ग्रन्थ कामकोठी मठद्वारा प्रकाशित अंग्रेजीमा Shankracharya an Appriser (शंकराचार्यको जीवनको पुनः मूल्याङ्कन) बम्बईबाट छापिएको छ जसमा धेरै रंगिन चित्र छन् र मूल्य एक हजार रूपैयाको छ। आचार्यको संक्षिप्त जीवनी वृत्त यसप्रकार छ-

भगवान् शंकरको दिग्विजय तथा गुरवंशकाव्यम् एवम गुरूपरम्परा चरित्रम् आदि जुन ग्रंथ पाइन्छ तथा अन्यत्र उनको जीवनचरित्र सम्बन्धी जुन सामग्री प्राप्त छ त्यसबाट ज्ञान हुन्छ कि उनी सर्वथा अलौकिक दिव्य प्रतिभा सम्पन्न व्यक्ति थिए। उनि भित्र प्रकाण्ड पाण्डित्य, गम्भीर बिचारशैली, प्रचण्ड कर्मशिलता, अगाध भगवद्भक्ति, उत्कृष्ट वैराग्य, अदभूत योगैश्वर्य आदि अनेक गुणको दुर्लभ सामञ्जस्य उपलब्ध हुन्छ। उनको बोलीमा त मानौँ साक्षात सरस्वती बसेकी छन्। यही कारण हो कि आफ्नो ३२ वर्षको अल्पायूमा नै उनले अनेक (धेरै) ठुला ठुला ग्रन्थको रचना गरे। सारा भारतमा भ्रमण गरेर विरोधीहरूसँग शास्त्रार्थमा पराजित गरे। भारतका चारै कुनामा चार प्रधानमठ स्थापना गरे र सम्पूर्ण देशमा सनातन वैदिक धर्मको ध्वजा फहराए थोरैमा यो भन्न सकिन्छ कि शंकराचार्यले अवतरित भएर डुब्न लागेको सनातन धर्मको रक्षा गरे र त्यसैको फलस्वरूप आज हामीले सनातन धर्मको जीउँदो-जागेको देखिन्छ। उनको यो धर्म संस्थापनको कार्यलाई देखेर अझ विश्वास दृण हुन्छ कि उनि साक्षात् कैलासपति भगवान् शंकरको नै अवतार थिए। '**शंकरः शंकरः साक्षात्**'- र यसबाट सबै मानिसले 'भगवान्' शब्दका साथ उनको स्मरण गर्दछन्।

आचार्य शंकरको जन्म केरल प्रदेशको पूर्णानदिको नजिक कलादि नामक गाउँमा वैशाख शुक्ल पञ्चमीमा भएको थियो। उनका बावुका नाम शिवगुरू तथा आमा शुभद्रा थिइन। शिव गुरू ठुलो विद्वान र धर्मनिष्ठ ब्राह्मण थिए। सुभद्रा पनि जस्तै विदुषी र धर्म परायण पत्नी थिइन् तर प्राय: प्रौढ अवस्था सकिन (समाप्त) लाग्दा उनका कुनै सन्तान भएनन्, त्यसो हुँदा पति पत्नीले बढी श्रद्धा भक्तिका साथ भगवान् शंकरलाई पुत्र पाउनको लागि कठिन तपपूर्ण उपासना गरे। भगवान् आसुतोष ब्राह्मण दम्पत्तिको उपासनाबाट प्रसन्न भई प्रकट भएर उनले उनलाई (शिव, सुभद्रा) मनोवान्छित वरदान दिए। भगवान् शंकरको आर्शिवादबाट शुभ मुर्हुतमा आमा शुभद्राको गर्भबाट एक दिव्य कान्तिवान पुत्ररत्न उत्पन्न भए र उनको नाम आशुतोष शंकरको नाममाथी शंकर राखे।

बालक शंकरको रूपमा कुनै महान विभूति अवतारित भए, यसको प्रमाण शंकरको बालकपनामा नै देखिन लाग्यो। एक वर्षको अवस्थामा बालक शंकर आफ्नो मातृभाषामा आफ्नो भाव प्रकट गर्न लागे, दुईवर्षको अवस्थामा आमाबाट पुराणहरूको कथा सुनेर कण्ठस्त गर्न लागे। उनका बावु तीन वर्षको अवस्थामा उनको चुडाकर्म गरेर दिंगवत भए। पाँच वर्षमा यज्ञोपवित गरी उनले गुरूको घरमा पढ्नको लागि गए र केवल आठ वर्षको अवस्थामा नै उनले वेद वेदान्त र वेदांगको पूर्ण अध्ययन गरी घरमा आए। उनको असाधारण प्रतिभा देखेर उनको गुरूजन छक्क परेका थिए।

विद्याध्यान सकिएपछि शंकरले सन्यास लिन चाहे तर जब उनले आमाको आज्ञा मागेकोमा उनले अस्वीकार गरिन्। शंकर आमाको ठुलो भक्ति थिए। आमालाई दु:ख दिएर सन्यास लिन चाहदैनथे। एक दिन आमाका साथ उनि नदिमा स्नान गर्न गए। त्याहा शंकरलाई गोहीले समात्यो। यस प्रकार छोराको संकट देखेर आमाको होस् उड्यो। उनि आत्तिएर हाहाकार गर्न लागिन। शंकरले आमासँग भने-मलाई सन्यास लिनको लागि आज्ञा दिएमा गोहीले मलाई छाडिदिन्छ। आमाले तुरून्त आज्ञा दिइन् र गोहीले शंकरलाई छाडिदियो। जाने समयमा आमाको इच्छा

अनुसार यो वचन दिदै गएका थिए कि तपाईंको मृत्यूको समयमा म घरमा उपस्थित हुनेछु।

घरमा गएर शंकर नर्मदा नदिको किनारामा आए र त्याहा स्वामी गोविन्द भगवत्पादसँग दिक्षा लिए। गुरूले उनको नाम भगवतपूज्यपादाचार्य राखे। उनले गुरूको उपदेश अनुसारको मार्गको साधना प्रारम्भ गरे र थोरै समयमा नै धेरै ठुलो योग सिद्ध महात्मा भए। उनको सिद्धिबाट प्रसन्न भएर गुरूले काशी गएर वेदान्त शुत्रको भाष्य लेख्न आज्ञा दिए र उनी काशी आए। काशी आएपछि उनको ख्याती बढ्न लाग्यो र व्यक्ति आकर्षक भए उनको शिष्यत्त्व पनि लिन लागे। उनको सर्वप्रथम शिष्य सनन्दन भए जो पछि 'पद्मपादाचार्य'को नामबाट प्रसिद्धि भए। काशीमा शिष्यलाई पढाउनुका साथसाथै उनले ग्रन्थ पनि लेख्दै रहे। भनिन्छ कि एक दिन भगवान् विश्वनाथले उनलाई दर्शन दिए र ब्रह्मशुत्रमा भाष्य लेखेर धर्मको प्रचार गर्ने आदेश दिनुभयो। वेदान्त शुत्रमा जब उनले भाष्यलेखेका थिए एकदिन एक ब्राह्मणले गंगाको किनारामा उनीसँग एउटा सुत्रको अर्थ सोधे त्यस ब्राह्मणको साथ उनको सत्ताईस दिनसम्म शास्त्रार्थ चलिरह्यो। पछि उनलाई थाहा भयो कि स्वयं भगवान् वेदव्यास ब्राह्मणको भेषमा प्रकट भएर उनका साथ विवाद गरिरहेका थिए। तव उनले (शंकरले) उनलाई (व्यासलाई) भक्तिपूर्वक प्रणाम गरी क्षमा मागे। फेरी वेदव्यासले उनलाई अद्वैतवादको प्रचार गर्नको लागि आज्ञा दिए र उनको १६ वर्षको अल्पायू ३२ वर्षको बनाइदिए। यो घटनापछि शंकराचार्य दिग्विजयको लागि निस्के।

काशीमा रहेको बेला शंकराचार्यले त्यहाँ रहेका प्राय: सबै विभिन्न मतभएका (आफ्नो) विरूद्धकालाई हराए। त्यहाँ बाट कुरूक्षेत्र हुँदै बदरिकाश्राम पुगे। त्यहाँ केहि दिन बसी उनले अरू केहि ग्रन्थ लेखे। जुन ग्रन्थ उनको पाईन्छ, प्राय: सबै उनले काशी अथवा बदरिकाश्रममा नै लेखेका हुन्। १२ वर्षदेखी १६ वर्षसम्मको अवस्थामा उनले सबै ग्रन्थ लेखे। बदरिकाश्रामबाट शंकर प्रयाग आए र त्यहाँ कुमारिलभट्टसँग उनको भेट भयो। कुमारिलभट्टको भनाइअनुसार प्रयागबाट माहिष्मती (महेश्वर)

नगरमा मण्डन मिश्रका साथ शास्त्रार्थको लागि आए। त्यहाँ मण्डन मिश्रको घरमा ढोका बन्द भएको कारण योगबलबाट उनि आगनमा पुगे, जहाँ मण्डन मिश्र श्राद्ध गरिरहेका थिए र शास्त्रार्थ गर्नको लागि भने। त्यो शास्त्रार्थमा मध्यस्थ बनिन् मण्डन मिश्रकी विदुषी पत्नी भारती। अन्तमा मण्डन मिश्रको पराजय भयो र उनले शंकराचार्यको शिष्यत्त्व ग्रहण गरे र यहीबाट अगाडी बढी सुरेश्वराचार्य नामबाट प्रसिद्ध भए। भनिन्छ की! भारतीले पतिले हारेपछि स्वयं शंकराचार्यसँग शास्त्रार्थ गरिन् र कामशास्त्र-सम्बन्धी प्रश्न सोधिन् जसको लागि शंकराचार्यले योगबलबाट मृत राजा अमरूकको शरीरमा प्रवेश गरी काम शास्त्रको शिक्षा ग्रहण गर्नुपर्‍यो। पति सन्यासी भएपछि भारती ब्रह्मलोकमा जान उद्यत भइन् तर शंकराचार्यले उनलाई सम्झाई बुझाई श्रृगगिरी लिवा (पदवी) दिई उहि बसेर अध्यापनको काम गर्न प्रार्थना गरे। भनिन्छ की भारती द्वारा शिक्षा प्राप्त गरेको कारण नै शृंगेरी र द्वारकाको शारदा मठका शिष्य सम्प्रदाय भारतीको नामबाट प्रसिद्ध छन्।

मध्यभारतमा विजय प्राप्त गरेर शंकराचार्य दक्षिणतर्फ जानुभयो र महाराष्ट्रमा शैवो र कापालियोलाई परास्त गरे। एउटा धुर्त कापलिकले उनलाई बली चढाउनको लागि छल गरी उनको शिष्य भए। तर जब उ बली चढाउनको लागि तयार भएका थिए, पद्मपादाचार्यले उसलाई मारे। त्यस समयमा पनि शंकराचार्यको साधनामा अपूर्व प्रभाव देखियो। कापालिकको तरवारको धारको तल पनि उनी समाधिस्थ र शान्त बसिरहे। त्याहाँबाट छाडेर दक्षिणमा तुङभद्राको नदि किनारामा त्यहाँ एउटा मन्दिर बनाएर त्यसमा सारदादेवीको स्थापना गरे, यहाँ जुन मठ स्थापित भएको छ उनलाई शृंगेरी मठ भनिन्छ। सुरेश्वराचार्य यही मठमा आचार्य पदमा नियुक्त भए। यहि समयमा शंकराचार्य वृद्ध आमाको मृत्यूको नजिक जानेर घरमा फर्कनु भयो र आमाको अन्त्यष्टिक्रिया गर्नुभयो। भनिन्छ की आमाको इच्छाअनुसार यीनले प्रार्थना गरेर उनले विष्णुलोकमा पठाइदिए। त्यहाँबाट उनी शृंगेरी आए र उनले गोवर्धनमठको स्थापना गरी पद्मपादाचार्यलाई त्यहाँको अधिपति नियुक्त गरिदिए। यीनले चोल र

पाण्ड्य देशका राजाको सहायताबाट दक्षिणका शाक्त, गाणपत्य र कापालिक सम्प्रदायको अनाचारलाई हटाइदिए। यस किसिमले दक्षिणका सबै ठाउँमा धर्मको झण्डा फहराए र वेदान्तको महिमा घोषणा गरी यी फेरी उत्तर भारततर्फ लागे। बाटोमा केहि दिन बरारमा बसी यी उज्जैन आए। त्यहाँ यीनले भैरवको भिषण साधनाको बन्द गरे। त्यहाँबाट उनी गुजरात गए र द्वारकामा एउटा मठ स्थापित गरेर आफ्नो शिष्य हस्तामलकाचार्यलाई आचार्य पदमा नियुक्त गरे। फेरी गांगेय प्रदेशका पण्डितलाई पराजय गरेर कस्मिरको शारदाक्षेत्र पुगे तथा त्यहाँका पण्डितलाई पराजित गरेर आफ्नो मत स्थापना गरे। फेरी त्यहाँबाट आचार्य आसामको कामरूप आएर त्यहाँका शैवोहरूसँग शास्त्रार्थ गरे। त्यहाँबाट फेरी बदरिकाश्रम फिर्ता आई त्यहाँ ज्योतिर्मठको स्थापना गरी तोटकाचार्यलाई मठाधिश बनाए। त्यहाँबाट यी केदारक्षेत्रमा आए र यहीबाट केहि दिनपछि सिधै देवलोक गए।

यो त शंकराचार्यले लेखेका लगभग २७२ ग्रन्थ भनिएको छ तर यो भन्न कठिन छ कि यी सबै उनैले लेखेका हुन्। यस्तो अनुमान गरिन्छ कि यिनिमध्ये केहि आचार्यद्वारा रचिएका पछिका छन्। जुन पछि शंकराचार्यको उपाधि धारण गरेकाहरू छन् र जसले आफ्नो पुरा नाम दिएनन् जुन मुख्य मुख्य ग्रन्थहरू यी हुन, ब्रह्मसुत्र भाष्य, उपनिषद (ईश, केन, कठ, प्रश्न मुण्डक, माण्डुक्य, ऐतरेय तैतरिय, छान्दोग्य, वृहदाराण्यक, नृसिंहपूर्वतापनीय, श्वेताश्वर इत्यादि) भाष्य, गीताभाष्य, विष्णुसहस्त्रनामभाष्य, सनत्सुजातियभाष्य, हस्तामलक भाष्य, ललितात्रिशतिभाष्य, विवेकचूडामणि, प्रवोधसुधाकर, उपदेशसाहस्त्री, अपरोक्षानुभूति, शतश्लोकी, दशश्लोकी, सर्ववेदान्तसिद्धान्तसारसंग्रह, वाक्सुधा, पंचीकरण, प्रपंचसारतन्त्र, आत्मबोध, मनीषापंचक, आनन्दलहरीस्तोत्र इत्यादि।

## विवेक-चूडामणिको संक्षिप्त परिचय

आचार्यद्वारा रचित यद्यपी साना ठुला सयौँ ग्रन्थ छन् र पनि विवेक चूडामणि साधना र संक्षिप्तमा संम्यक ज्ञान उपलब्धीको दृष्टिबाट सर्वोत्तम

छ। यसको अनुसार मनुष्य जन्म पाएर संसारलाई विलोप गरेर सर्वत्र शुद्ध, भगवद्-दृष्टि पाएर सर्वथा जीवमुक्त भएर कैवल्य प्राप्ति नै सर्वोत्तम सिद्धि हो यही कुरालाई उनले गीताभाष्य, ब्रह्मसुत्रभाष्य आदिमा विस्तारसँग प्रतिपादित गरेका छन्। आचार्य भन्दछन् की यो अवस्था अनन्त जन्मको पुण्य बाहेक प्राप्त हुँदैन-

**मुक्तिर्नो शतकोटिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते॥**

(वि०चू०म० २)

यही कुरा गीतामा भगवान् कृष्ण पनि भन्नु हुन्छ-

**अनेकजन्मसंसिद्धस्ततो याति परां गतिम्॥**

(गीता ६।४५)

साधनाको दृष्टिबाट भगवत्कृपाको द्वारा मोक्षको इच्छा र तदर्थ प्रयत्न र सत्संगको प्राप्ति यी तीन दुर्लभ वस्तु हुन्। यी बाट विवेक प्राप्ति गरेर जीवनमुक्तिको उपलब्ध हुन्छ। आचार्यको वचन छ -

**दुर्लभं त्रयमेवैतद् देवानुग्रहहेतुकम्।**
**मनुष्यत्वं मुमुक्षुत्वं महापुरुषसंश्रयः॥**

(वि०चू०म० ३)

गोश्वामी तुलसीदासको रचनामा यसको स्पष्ट प्रभाव देखिन्छ-

**बिनु सत्संग बिबेक न होई। राम कृपा बिनु सुलभ न सोई॥**
**बिनु सत्संग भगति नहिं होई। ते तब मिलहिं द्रवै जब सोई॥**
**सत्संगति मुद मंगल मूला। सोइ फल सिधि सब साधन फूला॥**
**बड़े भाग मानुष तन पावा। सुर दुर्लभ पुरान श्रुति गावा॥**
**बड़े भाग पाइअ सत्संगा। बिनहिं प्रयास होइ भव भंगा॥**

यहाँसम्म लाग्दछ कि '**वन्दे बोधमयं नित्यं गुरूं शङ्कररूपिणम्**' इत्यादिमा निदर्शनालंकारबाट गोश्वामीजीले शंकरावतार शंकराचार्यको नै वन्दना गरेका हुन र उनको सबै साहित्यमा आचार्यको ठुलो (धेरै) प्रभाव छ र यही कारणबाट भाषा हिन्दि हुने, भाव गम्भिर हुनुको कारण मानसको विश्वमा सर्वाधिक प्रचार भएको हो।

विवेक चूडामणि नित्य समाधिको लागि वैराग्यकको नै सर्वोकृष्ट

साधन भनिएको छ। आचार्य भन्दछन् -'**अत्यन्तवैराग्यवतः समाधिः**' अर्थात् अत्यन्त विरक्तलाई तत्काल समाधि सिद्ध हुन्छ। गीतामा पनि यहि भाव व्यक्त भएको छ।

**तदा गन्तासि निर्वेदं श्रोतव्यस्य श्रुतस्य च॥**
**श्रुतिविप्रतिपन्ना ते यदा स्थास्यति निश्चला।**
**समाधावचला बुद्धिस्तदा योगमवाप्स्यसि॥**

(गीता २।५२-५३)

विवेक चुडामणिको सबै उपयोगिताको हृदयंगम गर्नको लागि ग्रन्थको पर्यावलोकन (हेर्नु) आवश्यक छ। उसबाट विस्तार विस्तार आफूमा रसपूर्वक मनन गरेर पुरा लाभ उठाउनुहोस् यहि निवेदन छ।

## मतवाद ( मतभिन्नता )

आचार्य श्रीशंकराचार्य अद्वैत सिद्धान्तको प्रधान आचार्य मात्र होइनन् बरू एक युग प्रवर्तक पनि थिए। उनको समयमा भारत वर्ष बौद्ध, जैन एंव कापालियाको प्रभावबाट पूर्णतया प्रभावित भएको थियो। वैदिकधर्मको सूर्य अस्ताउन लागि रहेको थियो। व्यक्तिहरू वैदिक कर्म र उपासनाबाट उदासिन भएर धेरै चाँडै सुगत, गौतमबुद्ध र महावीरको छत्रछायाको शरण लिन गइरहेका थिए। यस्तो कठिन अवस्थामा उनि प्रकट भएर डुब्न लागेको वैदिकधर्मको पुर्नरुद्धार गरे। आफ्नो छोटो आयुमा उनले जुन अलौकिक कार्य गरे त्यो धेरै विस्मयजनक (बिर्सन नसकिने) छ। उनले जुन सिद्धान्तको स्थापना गरे त्यसमा संसारका ठुला भन्दा ठुला विचारक विद्वान र दार्शनिक पनि मन्त्रमुग्ध भएका छन्। यसमा कुनै शंका छैन कि उनी दार्शनिक जगतमा सबैभन्दा धेरै देदीप्यमान रत्न हुन्। ठुलठुला विद्वानले उनलाई 'दार्शनिकसार्वभौम' भनेर सम्मानित गरेका छन् हामी यहाँ उनको सिद्धान्तको यत्किंचित दिग्दर्शन गराउनेलाई प्रयत्न गर्दैछौं।

**आत्मा र अनात्मा**- भगवान् शंकरले ब्रह्मशुत्रको भाष्य लेख्ने समय सबैभन्दा पहिला आत्मा र अनात्माको विवेचना गर्नुभएको छ। यदि सूक्ष्म दृष्टिबाट हेरिएमा सम्पूर्ण प्रपंचलाई दूई मुख्य विभागमा विभाजन गर्न सकिन्छ। द्रष्टा र दृश्य। यीनमा एउटा तत्त्व छ जसले सम्पूर्ण प्रतितीयको

अनुभव गर्दछ र दोश्रो तत्त्व त्यो हो, जुन अनुभवको विषय हो। यसमा समस्त प्रतितियको चरम साक्षीको नाम 'आत्मा' हो तथा जुन केहि उनको विषय हो उ सबै 'अनात्मा' हो। आत्मतत्त्व नित्य, निश्चल, निर्विकार, असंग, कुटस्थ एक र निर्विशेष हो । बुद्धिबाट लिएर स्थुल भूत पर्यन्त जति पनि प्रपंच छन् त्यसको आत्मासँग कुनै सम्बन्ध छैन। जीव अज्ञानको कारण नै शरीर र इन्द्रियहरूबाट आफ्नो सम्बन्ध स्वीकार गरेर आफूलाई अन्धो-बहिरो, मूर्ख-विद्वान, सुखी-दु:खी तथा कर्ता-भोक्ता मान्दछ। यसप्रकार बुद्धि आदिको साथ जुन आत्माको तादाम्य भइरहेको छ, त्यसलाई आचार्यले 'अध्यास' शब्दबाट बताउनुभएको छ। आचार्यको सिद्धान्तअनुसार त सम्पूर्ण प्रपञ्चको सत्यत्त्वप्रतीति अध्यास मायाकै कारण हो। यसैलाई अद्वैतवाद अध्यासवाद या मायावाद पनि भनिन्छ। यसको तात्पर्य यही हो की जति दृश्यवर्ग छन् ती सबै मायाको कारण नै विभिन्न प्रकारका प्रतीति हुन्छ, वस्तुत: ती सबै एक अखण्ड, शुद्ध चिन्मात्र नै हो।

**ज्ञान र अज्ञान**- सम्पूर्ण विभिन्न प्रतीतियको स्थानमा एक अखण्ड सच्चिदानन्दको अनुभव गर्नु नै 'ज्ञान' हो तथा त्यो सर्वाधिष्ठानमा दृष्टि नदिएर भेदमा सत्यत्वबुद्धि गर्नु नै 'अज्ञान' हो। जसरी विभिन्न प्रकारको गहना तत्त्वदृष्टिबाट सुन मात्र नै हो, विभिन्न प्रकारका माटोबाट बनेका भाडा केवल माटोको मात्र नै हुन्छ तथा तरंग र भूमरी पानीबाट अभिन्न नै हुन्छन्, त्यस्तै प्रकार यी अनेकविधभेदसंकुलित (विभिन्न फरक जोडिएका) संसार केवल शुद्ध परब्रह्म नै हो, त्यो भन्दा भिन्न कहि कुनै वस्तु छैन र त्यही आफ्नो आत्मा हो। यसप्रकार अभेदबोध नै 'ज्ञान' भनिएको छ। जबसम्म यस्तो बोध हुँदैन तवसम्म जीव आगमनको चक्रबाट मुक्त हुँदैन, यस्तो बोध भएर नै उनको दृष्टिमा जगतको अत्यन्ताभाव हुन जान्छ र त्यो दोश्राको दृष्टिमा शरीर रहेर पनि स्वंय मुक्त हुन जान्छ।

**साधन**- भगवान् आचार्यले श्रवण, मनन र निदिध्यासनलाई ज्ञानको साक्षात् साधन स्वीकार गरेका छन्। तर यीनको ब्रह्मतत्त्वको जिज्ञासा

हुँदामा मात्र हुन्छ तथा जिज्ञासाको उत्पत्तिमा प्रधान सहायक दैवी सम्पत्ति हो। आचार्यको धारणा छ कि जुन मनुष्य विवेक, वैराग्य, शम आदि षटसम्पत्ति र मुमुक्षुता यी चार साधनबाट सम्पन्न छ उसको चित्त शुद्धि भएर जिज्ञासा हुन सक्छ। यस प्रकारको चित्त शुद्धिको लागि निष्काम कर्मानुष्ठान धेरै उपयोगी हो।

**भक्ति**-भगवान् शंकरले भक्तिलाई ज्ञान उत्पत्तिको प्रधान साधन मान्नु भएको छ, फलरूपबाट ज्ञान हुने नै स्वीकार गर्नुहुन्छ। भक्तिको लक्षण गर्दै उनी विवेक चुडामणिमा भन्दछन्- '**स्वस्वरूपानुसंधानं भक्तिरित्यभिधियते**' अर्थात् आफ्नो शुद्ध स्वरूपको स्मरण गर्नु नै 'भक्ति' भनिएको छ। आत्मा जिज्ञासुको लागि वस्तुतः प्रधान 'भक्ति' नै हो फेरी पनि उनले सद्गुण उपासनाको उपेक्षा गरेका छैनन्। प्रवोध सुधाकरमा त यहाँसम्म लेख्नुभएको छ कि भगवान् श्रीकृष्णको चरणमा भक्तिको विना चित्त शुद्ध हुन नै सक्दैन। यसको बाहेक उनले जुन धेरै भक्तिस्तोत्र लेखेका छन् त्यसमा पनि उनीबाट सगुण भक्तिको राम्रो परिचय पाइन्छ। प्रवोधसुधाकरमा भएको श्लोकबाट त यो सिद्ध हुन्छ कि आचार्यपाद भगवान् श्रीकृष्णको अनन्य भक्त थिए र उनले वनभोजलिलाको ध्यान गर्दथे।



॥ श्रीहरिः ॥

# गीताप्रेसद्वारा प्रकाशित चित्रकथाएँ

868 **भगवान् सूर्य**
1156 **एकादश रुद्र ( शिव )**
869 **कन्हैया** (बँगला, तमिल, कन्नड़, मराठी, तेलुगु, गुजराती, ओडिआ भी)
870 **गोपाल** (बँगला, तमिल, तेलुगु, गुजराती, मराठी, कन्नड भी)
871 **मोहन** (बँगला, तमिल, तेलुगु, कन्नड़, अंग्रेजी, मराठी, गुजराती, ओडिआ भी)
872 **श्रीकृष्ण** (बँगला, तमिल, तेलुगु, मराठी, कन्नड़ भी)
1018 **नवग्रह**—(बँगला भी) चित्र एवं परिचय
1016 **रामलला** (तेलुगु, अंग्रेजी भी)
1116 **राजाराम** (तेलुगु, बँगला भी)
862 **मुझे बचाओ, मेरा क्या कसूर ?**
1017 **श्रीराम—**
1394 **भगवान् श्रीराम** (पुस्तकाकार)
1418 **श्रीकृष्णलीला-दर्शन** (पुस्तकाकार)
1278 **दशमहाविद्या** (बँगला भी)
829 **अष्टविनायक** (ओडिआ, मराठी, गुजराती भी)
1214 **मानस-स्तुति-संग्रह**
1343 **हर-हर महादेव** (बँगला भी)
1215 **प्रमुख देवता**
1216 **प्रमुख देवियाँ**
1442 **प्रमुख ऋषि-मुनि** (बँगला भी)
204 **ॐ नमः शिवाय** (द्वादश ज्योतिर्लिंगोंकी कथा) (बँगला, ओडिआ, कन्नड़ भी)
787 **जय हनुमान** (तेलुगु, ओडिआ भी)
779 **दशावतार** (बँगला भी)
1443 **रामायणके प्रमुख पात्र** (तेलुगु भी)
1420 **पौराणिक देवियाँ**
205 **नवदुर्गा** (तेलुगु, गुजराती, असमिया, कन्नड़, अंग्रेजी, ओडिआ, बँगला भी)
1307 **नवदुर्गा**—पॉकेट साइज
1647 **देवीभागवतकी प्रमुख कथाएँ**
1646 **महाभारतके प्रमुख पात्र**
1794 **सत्यप्रेमी हरिश्चन्द्र**
1488 **श्रीमद्भागवतके प्रमुख पात्र** (तेलुगु भी)
1537 **श्रीमद्भागवतकी प्रमुख कथाएँ**
1538 **महाभारतकी प्रमुख कथाएँ**
1032 **बाल-चित्र-रामायण**
537 **बाल-चित्रमय बुद्धलीला**
190 **बाल-चित्रमय श्रीकृष्णलीला**
194 **बाल-चित्रमय चैतन्यलीला** (ओडिआ, बँगला भी)
651 **गोसेवाके चमत्कार** (तेलुगु, तमिल भी)